# Shri Siddhantha Shikhamani

## Parayana text

Written by : Sri Shivayogi Shivacarya

Script : Nepali / नेपाली





Concept & Inspiration By : Sri Kashi Jagadguruji



Publication of

**Shaiva Bharathi Shodha Pratishthana**

**Shri Kashi Peeth**

# D35/77, Jangamawadimath,
Jangamawadi, Varanasi 221 001

CC-0. Jangamwadi Math Digital Collection.

शोधप्रकाशन ग्रंथमाला –

श्रीशिवयोगिशिवाचार्यविरचितः

# श्रीसिद्धान्तशिखामणिः

( नेपाली भावानुवादेनसह )

*प्रेरकः*

काव्य-सर्वदर्शनतीर्थ, वेदान्ताचार्य, विद्यावारिधि, विद्यावाचस्पति

श्रीजगद्गुरु विश्वाराध्य ज्ञानसिंहासनाधीश्वर

**श्री १००८ जगद्गुरू डॉ. चंद्रशेखर शिवाचार्य महास्वामीजी**

जंगमवाडी मठ, श्रीक्षेत्र काशी, वाराणसी

*भावानुवादकः*

**आचार्य हरिप्रसाद अधिकारी**

**सम्पूर्णानन्द संस्कृत विश्वविद्यालय, वाराणसी ।**

**शैवभारती शोधप्रतिष्ठान**

जंगमवाडी मठ, वाराणसी – २२१ ००१

CC-0. Jangamwadi Math Digital Collection.



**शैवभारती शोध प्रतिष्ठान के संस्थापक**
**श्रीकाशीविश्वाराध्य ज्ञानसिंहासनाधीश्वर**
**श्री १००८ श्री डॉ चन्द्रशेखर शिवाचार्य महास्वामीजी**
**का**

## शुभाशीर्वचन

श्रीसिद्धान्तशिखामणि अट्ठाईस शैवागमों पर आधारित वीरशैव धर्मग्रन्थ है। जगद्गुरु रेणुकाचार्य और अगस्त्य महर्षि के संवाद रूप में विद्यमान इस ग्रंथ की रचना महान् योगी और कवि श्री शिवयोगि शिवाचार्य ने की है। इस ग्रन्थ में समस्त मानव जाति के मनोविकास के महामार्ग बताया गया है। इसमें बातये गये एक सौ एक स्थल मनोविकास के उत्तरोत्तर अभिवृद्धि की सीढ़ियाँ हैं। इस ग्रन्थ के पारायण और स्वाध्याय से प्रत्येक जीव भोग और मोक्ष की प्राप्ति कर सकता है। देश-विदेश के सभी शिवभक्तों को इस ग्रंथ का प्रयोजन मिले इस उद्देश्य से इसका अनुवाद कार्य प्रारंभ किया गया। सहृदय विद्वानों के सहयोग से एक ही वर्ष में कन्नड, मराठी, तेलुगु, मलयालम, हिन्दी, अंग्रेजी, उड़िया, गुजराती, नेपाली एवं रशियन् भाषाओं में अनुवाद कार्य पूर्ण हुआ और अनेक ग्रंथ शैवभारती शोध प्रतिष्ठान के द्वारा प्रकाशित भी हो गये।

**अभी हम नेपाली भाषानुवाद के साथ श्रीसिद्धान्तशिखामणि का शिर्वापण करते हुए अपार हर्ष का अनुभव कर रहे हैं। सम्पूर्णानन्द संस्कृत विश्वविद्यालय के आचार्य डॉ. हरिप्रसाद अधिकारी ने इस कार्य को बड़ी श्रद्धा से पूर्ण किया है। रशियन् भाषा के अनुवाद के बाद विदेशी भाषानुवाद की शृंखला में यह दूसरा ग्रंथ है।**

CC-0. Jangamwadi Math Digital Collection.

नेपाल के भक्तपुर में काशी जंगमवाड़ीमठ की एक शाखा मठ विद्यमान है। यह मठ छठी शताब्दी से पहले का है। छठी शताब्दी में नेपाल नरेश इस मठ के लिए भूदान देकर दान-पत्र दिया है। शिलापट पर उत्कीर्ण वह दानशासन नेपाल के जंगममठ में आज भी विद्यमान है। नेपाल के भक्तपुर में सौ से अधिक जंगम परिवार हैं, वे सभी काशी जंगवाड़ीमठ से दीक्षा-शिक्षा ग्रहण करते आये हैं। नेपाल में जंगम प्रतिष्ठान भी है, जिसका अध्यक्ष वीरशैवभाष्यकार श्री भरतमणि जंगम हैं। उन्हीं के प्रबल इच्छा के कारण श्रीसिद्धान्तशिखामणि का नेपाली भाषा में अनुवाद कराया है।

इस ग्रंथ के अनुवादक आचार्य हरीप्रसाद अधिकारी जी संस्कृत भाषा के प्रचार-प्रसार के लिए अपने आपको समर्पित किये हुए हैं। निरन्तर संस्कृत भाषा और शास्त्रों के निरपेक्ष भाव से पठन-पाठन में अपने को सदा व्यस्त रखते हैं। देश-विदेश में अनेक छात्र आपके शिष्य बन चुके हैं। आप से प्रभावित मुस्लिम समाज के भी छात्र संस्कृत शिक्षा पा रहे हैं। यह आपकी विशेष उपलब्धि मानी जायेगी। आपने श्रीसिद्धान्तशिखामणि का नेपाली भाषा में अनुवाद करके नेपाल के सभी हिन्दू समाज के विशेषरूप से वहाँ के सभी जंगमों को इस ग्रंथ के स्वाध्याय का सुविधा प्राप्त कराया है। हम महसूस करते हैं कि इस ग्रंथ से नेपाल देश में वीरशैव धर्म-दर्शन का और शिवयोग का विशेष प्रचार-प्रसार होगा।

हम भगवान् विश्वनाथ जी, माता अन्नपूर्णा जी तथा श्रीजगद्‌गुरु विश्वाराध्य जी से प्रार्थना करते हैं कि आचार्य हरिप्रसाद अधिकारी जी का स्वास्थ्य सदा उत्तम रहे और आपसे संस्कृत और संस्कृती की सेवा होती रहे।

अभी महाशिवरात्रि के पर्वपर इस ग्रंथ का सांकेतिक रूप से शिवार्पण सम्पन्न हुआ है। लेकिन ७.७.२०१४ से ११.११.२०१४ तक होने वाले काशीपीठ में पीठारोहण के ''**रजत महोत्सव**'' में इसका विधिवत् शिवार्पण श्रीजगद्‌गुरु पंचाचार्यों के अमृत कर-कमलों द्वारा होगा। इतना ही नहीं पशुपतिनाथ के असीम अनुकम्पा से नेपाल में भी इस ग्रंथ का शिवार्पण कार्यक्रम सम्पन्न होगा। नेपाल में इस कार्यक्रम का आयोजन करने वाले जंगम प्रतिष्ठान के अध्यक्ष श्री भरतमणि जंगम तथा सभी सदस्यों को भी अनंत मंगलाशीर्वाद।

श्रीभरतमणि जंगम इस ग्रंथ के लिए अपना सम्मति लिखकर अपनी श्रद्धासुमन समर्पित किया है। अत: पुन: एक बार आपको मंगलाशीर्वाद।

इस ग्रंथ के मुद्रण कार्य में अपना अमूल्य योगदान के दिये हुए चिदानन्द ओ. हिरेमठ, खसगी, डॉ. जी. सी. केण्डदमठ तथा सभी नेपाली भक्तों को इस ग्रंथ के मुद्रण दानी-भक्तों को भी अनंत मगंलाशीर्वाद।

*इत्याशीष:*



CC-0. Jangamwadi Math Digital Collection.

## अनुवादकको तर्फबाट

भगवदिच्छाले नै यस ग्रन्थको नेपालीभाषामा अनुवाद गर्ने गुरुतर दायित्व आइलाग्यो । पन्साउन नमिल्ने गरि । नैतिक बाध्यतावश कार्य प्रारम्भ भयो । जस्को प्रेरणाले प्रारंभ भएको थियो उनकै कृपाले पूर्ण पनि भयो । श्रीसिद्धान्तशिखामणि ग्रन्थ वीरशैवसिद्धान्तको आकर ग्रन्थ हो । भगवान् शिवलाई मूलतत्त्व मान्ने यस ग्रन्थमा अन्य सबै वैदिक सम्प्रदायहरू प्रति पनि सद्भाव व्यक्त गरिएको छ । यस सिद्धान्तको वैदिकत्व एवं आस्तिकत्वलाई प्रमाणित गर्न निम्न कथन पर्याप्त छ –

**सांख्यं योगः पाञ्चरात्रं वेदाः पाशुपतं तथा ।**
**एतानि मानभूतानि नोपहन्यानि युक्तिभिः ।।**

अर्थात् सांख्यदर्शन, योगदर्शन, पाञ्चरात्र (वैष्णव दर्शन), वेददेखि अविरुद्ध या वेदानुमोदित कुनै पनि मत, पाशुपतसिद्धान्त यी सबै दर्शनहरू प्रामाणिक हुन् । बुद्धिप्रयोगद्वारा, युक्तिद्वारा अथवा अरुकुनै कारणले पनि इनको खण्डन गर्नु हुँदैन । यदि सबै दर्शनहरूले यति प्रतिज्ञा गरेका भये दार्शनिकहरूमा यति सारो कटुता हुने थिएन । यसग्रन्थका पाँचौं परिच्छेदमा स्पष्टरूपले भनिएको छ–

**वेदाः प्रधानं सर्वेषां सांख्यादीनां महामुने ।**
**वेदानुसारणादेषां प्रामाण्यमिति निश्चितम् ।।**

अर्थात् वीरशैव सिद्धान्तले वेदप्रामाण्यलाई पूर्णतः स्वीकारेको छ । यद्यपि यस विषयमा अनेक मतभेद हुन सक्छन् । हाम्रो सिद्धान्त नै असली वैदिक सिद्धान्त हो भन्ने पनि धेरै छन् तथापि उपर्युक्त उदाहरणबाट वीरशैव सिद्धान्तले अवैदिकबाटो समात्यो भन्न चैं मिल्दैन ।

हाम्रो समाजमा समस्त आगम परंपरानै अवैदिक हो भन्ने विद्वान् हरूको पनि कमी छैन । जे होस्, यी सबै सिद्धान्त अथवा सम्प्रदायहरू सनातन भारतीय चिन्तन परंपरारूपी झर्नाहरू हुन् । सबैको आ–आफ्नो छुट्टै महत्त्व छ । विशेषता छ । मात्र दृष्टिलाई विशाल बनाएर हेर्ने आवश्यकता छ ।

यस प्रकारका मतमतान्तरहरू पहिले पनि थिये, आज पनि छन्, भविष्यमा पनि रहने छन् । जबर्जस्ती काँटछाँट गरेर बनाइएको बगैंचा भन्दा प्राकृतिक वन निश्चयनै रमणीय तथा स्पृहणीय हुन्छ । यस तथ्यलाई इंगित गर्दै आचार्य पुष्पदन्तले भनेका छन् –

**त्रयी सांख्यं योगः पशुपति मतं वैष्णवमिति,**
**प्रभिन्ने प्रस्थाने परमिदमदः पथ्यमिति च ।**
**रूचीनां वैचित्र्यादृजुकुटिलनानापथजुषाम्,**
**नृणामेको गम्यस्त्वमसि पयसामर्णव इव ।।**

CC-0. Jangamwadi Math Digital Collection.

कुनै पनि मत या सिद्धान्त यदि मनुष्यप्रकृति अनुरूप छैन भने त्यसले स्थायित्व ग्रहण गर्न सक्दैन । यस दृष्टिले विचार गर्दा शैव सिद्धान्त अत्यन्त स्पृहणीय र वरणीय देखिन्छ । आज पनि समाजको अत्यन्त विपन्न वर्गदेखि लिएर आभिजात्य वर्गसम्म यस सिद्धान्तले स्थान बनाएको छ । किन कि यस्मा कुनै प्रकारको भेदभाव छैन । कुनै पनि तत्त्वजिज्ञासु मानव यसको अधिकारी हुन सक्छ । सर्वत्र शिवमयता देख्नु नै यसको परमप्रयोजन हो । हरि, विष्णु, शिव आदि विभिन्न नामहरू एउटै परब्रह्मका हुन् । हरि नै शिव हुन् शिव नै हरि हुन् । प्रमाणस्वरूप विष्णुसहस्रनामको श्लोक छ –

**सर्वः शर्वः शिवः स्थाणुर्भूतादिर्निधिरव्ययः ।**
**सम्भवो भावनो भर्ता प्रभवः प्रभुरीश्वरः ।।**

यसैगरि श्रीमद्भगवद्गीतामा श्रीकृष्णले आज्ञा गर्नु भएको छ –

**यो यो यां यां तनुं भक्तः श्रद्धयार्चितुमिच्छति ।**
**तस्य तस्याचलां श्रद्धां तामेव विदधाम्यहम् ।।**

अर्थात् जुन जुन भक्तले जुन जुन भगवत्स्वरूपको श्रद्धापूर्वक पूजन अर्चन गर्न चाहन्छ, त्यस त्यस भक्तलाई त्यसैप्रकारको श्रद्धा म प्रदान गर्दछु । अर्थात् जहाँबाट गएपनि पुगिने ठाँऊ एउटै हो । वर्तमान समयमा यसै कुरालाई ठीक संग बुझ्ने आवश्यकता छ । साथै यो शोच्य विषय छ कि यस दुर्लभ परिमित जीवनलाई व्यर्थमा निन्दा स्तुति गरेर बिताउने हो अथवा के ही सकारात्मक मानवहितकारी लोक–परलोक कल्याणकारी कार्य गर्ने हो?

भगवदिच्छाले नै होला एक दिन **श्री जगद्गुरुचन्द्रशेखरशिवाचार्य महास्वामीजीले** यस सिद्धान्तशिखामणि ग्रन्थको नेपालीमा अनुवाद गर्ने आज्ञा प्रदान गर्नु भयो । संकोच तथा शिष्टाचारवश समयको अभाव हुँदा हुँदै पनि यो कार्य स्वीकार गरियो । अनिच्छापूर्वक थालिएका यस कार्यको उपसंहार परमप्रसन्नताका साथ पूर्ण भयो । भगवान् आशुतोषको कृपाले वैष्णवसंस्कारयुक्त व्यक्तिबाट शैवसिद्धान्तको आकर ग्रन्थको कार्य आनन्दपूर्वक सम्पन्न हुनु ठुलै घटना हो । जति जति यस ग्रन्थको अनुवाद कार्य अघि बढ्यो त्यति त्यति नवबोधजागरण भयो । यसै ग्रन्थमा निगमागमसहित पुराण–स्मृति तथा श्रीमद्भगवद्गीताको दर्शन भयो । यसको भाषा, छन्द, शैली, अलङ्कार आदिका कारणले पनि यो ग्रन्थ संस्कृत साहित्यको अमूल्यनिधि भएको थाहा लाग्यो । साथै यसको श्रवण, मनन र निदिध्यासनले स्थितप्रज्ञता अथवा बोधिसत्त्वता निश्चितरूपले प्रतिष्ठित हुने छ भन्ने दृढविश्वास पनि उत्पन्न भयो ।

यसकार्यले शैवसिद्धान्तका साथै नेपाली साहित्यको पनि श्रीवृद्धि अवश्य गर्ने छ । अन्तमा यस अनुवाद कार्यका माध्यमबाट नवदृष्टि प्रदान गर्ने जङ्गमबाड़ी वाराणसीका मठाधीश स्वामी शिवाचार्य प्रति कृतज्ञता प्रकट गर्दै मध्यस्थताको कार्यमा संलग्न काशी पण्डित सभाका महामन्त्री **डॉ.विनोदराव पाठक**ज्यू प्रति पनि सद्भाव प्रकट गर्न चाहन्छु ।

यस लघु कार्यबाट नेपाली समाजको किञ्चित्मात्र पनि भलो हुन सके मैले आफ्नु परिश्रम सफल मान्ने छु । अन्तमा–

CC-0. Jangamwadi Math Digital Collection.

जागौं सारा सुजन अब लौ सत्यको मार्ग खोजौं
छोड़ी मैला व्यसन जगका नित्य सन्मार्ग रोजौं ।
आयौं हामी पृथिवितलमा सत्यको गर्न सेवा,
तस्मात्लागौं परिहितमहाँ छोडिद्यौं कार्य पेवा ।।

२६/०२/२०१४, बुधवार
फाल्गुन कृष्ण द्वादशी
(महाशिवरात्रिको पूर्व संध्या)

**सज्जनहरूको सेवक**

हरिप्रसादअधिकारी

**हरिप्रसाद अधिकारी**
सम्पूर्णानन्द संस्कृत विश्वविद्यालय
वाराणसी

CC-0. Jangamwadi Math Digital Collection.

# विषयवस्तु-संक्षेप

**प्रथम-तृतीयपरिच्छेद-**

ग्रन्थको निर्विघ्नतापूर्वक परिसमाप्तिका लागि प्रथमपरिच्छेदमा १२ श्लोक सम्म मङ्गलाचरण गरि त्यसपछि शिवयोगी शिवचार्यको वंशवर्णन गरिएको छ । यस क्रममा शिवयोगी प्रथमका पुत्र मुद्ददेव उनका पुत्र सिद्धनाथ सिद्धनाथका पुत्र शिवयोगी द्वितीय उत्पन्न भये । यिनी वीरशैव सिद्धान्तका प्रवर्तक तथा विस्तारक भये । सिद्धान्त शिखामणि नामक महनीय ग्रन्थ यिनकै रचना हो ।

यस सिद्धान्त अनुसार ब्रह्म सच्चिदानन्दरूप परिच्छेदातीत एवं सनातन छ । सृष्टि भन्दा पहिले यो समस्त विश्व उसमै लीन रहन्छ । उसको शक्ति पनि उसमा समवाय सम्बन्धले सधैं विद्यमान रहन्छ । ती परमेश्वरले सर्वप्रथम ब्रह्माको सृष्टि गरेर उनलाई सबै विद्याहरूले अलङ्कृत गरे, साथै सृष्टि गर्ने तरिका पनि सिकाये। उदाहरणार्थ प्रारंभमा स्वयं शिवले नै सर्वव्यापी शक्तिमान् प्रमथगणहरूको सृष्टि गरे। ती मध्येमा रेणुक र दारुक यी दुई गण शिवका परमप्रिय भये ।

एक दिन भगवान् शिव कैलास पर्वतमा विराजमान हुनुहुन्थ्यो । भगवती उमाका साथै उनको पूरा परिवार पनि शोभायमान भैरहेको थियो । सरस्वती, वेद, दिव्य कन्याहरू, दिव्य स्त्रीहरू, विघ्नेश्वर, नन्दी आदि गण तथा प्रमथगणहरू उनको सेवामा संलग्न थिये । साथै ब्रह्मा, इन्द्र आदि देवगण, वशिष्ठ आदि ऋषिगण, द्वादश आदित्य, अष्टवसु, एकादशरूद्र, राक्षस, दानवादिहरू पनि उनको सेवामा संलग्न थिये । भगवान् शिव पनि क्रमशः आफ्ना कृपाकटाक्षद्वारा सबैलाई कृतकृत्य गरिरहनु भएको थियो । यस्तै अवस्थामा भगवान् शिवले रेणुकलाई प्रसादरूपमा ताम्बूल समर्पित गर्नका लागि बोलाउनु भयो । शिवको आह्वान सुनेर रेणुकले अभिमान पूर्वक दारुकलाई नाघेर शिवका छेउमा जाने धृष्टता गरे । भगवान् शिवले यस्तो निन्दित आचरण देखेर रेणुकलाई भन्नु भयो - अरे दुर्बुद्धे! शिवभक्तहरूको उल्लंघन परम अनर्थको कारण हुन्छ । अतः मनुष्यजस्तै आचरण गरेकाले तिमी मनुष्ययोनिमा जाऊ । शिवको यस्तो आज्ञा पाएर भयभीत भएका रेणुकले मनुष्य योनिमा नपठाउनका लागि भगवान् शिवको प्रार्थना गरे । रेणुकद्वारा गरिएका प्रार्थनाले प्रसन्न भएर भगवान् शिवले आज्ञा गर्नु भयो - श्रीशैलपर्वतका उत्तरभागमा त्रिलिङ्गदेशमा सोमेश्वरनामको मेरो एक लिङ्ग छ । त्यस लिङ्गबाट तिम्रो प्राकट्य हुने छ । त्यस पछि तिमीले वेद-वेदान्त सम्मत वीरशैवशास्त्रको भूलोकमा स्थापना गर्ने छौ । यति भनेर भगवान् आफ्ना अन्तःपुरमा जानु भयो तथा रेणुकले निर्देश अनुसार यस पृथिवीमा अवतार लिये ।

CC-0. Jangamwadi Math Digital Collection.

**चतुर्थ-पञ्चमपरिच्छेदः -**

जहिले सोमेश्वर महादेवबाट रेणुकको प्रादुर्भाव भयो त्यति बेला त्रिलिङ्गदेशका सबै प्राणीहरू अत्यन्त तेजस्वी रेणुकलाई देखेर छक्क परे । त्यति खेर रेणुकको शरीर भस्म (खरानी) ले आच्छादित थियो । मस्तकमा त्रिपुण्ड्र शोभायमान थियो। हातमा योगदण्ड, भस्मपात्र र कमण्डलु धारण गरेका थिये । उनको यस्तो अद्भुतरूप देखेर त्यहाँका सन्तहरूले प्रश्न गरे – तपाँई को हुनुहुन्छ? यस्तो प्रश्न सुनेर रेणुकले भने – म भगवान् शिवको सहचर रेणुक हूँ । कुनै कारणले यस शिवलिङ्गबाट मेरो उत्पत्ति भयो । जैन, बौद्ध, चार्वाक आदि नास्तिकदर्शनहरूको खण्डन गरेर वीरशैवसिद्धान्तको स्थापना गर्नु मेरा अवतारको प्रयोजन हो ।

यति भनेर रेणुकाचार्य आकाशमार्गबाट मलयपर्वतस्थित अगस्त्य मुनिका आश्रममा पुगे । त्यो आश्रम अत्यन्त रमणीय तथा तपस्विहरूले परिपूर्ण ब्रह्मलोक समान थियो । त्यस आश्रमका मध्यमा चन्दनवृक्ष मुनि महर्षि अगस्त्य बसेका थिये । पिङ्गजटाधारी, त्रिपुण्ड्राङ्कित मस्तक भएका अगस्त्यमुनिका चारै तिर तपस्वी मुनिहरू विराजमान थिये । रेणुकाचार्यलाई आउँदैगरेको देखेर को कुन कार्यले आउँदैछ भन्ने कुरा दिव्यचक्षुद्वारा अगस्त्यमुनिले जाने । लोपामुद्राद्वारा ल्याइयेका जलादिले रेणुकाचार्यको पूजा गरेर अगस्त्य मुनि अर्का आसनमा विराजमान भये ।

यस पिछाडी अगस्त्यमुनि र रेणुकाचार्यका मध्येमा यस प्रकारको संवाद भयो–

**रेणुकाचार्यले भने -**

हे मुनिश्वर ! तपाँई महातेजस्वी हुनुहुन्छ, त्यस कारण तपाँईका नित्यनियमादिमा विघ्नको अलिकति पनि संभावना कसरी हुन सक्छ? तपाँइले विन्ध्याचल लाई निउराउनु भयो, समुद्रको पानी सुकाउनु भयो, वातापी राक्षसलाई आफ्ना जठराग्निले डडाई दिनु भयो, पहिले स्वामी कार्तिकेयले तपाँईलाई शिवधर्मको उपदेश गरेको थियो । अतः तपाँई परमशिवभक्त हुनुहुन्छ ।

**अगस्त्यमुनिले भने -**

म सदा मुनिहरूको आदरपात्र भयें । मैले तपाँईलाई रेणुकनामक गणेश्वरको रूपमा चिनें । म माथि कृपा गर्नका लागि नै तपाँई यस पृथ्वीमा अवतीर्ण हुनुभएको हो । म तपाँईका मुखबाट श्रुतिसम्मत शैवसिद्धान्त सुन्न चाहन्छु । अनेक आगमहरूको श्रवण गर्नाले मेरा मनमा सन्देह उत्पन्न भएको छ । अतः हे दिव्ययोगिन् ! तपाँई मलाई उक्त सिद्धान्त सुनाएर कृतकृत्य गरिदिनुहवस्।

**अगस्त्यका कुरा सुनेर आचार्य रेणुकले भने -**

हे अगस्त्यजी ! म तपाँईलाई शिवज्ञान को उपदेश गर्ने छु । **मनीषिहरूका रुचि भेद अनुसार, सांख्य, योग, पाञ्चरात्र, वेद, पाशुपत, आदि अनेकसिद्धान्तहरू प्रचलित**

CC-0. Jangamwadi Math Digital Collection.

छन् । **यी सबै प्रामाणिक दर्शन हुन् । इनको खण्डन गर्नु हुँदैन** । यो शैवतन्त्र उक्त सबै दर्शनहरूमा श्रेष्ठ छ। शैव पाशुपत सोम र लाकुल भेदले आगम चार प्रकारका छन् । यिनमा शैवागम वाम, दक्षिण, मिश्र, र सिद्धान्तभेदले चार प्रकारको छ । वाम आगम शक्तिप्रधान, दक्षिणआगम भैरवप्रधान, मिश्रागम सप्तमातृकापरक र सिद्धान्त वेदप्रधान हुन्छ। अतः शिवोपदिष्ट (कामिकादि वातुलान्त) आगमहरू भन्दा वीरशैवभक्त धेरै प्रामाणिक छन् ।

वीरशैव एवं वीरमाहेश्वरपदको अर्थ निर्वचन गरी वीरशैवका ६भेदहरू बताइयेका छन् । ती यस प्रकार छन् - भक्तस्थल, माहेश्वरस्थल, प्रसादीस्थल, प्राणलिङ्गी स्थल, शरणस्थल र ऐक्यस्थल । यसैगरि भक्तस्थलका पनि पन्द्र अवान्तर भेद वर्णित छन् ।

**षष्ठ-सप्तम परिच्छेद -**

छैठौं परिच्छेदमा गुरुकारुण्यस्थलमा गुरुको विशेषता बताई ज्ञान प्राप्त गर्नका लागि शिष्यले गुरुका पासमा जानु पर्ने कुरा बताइएको छ। त्यस पछि दीक्षाको परिभाषा, त्यसका प्रकारहरू, मांसपिण्डलाई सुसंस्कृत गर्ने तरीका, लिङ्गधारणविधि, प्राणलिङ्गका साथमा सामरस्य, लिङ्गधारणको प्रयोजन, अन्तर्लिङ्ग एवं बाह्यलिङ्गधारण, लिङ्गधारणमा श्रुतिप्रमाणको वर्णन गरिएको छ ।

सातौं परिच्छेदमा भस्मधारण एवं रूद्राक्ष धारणको विधि विस्तारपूर्वक बताइयेको छ ।

**अष्टम-दशम परिच्छेदः -**

आठौं परिच्छेदमा पञ्चाक्षरी विद्या (ॐ नमः शिवाय) विद्याको माहात्म्य बताइयेको छ । ॐकारलाई जोडेर षडक्षरी मन्त्र बन्ने तथ्यको उल्लेख गर्दै यसका जपको विधान, यसबाट हुने लाभको वर्णनका साथै आचार्यको महत्त्वलाई पनि रेखांकित गरिएको छ ।

**नवम परिच्छेदः-**

नवमपरिच्छेदमा विशेषरूपले भक्तिमार्गको वर्णन छ । यसमा भक्तिका नौ भेद, बाहिरि र भित्री भेदले भक्तिको दुई प्रकार तथा मनोवाक् काय एवं तप, कर्म, जप, ध्यान र ज्ञानका भेदले शिवयज्ञको पाँचभेद, वीरशैवमार्गमा दीक्षित भक्तहरूको नियम, लिङ्गी-अलिङ्गी को भेद र कर्तव्य, दानमा अन्न जल दान आदिको महत्त्व बताउनुका साथै शिव, गुरु, शिवयोगी, शिर्वार्पित चरणामृत, बिल्वपत्रादिको ग्राह्यता सम्बन्धमा विस्तृत रूपले वर्णन गरिएको छ ।

**दशमपरिच्छेदको-**

दशमपरिच्छेदको विषय माहेश्वर स्थल हो । अतः यसमा माहेश्वरको प्रशंसा, लिङ्गनिष्ठा, पूर्वाश्रयनिरास, अद्वैतनिराकरण, आह्वान वर्णन, अष्टमूर्ति निराकरण, सर्वगततत्त्वको खण्डन, शिव र भक्त दुबैको शिवता आदि विषयहरूको भेद उपभेद सहित विस्तारपूर्वक वर्णन गरिएको छ ।

CC-0. Jangamwadi Math Digital Collection.

**एकादश-त्रयोदश परिच्छेद -**

एकादशपरिच्छेदमा मुख्यरूपले प्रसादीस्थल, गुरुमाहात्म्य, लिङ्गप्रशंसा, जङ्गमगौरव, भक्तमाहात्म्य, शरणकीर्तन, र शिवप्रसाद माहात्म्य यी सात स्थलहरूको वर्णन गरिएको छ ।

**द्वादश परिच्छेद-**

प्राणलिङ्गीस्थलका नामले प्रसिद्ध छ । यसमा पाँच अवान्तरस्थल छन् – प्राणलिङ्ग, प्राणलिङ्गार्चन, शिवयोगसमाधि, लिङ्गनिजस्थल तथा अङ्गलिङ्गि–स्थल।

**त्रयोदश परिच्छेदः-**

त्रयोदश परिच्छेदमा शरणस्थल, तामस निरसनस्थल, निर्देशस्थल, शील सम्पादनका सम्बन्धमा विचार गरिएको छ।

**चतुर्दश-षोडश परिच्छेद -**

चतुर्दश परिच्छेदमा ऐक्य, आचार, सम्पत्ति आदि चारस्थलहरूको वर्णन छ । शरणवान् भक्त प्राण आदि लिङ्गका योगले अतिशय सुख प्राप्त गरेर शिवैक्य प्राप्त गर्दछ । विषयानन्द पराङ्मुख त्यो भक्त सधैं शिवानन्दसागरमा डुबी रहन्छ । उसले कर्मफलको बन्धन भोग्नु पर्दैन । यस अवस्थामा ब्राह्मण, चाण्डाल, पापी–पुण्यात्मा एक समान हुन जान्छन् । शिवज्ञानरूपी अग्निले उसका कर्मबीजहरू डडी जान्छन् । उसका सबै कर्महरू शिवाराधनामय बन्दछन् । उसले यस समस्त संसारलाई शिवमय देख्दछ । गुरुशिव र शिष्यको एकरूपमा स्मरण गर्नुलाई सहभोजन भनिन्छ ।

**पञ्चदश परिच्छेद-**

पञ्चदश परिच्छेदमा दीक्षागुरु, शिक्षागुरु, आदि नौ स्थलको वर्णन गरिएको छ । जसले शिवज्ञान दिएर तीन प्रकारका मलको नाश गर्दछ, उसलाई दीक्षागुरु भनिन्छ। जसले गुणातीत र रूपातीत वस्तुको ज्ञान गराउँछ उसलाई 'गुरु' भनिन्छ । जो शास्त्रका तात्पर्यको चयन गर्दछ, स्वयं आचरण गर्दछ, तथा अरुलाई आचरण गराउँछ त्यो आचार्य कहलाउँछ । जसले समस्त वस्तुहरूमा अखण्ड चैतन्यको अभिव्यक्ति गर्दछ त्यो गुरु विश्वभासक हुन्छ ।

भावलिङ्गको ज्ञापक ज्ञान जुन ज्ञानमा लीन हुन्छ, त्यस ज्ञानले युक्त व्यक्ति 'स्वयं' नामले जानिन्छ । त्यस्तो व्यक्ति संसारमा रहेर पनि परानन्दमा लीन हुन्छ । शिवको ध्यान, शिवको ज्ञान, भिक्षा एवं एकान्तवास यिनै उसका कर्म हुन्छन् । यस्तो स्वयंलिङ्गयुक्त साधक जब काम क्रोध आदिबाट रहित सर्वत्र समबुद्धिवाला हुन्छ, साथै "सर्वं खल्विदं ब्रह्म" को भावना गर्दै रहन्छ, उसलाई "चर" भनिन्छ।

जब उ स्वयं मात्र भएर सर्वत्र स्वयंलाई नै देख्दछ, यस्तो बोध परबोध कहलाउँछ। उ वर्ण, आश्रम, धर्मादिबाट माथि उठेर आफूलाई नै सर्वोत्कृष्ट संज्ञिन्छ, यस्ता शिवयोगीले

CC-0. Jangamwadi Math Digital Collection.

आफ्ना दर्शन, स्पर्शन द्वारा अज्ञानीहरूलाई पनि मुक्त गर्दछ । आफु निरञ्जन एवं जीवन्मुक्त भएर पनि सामान्य जन जस्तै व्यवहार गर्दछ।

**षोडश परिच्छेद** माहेश्वरका वर्णनले अलंकृत छ । यस माहेश्वरस्थलमा नौ खण्ड छन्, उनको नाम यस प्रकार छ क्रियागम, भावागम, ज्ञानागम, सकाय, अकाय, परकाय, धर्माचार, भावाचार र ज्ञानाचार । क्रियागमस्थलमा शिवपूजाको चर्चा गरिएको छ । ज्ञान र क्रिया यी दुवैलाई पक्षीका दुई पखेटाका समान मानिएको छ। मात्र एक पखेटाले यो जीवरूपी पक्षी मोक्षाकाशमा विचरण गर्न समर्थ हुँदैन। यस्तो अभ्यास निरन्तर रूपमा गर्नाले भावशुद्धि हुन्छ । यस परिच्छेदमा माहेश्वर स्थलका सबै खण्डहरूको विस्तारपूर्वक वर्णन गरिएको छ ।

**सप्तदश-अष्टदश परिच्छेद -**

~~सत्रौं परिच्छेद~~ प्रसादिस्थलका नामले प्रसिद्ध छ। यसमा पनि नौ वटा स्थलहरू छन् । जसका नाम यस प्रकार छन् – कायानुग्रह, इन्द्रियानुग्रह, प्राणानुग्रह, कायार्पित, करणार्पित, भार्वार्पित, शिष्यस्थल, सुश्रूषास्थल र सेव्यस्थल । आफ्ना शरीरको दर्शन गराउँदै शिवयोगी जैले जनहरूमाथि अनुग्रह गर्दछ, त्यसलाई कायानुग्रह भनिन्छ । यसको तात्पर्य यो हो कि शिव स्वयं योगीका शरीरमा प्रविष्ट भएर अनुग्रह गर्नुहुन्छ । यस प्रकार शिव एवं शिवयोगी दुवै शरीर प्रति अनासक्त हुन्छन् । यस परिच्छेदमा प्रसादिस्थलका पूर्वोक्त सबै अङ्गहरूको विस्तृत एवं सुन्दर वर्णन गरिएको छ ।

**अठारौं परिच्छेदः-**

अठारौं परिच्छेदमा प्राणलिङ्गस्थलको विशेषरूपले वर्णन गरिएको छ । यसमा मुख्यरूपले आत्मस्थल, अन्तरात्मस्थल, परमात्मस्थल, निर्देहागमस्थल, निर्भावा–गमस्थल, नष्टागमस्थल, आदिप्रसादस्थल, अन्त्यप्रसादस्थल, र सेव्यप्रसादस्थल पर्दछन् । सेव्यस्थल जहिले जीव भावको त्यागगरेर तत्त्वको रूपमा भावनाको विषय हुन्छ तहिले यसलाई आत्मा भनिन्छ । यो आत्मा केशको अग्रभागको शतांश बराबर हुन्छ । प्राक्तन कर्मरूपी पाशले आबद्ध भएर यो आत्मा जीव हुन्छ, तथा अहंकारले युक्त हुनाका कारणले शरीरी बन्दछ । आफ्ना मूलरूपमा यो निर्देह एवं निर्मल हुन्छ । वस्तुतः यो अनाम र अरूप छ । देहधारी भएर पनि पुष्कर पलाश जस्तै देहबाट असंशक्त रहन्छ, यस्ता स्थितिमा पनि योगबलद्वारा शिवको साक्षात्कार गरिनै रहन्छ, यहि आत्मा निर्मल भएर परमात्मा हुन जान्छ । शिव नै सर्वव्यापी एवं उत्कृष्टतम आत्मतत्त्व भएकाले परमात्मा हुन् । यस प्रकार अठारौं परिच्छेदमा पूर्वोक्त सबै स्थलहरूको मनोरम रूपले वर्णन गरिएको छ ।

**उन्नाइसौं-एक्काइसौं परिच्छेद-**

उन्नाइसौं परिच्छेद शरणस्थलका नामले प्रसिद्ध छ । यसमा बाह्र विभाग छन् । उनको नाम यस प्रकार छ – दीक्षापादोदक, शिक्षापादोदक, ज्ञानपादोदक, क्रियानिष्पत्तिक, भावनिष्पत्तिक,

CC-0. Jangamwadi Math Digital Collection.

ज्ञाननिष्पत्तिक, पिण्डाकाशस्थल, विन्द्वाकाशस्थल, महाकाशस्थल, क्रियाप्रकाशनस्थल, भावप्रकाशन–स्थल तथा ज्ञानप्रकाशस्थल । दीक्षाद्वारा द्वैतभाव नष्ट हुन्छ र गुरु–शिष्यमा ऐक्यभावना हुन्छ, अतः यसलाई दीक्षापादोदक भनिएको छ । पादको अर्थ हुन्छ निर्मल परमानन्द तथा उदकको अर्थ हो ज्ञान । दीक्षाद्वारा ज्ञान र निर्मल आनन्द अभिन्न हुन्छन् । परासंवित्ले युक्त शिवयोगी परमानन्दलाई प्राप्त गरेर सर्वत्र परमानन्दको अनुभव गर्दछ । यो ज्ञानानन्द केवल गुरुकृपाबाट प्राप्त हुन्छ । यस उन्नाइसौं परिच्छेदमा दीक्षापादोदक देखि ज्ञान प्रकाशनस्थल सम्म रहेका सबै स्थलहरूको विस्तारपूर्वक मनोरम तरिकाले वर्णन गरिएको छ ।

**बीसौं परिच्छेदः-**

बीसौं परिच्छेदलाई ऐक्य स्थल नाम दिइएको छ । यस अन्तर्गत नौ स्थलहरूको विस्तारपूर्वक वर्णन गरिएको छ, ती स्थलहरू यस प्रकार छन् – स्वीकृतप्रसादैक्यस्थल, शिष्टोदनस्थल, चराचरस्थल, भाण्डस्थल, भाजनस्थल, अङ्गालेपस्थल, स्वपराज्ञा–स्थल, भावाभावविनाशस्थल तथा ज्ञानशून्यस्थल ।

ज्ञानप्रकाशले सम्पन्न योगीमा जहिले मुख्यार्थ र लक्ष्यार्थ यी दुवैको अभाव हुन्छ, तहिले त्यो पूर्णज्ञानप्रसादवाला हुन जान्छ, त्यस स्थितिमा त्यो प्रमाता, प्रमेय प्रमाणरूप त्रिपुटीमा समवाय सम्बन्धले वर्तमान संवित्को साक्षात्कार गरेर "स्वस्थ" हुन जान्छ । त्यस पूर्णज्ञानी शिवयोगीका दृष्टिमा सबै संसार शिवमय हुन जान्छ । तब त्यो योगी समस्त इन्द्रिय विषयहरूलाई चिदग्निमा होम गरेर परम निर्मल बन्दछ एवं परानन्दमय भएर विषयहरूको भोग गर्दछ । मायालाई शैव शास्त्रमा ओदन भनिएको छ । जसरी ओदन अर्थात् भात उदरस्थ भएर रक्त आदिका रूपमा परिणत हुन्छ र नश्वर शरीरलाई पुष्ट गर्दछ, त्यसरी नै माया पनि यस संसारमा नाना रूपमा प्रकट भएर यसलाई पुष्ट गर्दछ । यो माया संसारी जनहरूका लागि स्वामिनी एवं योगीजनहरूका लागि किंकरी समान हुन्छ किनकि महात्मा शिवयोगी चित् स्वरूप ज्योतिर्लिङ्गमा सर्वदा निमग्न रहन्छ । यस्ता योगीद्वारा भुज्यमान विषयहरू पनि चिदात्मामा लीन हुन जान्छन् । जसरि अग्नि दाउरालाई जलाएर स्वयं स्वस्थ हुन्छ त्यसरी नै शिवयोगी देहधारी भएर पनि निर्देही हुन्छ र चराचर जगत्मा स्थित मलशक्तिको विनाशक बन्छ । जस्तै निद्राबाट जागे पछि स्वप्न जगत् अदृश्य या नष्ट हुन्छ, त्यसरि नै आत्मप्रबोध भएपछि सम्पूर्ण संसार नष्ट हुन्छ अर्थात् योगीका लागि संसार त्यस्तो रहन्न जस्तो सामान्य संसारी जनहरूका लागि हुन्छ । वाणी र मनबाट पर तुरीयातीत अवस्थामा प्राप्त भएका योगीले चिदानन्दमय शिवदेखि अतिरिक्त केहि पनि जान्दैन ।

शिवयोगीका विचाररूप पर बिन्दुको अर्को नाम भाण्डस्थल हो । यो परमशिवरूप योगीको विमर्शकला हो, जसमा समस्त विश्व मयूराण्डरसन्यायले लुकेको हुन्छ, यहि शब्द ब्रह्म हो, यही पराहन्तारूप विमर्श हो, यस विमर्शरूपी भाण्डमा सम्पूर्ण विश्वलाई विलीन

CC-0. Jangamwadi Math Digital Collection.

गरेर योगी मुक्तावस्थामा स्थित रहन्छ । समस्त ब्रह्माण्डको कारणभूत विमर्श जसमा भासित हुन्छ, त्यस अहंमा स्थित अकार शिव हो, हकार शक्ति हो, यस प्रकार अहं पदमा शिवशक्ति दुवैको सामंजस्य रहन्छ । यस अहंतामा सम्पूर्ण विश्व बटबीजमा निहित वृक्ष जस्तै अव्यक्तरूपले स्थित रहन्छ । अहंतामय योगी विश्वात्मा भएर भासित हुन्छ । जो देशकाल आदिबाट अवच्छिन्न भएर पनि चिदानन्दमय हुन्छ, त्यसलाई अङ्गालेप भनिन्छ । जसरी धूँवा आदिबाट आकाश लिप्त हुँदैन त्यसरि नै योगी पनि संसारबाट लिप्त हुँदैन, उसका लागि विधि निषेध आदि केहि पनि हुँदैन । त्यो योगी सर्वाकाररूपमा जीवन्मुक्त रहन्छ ।

शिवयोगीले आफूलाई जहिले अप्रमेय चिदद्वैत तत्त्वमा विलीन गर्दछ तब उसलाई स्व एवं परको भान हुँदैन, ऊ सजातीय, विजातीय तथा स्वगत यी तीनै भेदबाट शून्य हुन्छ । समस्त द्वन्द्वदेखि पर रहेका उसलाई स्वपराज्ञास्थल भनिन्छ, यस प्रकार जो त्वम् र अहम्का भावले शून्य हुन्छ, त्यो भावाभावका लयको स्थल बन्न पुग्दछ । अहं र स्वभावले रहित त्यो जीवन्मुक्त जब चित् स्वरूप हुन जान्छ, तब उसका लागि सुख दुःख आदिको भावाभाव हुँदैन, जसरी घ्यू मा घ्यू, तेलमा तेल, दूधमा दूध, मिलाउदा पार्थक्य रहन्न, त्यसरी नै शिवयोगी र परब्रह्ममा भेद रहन्न । स्वयं विभागको पनि अस्तित्व रहन्न, केवल चिदानन्दरूप तत्त्वमा कुनै विशेषण पनि लगाउन सकिन्न । कार्यकारण, शेषशेषी आदि समस्त सम्बन्धहरू शून्यतामा प्राप्त हुन्छन्, यस्तो व्यक्ति ज्ञानशून्यस्थल नामले पुकारिन्छ ।

**एक्काइसौं परिच्छेदमा –**

सिद्धान्तशिखामणि ग्रन्थको उपदेश पश्चात् रेणुकाचार्यले गरेका कृत्यहरूको वर्णन उपलब्ध छ । भगवान् शिवले भगवती पार्वतीलाई जुन अद्वैतानन्द शिवधर्मको उपदेश गरेको थियो, त्यहि उपदेश रेणुकाचार्यले महर्षि अगस्त्यलाई सुनाएर मौन धारण गरे । त्यसपछि मुनि अगस्त्यले भन्नुभयो हे शिवज्ञानका महासागर! हे आचार्य! तपाईका मुखारविन्दबाट यो निर्मल शास्त्र अवतीर्ण भयो, यसलाई सुनेर मेरो चित्त अत्यन्त प्रसन्न भयो, अहिले म शिवज्योतिको साक्षात्कार गरिरहेको छु । तपस्याको प्रभाव र शंकरको कृपा विना को यस रहस्यमय ज्ञान सुन्ने अधिकारी हुनसक्छ? तपाँई मलाई कृतकृत्य गर्नका लागि यहाँ आउनुभयो । अतः आज मेरो जन्म सफल भयो, म पाशबन्धनबाट मुक्त भएँ, मैले गरेका तपस्याहरू फलीभूत भए । अगस्त्यका वचनलाई सुनेर रेणुकाचार्यले भन्नुभयो– हे मुनिश्रेष्ठ! तपाँईलाई छोडेर अर्को कुन व्यक्ति यस शिवशास्त्रलाई जान्ने अधिकारी हुनसक्छ? यस तन्त्रका तपाई एकमात्र अधिकारी हुनुहुन्छ । शिवप्रबोधको यस्तो साधन अन्यत्र काँहि पनि छैन । सर्वानुग्रहकारी शिवले नै लोकमंगलका लागि यसको प्रवचन गर्नुभएको हो । शिष्यहरूको परीक्षण गरेर मात्र तपाईले यो विद्या तिनीहरूलाई दिनुहोला । अपरीक्षित एवम् अयोग्य शिष्यलाई यो ज्ञान कदापि न दिनुहोला । अब पृथ्वीभरि यसको प्रचार–प्रसार गर्नमा तपाँई लाग्नुहोस् । यति भनेर अगस्त्यले हेर्दाहेर्दै गणेश्वर रेणुकाचार्य शिवको ध्यान गर्दै अन्तर्हित भए, त्यसपछि

CC-0. Jangamwadi Math Digital Collection.

स्वेच्छाले शरीर धारण गर्न सक्ने गणेश्वर रेणुकाचार्य लंकामा पुगे । सर्वागमवेत्ता ती गणेश्वरलाई आउदै गरेको देखेर लंकाधिपति विभीषणले उनलाई आफ्ना महलमा लगे तथा उच्च आसनमा बसाएर पाद्य अर्घ्य आदि समस्त उपचारहरूद्वारा उनको पूजा गरे, तत्पश्चात् उनका छेउको आसनमा बसेर हात जोडेर विभीषणले भने – हे गणनायक! तपाई शिवको आज्ञाले यस पृथ्वीमा अवतीर्ण हुनुभएको हो, यस्तो कुरा मैले सुनेको थिएँ, आज मेरा सौभाग्यले साक्षात् महेश्वरस्वरूप तपाईले मेरा घरमा पदार्पण गर्नु भयो, जसले गर्दा मेरो लंका नगरी र म स्वयं पनि कृतार्थ भयौं । यो कुरा सुनेर गणेश्वरले विभीषण सँग भने – हे राक्षसेन्द्र! सबैले तपाईलाई सबै शास्त्रको तत्त्व जान्ने तथा परमधर्मपरायण हुनुहुन्छ भन्ने गर्दछन्, त्यसै कारण कैलाश तिर जादा जादै म तपाईका पासमा आएको हूँ । तपाई मसँग मनोवाञ्छित वरदान माग्नोस् । यसपछि विभीषणले भने – हे भगवन्! सुकर्म जब परिपक्व हुन्छ, तब त्यसले स्वयं फल दिन्छ, तर पनि मलाई एक वरदान दिनोस्, मेरा दाजु रावणले युद्धमा रामजीका शरले घायलभएपछि मलाई बोलाएर भनेका थिए – हे विभीषण! मैले यस लंकामा नौ करोड़ शिवलिङ्गको स्थापना गर्ने संकल्प गरेको थियें । छ करोड़ शिवलिङ्गको स्थापना मैले गरिसकेको छु, शेष तीन करोड शिवलिङ्गको स्थापना तिमीले गर्नु । हे गणेश्वर! एक साथै यति धेरै शिवलिङ्ग स्थापनाको विधान असम्भव जस्तो मानेर म चिन्ताग्रस्त भएको थिएँ, तपाँई मेरो इच्छा पूरा गरि दिनोस् । गणेश्वर रेणुकले विभीषणको प्रार्थनानुसार तीन करोड़ शरीर धारण गरेर तीनकोटी शिवलिङ्गहरूको स्थापना गरे । ती गणेश्वरको यस्तो माहात्म्य एवं प्रभाव देखेर विभीषण छक्क परे तथा उनका चरणमा नतमस्तक भए, गणेश्वर रेणुकाचार्य यस प्रकार उनलाई अनुगृहीत गरि अन्तर्निहित भए ।

रेणुकाचार्य पृथ्वीमण्डलमा यताउती घुम्दै जीवहरूको कल्याण गर्दै कोल्लीपाक्य नामक आफ्ना पुरमा आईपुगे, त्यहाँ भएका जनहरूद्वारा पूजित भएर रेणुक सोमेश्वर मन्दिरमा आएर भक्तिपूर्वक शिवको स्तुति गरे । स्तुतिबाट प्रसन्न भएर भगवानले त्यस लिंगबाट नै शब्द उच्चारित गर्नुभयो – हे वत्स ! आऊ म तिमी माथि प्रसन्न छु यस्तो आह्वान सुनेर रेणुक ज्योतिस्वरूप धारण गरि सोमेश्वरलिंगमा समाविष्ट भए ।

CC-0. Jangamwadi Math Digital Collection.

# विषयानुक्रमणिका



CC-0. Jangamwadi Math Digital Collection.

CC-0. Jangamwadi Math Digital Collection.



CC-0. Jangamwadi Math Digital Collection.

॥ श्री जगद्गुरवः पंचाचार्याः प्रसीदन्तु ॥



ॐ नमः पञ्चाचार्येभ्यो नमः
नमः पञ्चाननमुखोद्भूतेभ्यो नमः
नमः पञ्चसूत्रकर्तृभ्यो नमः
नमः पञ्चाक्षरमनुस्वरूपेभ्यो नमः
नमः शिवाद्वैतविद्यासम्प्रदायकर्तृभ्यो नमः
नमः वीरशैवमहामतसंस्थापकेभ्यो नमः
नमो जगद्गुरुभ्यः॥

CC-0. Jangamwadi Math Digital Collection.

## ।। अथ श्रीसिद्धान्तशिखामणि न्यासादिः ।।

### अथ ऋष्यादिन्यासः

अस्य श्रीसिद्धान्तशिखामणिशास्त्रमहामन्त्रस्य
भगवान् श्रीशिवयोगिशिवाचार्य ऋषिः।
अनुष्टुप् छन्दः। श्री सच्चिदानन्दस्वरूपः परशिवो देवता।

सच्चिदानन्दरूपाय शिवाय ब्रह्मणे नमः
इति बीजम्।

अमृतार्थं प्रपन्नानां या सुविद्याप्रदायिनी
इति शक्तिः।

शिवज्ञानकरं वक्ष्ये सिद्धान्तं श्रुणु सादरम्
इति कीलकम्।



### अथ करन्यासः

एक एव शिवस्साक्षाच्चिदानन्दमयो विभुः
इति अङ्गुष्ठाभ्यां नमः।

निर्विकल्पो निराकारो निर्गुणो निष्प्रपञ्चकः
इति तर्जनीभ्यां नमः।

अनाद्यविद्यासम्बन्धात्तदंशो जीवनामकः
इति मध्यमाभ्यां नमः।

देवतिर्यङ्मनुष्यादिजातिभेदे व्यवस्थितः
इति अनामिकाभ्यां नमः।

मायी महेश्वरस्तेषां प्रेरको हृदि संस्थितः
इति कनिष्ठिकाभ्यां नमः।

बीजे यथाऽङ्कुरः सिद्धस्तथाऽत्मनि शिवः स्थितः
इति करतलकरपृष्ठाभ्यां नमः।

CC-0. Jangamwadi Math Digital Collection.



## अथ अंगन्यासः

एक एव शिवस्साक्षाच्चिदानन्दमयो विभुः
इति हृदयाय नमः।

निर्विकल्पो निराकारो निर्गुणो निष्प्रपञ्चकः
इति शिरसे स्वाहा।

अनाद्यविद्यासम्बन्धात्तदंशो जीवनामकः
इति शिखायै वषट्।

देवतिर्यङ्मनुष्यादिजातिभेदे व्यवस्थितः
इति कवचाय हुम्।

मायी महेश्वरस्तेषां प्रेरको हृदि संस्थितः
इति नेत्रत्रयाय वौषट्।

बीजे यथाऽङ्कुरः सिद्धस्तथाऽत्मनि शिवः स्थितः
इति अस्त्राय फट्।

श्रीशिवप्रीत्यर्थे श्रीसिद्धान्तशिखामणिपाठे विनियोगः।



CC-0. Jangamwadi Math Digital Collection.

## ।। अथ श्रीसिद्धान्तशिखामणिध्यानम्।।

स्वस्ति श्रीगणनायकेन मुनयेऽगस्त्याय तत्त्वार्थिने
शिष्याय प्रतिबोधिते भगवता श्रीरेणुकेन स्वयम्।
तात! त्वं शिवयोगिवर्यसुकृतिर्मे मानसे मन्दिरे
श्रीसिद्धान्तशिखामणे वस सदा ज्ञानप्रदीपो भव।।१।।

शरणागतदीनार्तपरित्राणैकहेतवे ।
श्रीरेणुकगणेशाय ज्ञानमुद्राय ते नमः।।२।।

अगस्त्यसंशयव्रातमहाध्वान्तांशुमालिनम् ।
वन्दे शिवसुतं देवं रेणुकाख्यं जगद्गुरुम्।।३।।

नमः शिवाचार्यवराय तुभ्यं श्रीवीरशैवागमसागराय।
विनाऽपि तैलं भवताऽत्र येन प्रज्वालितो ज्ञानमणिप्रदीपः।।४।।

यस्मिन्नागमशास्त्रतत्त्वमखिलं सम्यक् च संसूचितं
भक्तैर्वांञ्छितभुक्तिमुक्तिफलदं यत्कल्पवृक्षात्मकम्।
तं शैवागमसम्मतं निगमविद् विद्वद्भिरासेवितं
श्रीसिद्धान्तशिखामणिं प्रतिदिनं ध्यायेत् सदा सादरम्।।५।।

पूज्यश्रीशिवयोगिवर्यरचितं सिद्धान्तरत्नाकरं
सूक्ष्मं धार्मिकतात्त्विकस्थलयुतं चैकाधिकं तत् शतम्।
त्रैलोक्यं पदमादिमं परपदं सर्वान्तिमे योजितं
श्रीसिद्धान्तशिखामणिं दिनदिनं ध्यायेत् सदा शांतिदम्।।६।।



CC-0. Jangamwadi Math Digital Collection.

## ।। अथ श्रीसिद्धान्तशिखामणिमाहात्म्यम्।।

यः पठेत् प्रयतो नित्यं श्रीसिद्धान्तशिखामणिम्।
शिवसायुज्यमाप्नोति भयशोकादिवर्जितः।।१।।

सदाऽध्ययनशीलस्य श्रीसिद्धान्तशिखामणेः।
क्षीयन्ते सर्वपापानि पूर्वजन्मकृतानि च।।२।।

जलस्नानाद् वरं पुंसां श्रीसिद्धान्तशिखामणौ।
ज्ञानार्णवे सदा स्नानं संसारमलनाशनम्।।३।।

श्रीरेणुकगणाध्यक्षमुखपद्माद्विनिःसृतः।
कण्ठपीठे सदा धार्यः श्रीसिद्धान्तशिखामणिः।।४।।

श्रीरेणुकगणाध्यक्षवचनामृतसागरम्।
पायं पायं सदा पुंसां पुनर्जन्म न विद्यते।।५।।

सर्वागमव्रजो गावस्तासां दोग्धा च रेणुकः।
वत्सोऽगस्त्यः सुधीर्भोक्ता दुग्धं शिखामणिर्महान्।।६।।

एकं शास्त्रं श्रीशिवाद्वैतसंज्ञम् एको देवः श्रीमहादेव एव।
एको मन्त्रः शैवपञ्चाक्षरोऽयम् कर्माप्येकं इष्टलिङ्गार्चनं हि।।७।।

## ।। अथ फलश्रुतिः।।

श्रीवेदागमवीरशैवसरणिं श्रीषट्स्थलोद्यन्मणिं
श्रीजीवेश्वरयोगपद्मतरणिं श्रीगोप्यचिन्तामणिम्।
श्रीसिद्धान्तशिखामणिं लिखयिता यस्तं लिखित्वा परान्
श्रुत्वा श्रावयिता स याति विमलां भुक्तिं च मुक्तिं पराम्।।

CC-0. Jangamwadi Math Digital Collection.

# नेपालबाट सहयोग गर्ने जंगमहरु को नामावली

| क्र.सं. | नाम थर | ठेगाना |
|---|---|---|
| 1. | श्री शारदा जंगम | धुलिखेल |
| 2. | श्री भैरव प्रसाद जंगम | धुलिखेल |
| 3. | श्री भक्तप्रसाद जंगम | धुलिखेल |
| 4. | श्री पूजन जंगम | धुलिखेल |
| 5. | श्री मदन प्रसाद जंगम | धुलिखेल |
| 6. | श्री विदुर जंगम | धुलिखेल |
| 7. | श्री राम शरण जंगम | धुलिखेल |
| 8. | श्री उदय भूषण जंगम | धुलिखेल |
| 9. | श्री हमेश जंगम | धुलिखेल |
| 10. | श्री अशोक जंगम | भक्तपुर |
| 11. | श्री विकास जंगम | भक्तपुर |
| 12. | श्री सुनील जंगम | भक्तपुर |
| 13. | श्री बच्चूराम जंगम | भक्तपुर |
| 14. | श्री नवराज जंगम | भक्तपुर |
| 15. | श्री राम जंगम | भक्तपुर |
| 16. | श्री शिव प्रसाद जंगम | पनौती |
| 17. | श्री रमेश प्रसाद जंगम | पनौती |
| 18. | श्री पुष्कर जंगम | काठमाण्डौ |

CC-0. Jangamwadi Math Digital Collection.

# नेपालका जंगम प्रतिष्ठानका सदस्यहरु

1. श्री भरप्रसाद जंगम
2. श्री राममणि जंगम
3. श्री भरतमणि जंगम
4. श्री रमेश प्रसाद जंगम
5. श्री भक्त प्रसाद जंगम
6. श्री पुष्कर जंगम
7. श्री दीपक जंगम
8. श्री अशोक जंगम
9. श्री विकास जंगम
10. श्री सुनील जंगम
11. श्री सुरेश जंगम
12. श्री सुरज जंगम
13. श्री मधुसूदन जंगम
14. श्री बच्चू राम जंगम
15. श्री कैलाश जंगम
16. श्री शम्भु प्रसाद जंगम
17. श्री नवराज जंगम
18. श्री कृष्ण जंगम
19. श्री राम जंगम
20. श्री बलराम जंगम
21. श्री अर्जुन जंगम
22. श्री राजेन्द्र जंगम
23. श्री विवेक जंगम
24. श्री सुदर्शन जंगम
25. श्री कृष्ण जंगम
26. श्री विश्व जंगम
27. श्री भरत जंगम
28. श्री पुष्कर जंगम
29. श्री हरि जंगम
30. श्री हरि शरण जंगम
31. श्री प्रह्लाद जंगम
32. श्री वेनु जंगम
33. श्री प्रदीप जंगम
34. श्री विदुर जंगम
35. श्री राजकुमार जंगम
36. श्री यादव जंगम
37. श्री माधव जंगम
38. श्री दाम जंगम
39. श्री त्रिलोचन जंगम
40. श्री मदन प्रसाद जंगम
41. श्री राजु जंगम
42. श्री संजय जंगम
43. श्री उदय जंगम
44. श्री अरुण जंगम
45. श्री बद्री प्रसाद जंगम
46. श्री राधव जंगम
47. श्री भजराम जंगम
48. श्री दीनानाथ जंगम
49. श्री पूजन जंगम
50. श्री राजन जंगम
51. श्री सुशील जंगम
52. श्री रमेश जंगम
53. श्री सुमन जंगम
54. श्री सुनील जंगम
55. श्री विदुर जंगम
56. श्री निराजन जंगम
57. श्री राजेन्द्र जंगम
58. श्री रविन्द्र जंगम

CC-0. Jangamwadi Math Digital Collection.

59. श्री उदय जंगम
60. श्री रामशरण जंगम
61. श्री दीपक जंगम
62. श्री महेश जंगम
63. श्री हेम जंगम
64. श्री राम जंगम
65. श्री लक्ष्मण जंगम
66. श्री विष्णु जंगम
67. श्री राजाराम जंगम
68. श्री राधेश्याम जंगम
69. श्री वरुण जंगम
70. श्री शिव प्रसाद जंगम
71. श्री धन बहादुर जंगम
72. श्री राजेन्द्र जंगम
73. श्री कृष्ण जंगम
74. श्री हरि जंगम
75. श्री माधव प्रसाद जंगम
76. श्री ईश्वर जंगम
77. श्री महेश्वर जंगम
78. श्री राम गोपाल जंगम
79. श्री ज्योति जंगम
80. श्री दिलीप जंगम
81. श्री दीपक जंगम
82. श्री जंग बहादुर जंगम
83. श्री राजु जंगम

CC-0. Jangamwadi Math Digital Collection.

श्रीशिवयोगिशिवाचार्यविरचित

# श्रीसिद्धान्तशिखामणिः

## प्रथमः परिच्छेदः

### शिवस्तुति

**त्रैलोक्यसम्पदालेख्यसमुल्लेखनभित्तये।**
**सच्चिदानन्दरूपाय शिवाय ब्रह्मणे नमः।।१।।**

**भावार्थ :** ज्ञानवती-त्रैलोक्यरूपी सम्पत्तिका लेख तथा चित्रण को आधारभूत सच्चिदानन्दस्वरूप व्यापक शिवात्मक ब्रह्मलाई नमस्कार छ ।।१।।

**ब्रह्मेति व्यपदेशस्य विषयं यं प्रचक्षते।**
**वेदान्तिनो जगन्मूलं तं नमामि परं शिवम्।।२।।**

**भावार्थ :** वेदान्तीहरू जसलाई ब्रह्मव्यवहारको विषय बतलाउँदछन्, अर्थात् ब्रह्मशब्दले जसलाई अभिहित गर्दछन्, उन संसारका मूलकारण परमशिवलाई म प्रणाम गर्दछु ।।२।।

**यस्योर्मिबुद्बुदाभासः षट्त्रिंशत्तत्त्वसञ्चयः।**
**निर्मलं शिवनामानं तं वन्दे चिन्महोदधिम्।।३।।**

**भावार्थ :** छत्तीस तत्त्वहरूको समूह जसको तरंग बुद-बुद तथा आभास छ, त्यस शिवनामक निर्मल चित्सिन्धुको म वन्दना गर्दछु ।।३।।

**यद्भासा भासते विश्वं यत्सुखेनानुमोदते।**
**नमस्तस्मै गुणातीतविभवाय परात्मने।।४।।**

**भावार्थ :** जसका प्रकाशबाट यो समस्त विश्व प्रकाशित हुन्छ, जसका आनन्दले यो विश्व आनन्दित हुन्छ, त्रिगुण देखी पररहने परमवैभसम्पन्न उस परमात्मालाई मेरो नमस्कार छ ।।४।।

CC-0. Jangamwadi Math Digital Collection.

**सदाशिवमुखाशेषतत्त्वोन्मेषविधायिने ।**
**निष्कलङ्कस्वभावाय नमः शान्ताय शम्भवे ।।५ ।।**

**भावार्थ :** सदाशिव देखी लिएर पृथिवी पर्यन्त समस्त तत्त्वहरूका उन्मेषकर्ता निष्कलङ्क स्वभाव भएका परमशान्त शम्भुलाई नमस्कार छ ॥५॥

**स्वेच्छाविग्रहयुक्ताय स्वेच्छावर्तनवर्तिने।**
**स्वेच्छाकृतत्रिलोकाय नमः साम्बाय शम्भवे ।।६ ।।**

**भावार्थ :** आफ्नो इच्छाले शरीर धारण गर्ने, आफ्नो इच्छाले नै समस्त व्यवहार गर्ने, तथा आफ्नै इच्छा शक्तिले त्रैलोक्यको रचना गर्ने मातासहित शिवलाई नमस्कार छ ॥६॥

**यत्र विश्राम्यतीशत्वं स्वाभाविकमनुत्तमम्।**
**नमस्तस्मै महेशाय महादेवाय शूलिने ।।७ ।।**

**भावार्थ :** जसमा ऐश्वर्यको पराकाष्ठा छ, जो स्वभावतः सर्वोत्तम छ, त्रिशूलधारी उन महादेव महेशलाई नमस्कार छ ॥७॥

**शक्तिस्तुतिः**

**यामाहुः सर्वलोकानां प्रकृतिं शास्त्रपारगाः।**
**तां धर्मचारिणीं शम्भोः प्रणमामि परां शिवाम्।।८ ।।**

**भावार्थ :** शास्त्रमा पारंगत विद्वान्हरू जसलाई समस्त लोकको मूलकारण मान्दछन्, शिवकी धर्मपत्नी उन पराशिवालाई म प्रणाम गर्दछु ॥८॥

**यया महेश्वरः शम्भुर्नामरूपादिसंयुतः।**
**तस्यै मायास्वरूपायै नमः परमशक्तये ।।९ ।।**

**भावार्थ :** जसका कारणले महेश्वर नामरूप गुणसंख्या परिमाण आदिले युक्त भएर शम्भु नामले पुकारीन्छन्, अथवा जसका कारणले नामरूप आदिले युक्त शम्भु महेश्वर नामले पुकारीन्छन्, माया स्वरूपमा विद्यमान उस परमशक्तिलाई नमस्कार छ ॥९॥



**शिवाद्यादिसमुत्पन्नशान्त्यतीतपरोत्तराम् ।**
**मातरं तां समस्तानां वन्दे शिवकरीं शिवाम्।।१० ।।**

**भावार्थ :** जो शिवबाट सर्वप्रथम उत्पन्न भइन् तथा शान्त्यातीत कलादेखि पनि पर (अगाडी) तथा उत्तर स्वरूप छन्, उन समस्तकला तथा समस्त सृष्टि की माता मंगलकारिणी शिवाको म वन्दना गर्दछु ॥१०॥

**इच्छाज्ञानादिरूपेण या शम्भोर्विश्वभाविनी।**
**वन्दे तां परमानन्दप्रबोधलहरीं शिवाम्।।११ ।।**

**भावार्थ :** जो शिवको इच्छा ज्ञान आदि रूपद्वारा विश्वकी प्रकाशिका छिन्, परमानन्द प्रबोधको तरङ्गरूपा (लहर) उन शिवाको म वन्दना गर्दछु ॥११॥

**अमृतार्थं प्रपन्नानां या सुविद्याप्रदायिनी।**
**अहर्निशमहं वन्दे तामीशानमनोरमाम्।।१२ ।।**

**भावार्थ :** अमरत्वका लागी शरणमा आएका भक्तजनहरूलाई जो सद्विद्या प्रदान गर्दछिन्, ईशान की मनोरम उन शिवानी को म रातदिन वन्दना गर्दछु ॥१२॥

**ग्रंथकारको वंशवर्णन**

**कश्चिदाचारसिद्धानामग्रणीः शिवयोगिनाम्।**
**शिवयोगीति विख्यातः शिवज्ञानमहोदधिः।।१३ ।।**

**भावार्थ :** आचारसिद्ध शिवयोगिहरूमा अग्रगण्य शिवतत्त्व ज्ञानका सागर शिवयोगी नामका कुनै प्रसिद्ध योगिराज हुनुहुन्थ्यो ॥१३॥

**शिवभक्तिसुधासिन्धुजृम्भणामलचन्द्रिका।**
**भारती यस्य विदधे प्रायः कुवलयोत्सवम्।।१४ ।।**

**भावार्थ :** जसको शिवभक्तिरूपी सुधा (अमृत) समुद्रको जृम्भण अर्थात् आनन्दोच्छलनका लागि चन्द्रिका (कौमुदी) का समान वाणी कुवलयोत्सव अर्थात् पृथ्वीरूपी नीलकमलको उत्सव मनाउँथी उनको वाणी समस्त भूमण्डलमा अव्याहतरूपमा विचरण गर्दथ्यो ॥१४॥

CC-0. Jangamwadi Math Digital Collection.

**तस्य वंशे समुत्पन्नो मुक्तामणिरिवामलः।**
**मुद्देवाभिधाचार्यो मूर्धन्यः शिवयोगिनाम्।।१५।।**

**भावार्थ :** उनका वंशमा निर्मल मुक्तामणिसमान मुद्देव नामक आचार्य उत्पन्न भएका थिये, जो शिवयोगीहरूमा अग्रगण्य थे ।।१५।।

**मुद्दानात्सर्वजन्तूनां प्रणतानां प्रबोधतः।**
**मुद्देवेति विख्याता समाख्या यस्य विश्रुता।।१६।।**

**भावार्थ :** शरणागत समस्त जीवहरूलाई आनन्द प्रदान गर्नाले, तथा प्रणत जनहरूलाई प्रबुद्ध गर्नाले उनको **मुद्देव** नाम प्रसिद्ध भयो ।।१६।।

**तस्यासीन्नन्दनः शान्तः सिद्धनाथाभिधः शुचिः।**
**शिवसिद्धान्तनिर्णेता शिवाचार्यः शिवात्मकः।।१७।।**

**भावार्थ :** उनका **सिद्धनाथ** नामक शिवात्मक एवं शिवासिद्धान्तका निर्णायक शिवाचार्य रागद्वेषादि विवर्जित पुत्र थिये ।।१७।।

**वीरशैवशिखारत्नं विशिष्टाचारसम्पदम्।**
**शिवज्ञानमहासिन्धुं यं प्रशंसन्ति देशिकाः।।१८।।**

**भावार्थ :** आचार्यहरूले जसको प्रशंसा वीरशैवचूडामणि, विशिष्ट आचारसम्पन्न, तथा शिवज्ञान महासिन्धुका रूपमा गर्दथे ।।१८।।

**यस्याचार्यकुलाज्जाता सतामाचारमातृका।**
**शिवभक्तिः स्थिरा यस्मिन् जज्ञे विगतविप्लवा।।१९।।**

**भावार्थ :** आचार्यकुलमा उत्पन्न तथा सज्जनहरुकी आचारकी जननी शिवभक्ति उपद्रव रहित भएर जसमा स्थित भएकी थिइन् ।।१९।।

**तस्य वीरशिवाचार्यशिखारत्नस्य नन्दनः।**
**अभवच्छिवयोगीति सिन्धोरिव सुधाकरः।।२०।।**

**भावार्थ :** वीरशैव शिवाचार्यहरूका मुकुटमणिका रूपमा विद्यमान उन सिद्धनाथजी बाट समुद्रबाट चन्द्रमा उत्पत्ति भएका समान शिवयोगीनामक पुत्र उत्पन्न भए ।।२०।।



**चिदानन्दपराकाशशिवानुभवयोगतः ।**
**शिवयोगीति नामोक्तिर्यस्य याथार्थ्ययोगिनी।।२१।।**

**भावार्थ :** चिदानन्दयुक्त पराकाशरूपी शिवतत्त्वका अनुभवले युक्त हुनाले जसको शिवयोगी नाम अन्वर्थ भएको थियो ।।२१।।

**शिवागमपरिज्ञानपरिपाकसुगन्धिना ।**
**यदीयकीर्तिपुष्पेण वासितं हरितां मुखम्।।२२।।**

**भावार्थ :** शैवागमको परिपूर्णज्ञानको पूर्णरूपले पाकेको अर्थात् परिपक्व भएको जसको सुगन्धियुक्त कीर्तिरूपी पुष्पले सबै दिशाहरूको मुख सर्वदा सुगन्धित भैरहन्थ्यो ।।२२।।

**येन रक्षावती जाता शिवभक्तिः सनातनी।**
**बौद्धादिप्रतिसिद्धान्तमहाध्वांतांशुमालिना।।२३।।**

**भावार्थ :** बौद्ध आदिका प्रतिकूल सिद्धान्तरूपी महाअन्धकारका लागि सूर्यका समान, जसद्वारा सनातनी शिवभक्तिको रक्षा गरियो ।।२३।।

**स महावीरशैवानां धर्ममार्गप्रवर्तकः।**
**शिवतत्त्वपरिज्ञानचन्द्रिकावृतचन्द्रमाः ।।२४।।**

**भावार्थ :** शिवतत्वका परिपूर्ण ज्ञानरूपी चन्द्रमाका प्रकाशले युक्त भएका ती शिवयोगी महावीर शैवहरूका, धर्म मार्ग प्रवर्तक भए ।।२४।।

**आलोक्य शैवतन्त्राणि कामिकाद्यानि सादरम्।**
**वातुलान्तानि शैवानि पुराणान्यखिलानि तु।।२५।।**

**भावार्थ :** वहाँले कामिक देखि लिएर वातुलपर्यन्त शैवतन्त्र तथा समस्त शैवपुराणहरूको आदरपूर्वक अध्ययन गरेर वीरशैवमहातन्त्रको रचना गर्नुभयो ।।२५।।

**वेदमार्गाविरोधेन विशिष्टाचारसिद्धये।**
**असन्मार्गनिरासाय प्रमोदाय विवेकिनाम्।।२६।।**

CC-0. Jangamwadi Math Digital Collection.

**भावार्थ :** यो रचना सनातन वैदिकमार्गको विरोध नगरी विशिष्ट आचारको सिद्धि तथा असत् मार्गलाई दूर गर्न तथा ज्ञानी जनहरूका प्रमोद अर्थात् आनन्दका निमित्त गरिएको हो ॥२६॥

**सर्वस्वं वीरशैवानां सकलार्थप्रकाशनम्।**
**अस्पृष्टमखिलैर्दोषैरादृतं शुद्धमानसैः।।२७।।**

**भावार्थ :** वीरशैव सम्प्रदायका अनुयायीहरूका लागि सर्वस्व, समस्त तत्त्वहरूको प्रकाशक तथा समस्त दोषले रहित यस ग्रन्थको शुद्ध अन्तस्करण भएका विद्वान्हरूले खुबै आदर गरेका छन् ॥२७॥

**तेष्वागमेषु सर्वेषु पुराणेष्वखिलेषु च।**
**पुरा देवेन कथितं देव्यै तन्नन्दनाय च।।२८।।**

**भावार्थ :** प्राचीनकालमा समस्त आगमहरू तथा सम्पूर्ण पुराणहरूमा वर्णित यस सिद्धान्तलाई भगवान् शिवले देवी पार्वती तथा उनका पुत्र कार्तिकेयलाई बताउनुभएको थियो ॥२८॥

**तत्सम्प्रदायसिद्धेन रेणुकेन महात्मना।**
**गणेश्वरेण कथितमगस्त्याय पुनः क्षितौ।।२९।।**

**भावार्थ :** त्यस शिव सम्प्रदायमा प्रसिद्ध महिमाशाली गणेश्वर रेणुकले यस शास्त्रको उपदेश पृथ्वीमा महर्षि अगस्त्यलाई गर्नुभएको थियो ॥२९॥

**वीरशैवमहातन्त्रमेकोत्तरशतस्थलम् ।**
**अनुग्रहाय लोकानामभ्यधात् सुधियां वरः।।३०।।**

**भावार्थ :** मनीषिहरूमा श्रेष्ठ शिवयोगी शिवाचार्यले एक सौ एक स्थल अर्थात् विषयले युक्त भएको वीरशैव महातन्त्रको मनुष्यहरूमाथि अनुग्रह गर्नका लागि वर्णन गर्नुभयो ॥३०॥

**सर्वेषां शैवतन्त्राणामुत्तरत्वान्निरुत्तरम्।**
**नाम्ना प्रतीयते लोके यत्सिद्धान्तशिखामणिः।।३१।।**



**भावार्थ :** समस्त शैवतन्त्रहरूको उत्तर भाग अर्थात् अन्तिम हुनाले निरूत्तर (नास्ति उत्तरं यस्मात्) यो ग्रन्थ लोकमा सिद्धान्तशिखामणि नामले प्रसिद्ध छ। शिखाभन्दामाथि कुनै अङ्ग हुदैन तथा त्यसमा बाधिएको मणि सर्वोपरि हुन्छ, त्यसै प्रकारले यो ग्रन्थ वीरशैवसिद्धान्तको चर्चागर्ने वाला सर्वश्रेष्ठ ग्रन्थ हो ॥३१॥

**अनुगतसकलार्थे शैवतन्त्रैः समस्तैः**
**प्रकटितशिवबोधाद्वैतभावप्रसादे ।**
**विदधतु मतिमस्मिन् वीरशैवा विशिष्टाः**
**पशुपतिमतसारे पण्डितश्लाघनीये।।३२।।**

**भावार्थ :** हे विशिष्टवीरशैवका अनुयायिहरू! समस्त शैवतन्त्रहरूको तत्त्वलाई आफुमा समाहित गर्ने शिवज्ञानको अद्वैतभावयुक्त आनन्दलाई प्रकट गर्ने पाशुपत मतको सारभूत पण्डितहरूद्वारा श्लाघनीय यस ग्रन्थको अध्ययनका विषयमा आफ्नो मन लगाउनुहोस् ॥३२॥

***ॐ तत्सत् इति श्रीशिवगीतेषु सिद्धान्तागमेषु शिवाद्वैतविद्यायां शिवयोगशास्त्रे श्रीरेणुकागस्त्य संवादे वीरशैवधर्मनिर्णये श्रीशिवयोगिशिवाचार्यविरचिते श्रीसिद्धान्तशिखामणौ मङ्गलाचरण-श्रीशिवयोगिशिवाचार्यवंशवर्णनं नाम प्रथमः परिच्छेदः।***

**यस प्रकार श्रीसिद्धान्तशिखामणिको अनुक्रमवर्णन नामक प्रथम परिच्छेदको आचार्य हरिप्रसादअधिकारी कृत सुबोधिनी नेपाली व्याख्या पूर्णभयो ।**
**।। प्रथमपरिच्छेद पूर्ण भयो ।।**

❒❒❒

CC-0. Jangamwadi Math Digital Collection.

# द्वितीयः परिच्छेदः

## शिव-परब्रह्मणो निरूपणम्

**सच्चिदानन्दरूपाय सदसद्व्यक्तिहेतवे।**
**नमः शिवाय साम्बाय सगणाय स्वयम्भुवे।।१।।**

**भावार्थ :** सच्चिदानन्दरूप सत् अर्थात् भाव अर्थात् पारमेश्वरस्वरूप तथा असत् अर्थात् अभाव अर्थात् जागृत, स्वप्न, प्रपञ्च अथवा प्रातिभासिक एवं व्यावहारिक प्रपञ्चको अभिव्यक्तिका कारण, गणहरूले युक्त स्वयम्भू साम्बशिवलाई म नमस्कार गर्दछु ।।१।।

**सदाशिवमुखाशेषतत्त्वमौक्तिकशुक्तिकाम्।**
**वन्दे माहेश्वरीं शक्तिं महामायादिरूपिणीम्।।२।।**

**भावार्थ :** सदा शिव तत्त्वदेखि लिएर पृथ्वी पर्यन्त समस्त तत्त्वरूपी मोतीहरूको शूक्तिस्वरूप, शुद्धविद्यानामले जानिने महामाया आदिरूप महेश्वरकी शक्तिको म वन्दना गर्दछु ।।२।।

**अस्ति सच्चित्सुखाकारमलक्षणपदास्पदम्।**
**निर्विकल्पं निराकारं निरस्ताशेषविप्लवम्।।३।।**

**भावार्थ :** परब्रह्म सत्, चित्, आनन्दरूप लक्षणरहित निर्विकल्प निराकार तथा समस्त उपद्रव हरूलाई शान्त गर्ने परशिव हुनुहुन्छ ।।३।।

**परिच्छेदकथाशून्यं प्रपञ्चातीतवैभवम्।**
**प्रत्यक्षादिप्रमाणानामगोचरपदे स्थितम्।।४।।**

**भावार्थ :** त्यो ब्रह्म परिसीमनको वार्ता देखि रहित प्रपञ्च देखि पर वैभव सम्पन्न तथा प्रत्यक्ष अनुमान आदि प्रमाणहरूको अविषय छ किनकि अनुमान आदि प्रमाण पनि प्रत्यक्षमूलक एवं परिच्छिन्न हुन्छन् ।।४।।

**स्वप्रकाशविराजन्तमनामयमनौपमम् ।**
**सर्वज्ञं सर्वगं शान्तं सर्वशक्ति निरङ्कुशम्।।५।।**



**भावार्थ :** त्यो ब्रह्म स्वप्रकाश विशेषरूपले प्रकाशमान निर्मल अनुपमेय सर्वज्ञ सर्वव्यापी शान्त, सम्पन्न, तथा स्वतन्त्र छ ।।५।।

**शिवरुद्रमहादेवभवादिपदसंज्ञितम् ।**
**अद्वितीयमनिर्देश्यं परं ब्रह्म सनातनम्।।६।।**

**भावार्थ :** त्यो पर-ब्रह्म शिव, रूद्र, महादेव, भव, आदि पदहरूद्वारा ज्ञेय (जानिने योग्य) अद्वितीय, अर्निर्देश्य (निर्देश गर्न नसकिने) तथा सनातन छ ।।६।।

**तत्र लीनमभूत् पूर्वं चेतनाचेतनं जगत्।**
**स्वात्मलीनं जगत्कार्यं स्वप्रकाश्यं तदद्भुतम्।।७।।**

**भावार्थ :** सृष्टि देखि पहिले यो जड़चेतनात्मक जगत त्यसै परब्रह्ममा लीन थियो । यो जगत् रूपी अद्भुतकार्य स्वात्म अर्थात् परब्रह्ममा लीन रहदै स्वप्रकाश्य अर्थात् स्वयं परब्रह्मद्वारा प्रकाश्य छ ।।७।।

**शिवाभिधं परं ब्रह्म जगन्निर्मातुमिच्छया।**
**स्वरूपमादधे किञ्चित्सुखस्फूर्तिविजृम्भितम्।।८।।**

**भावार्थ :** शिवनामक ती परब्रह्मले जगत् रचनाको इच्छाले किञ्चित् आनन्द मिश्रित उल्लास युक्त स्वरूप धारण गरे ।।८।।

**निरस्तदोषसम्बन्धं निरुपाधिकमव्ययम्।**
**दिव्यमप्राकृतं नित्यं नीलकण्ठं त्रिलोचनम्।।९।।**

**भावार्थ :** परमशिवको त्यो स्वरूप दोषले रहित, उपाधि रहित, नाशरहित, नित्य, दिव्य, अप्राकृत नीलकण्ठ तथा त्रिलोचन (तीन आँखावाला) थियो।।९।।

**चन्द्रार्धशेखरं शुद्धं शुद्धस्फटिकसन्निभम्।**
**शुद्धमुक्ताफलाभासमुपास्यं गुणमूर्तिभिः।।१०।।**

**भावार्थ :** मस्तकमा अर्धचन्द्रभएको शुद्ध, शुद्ध स्फटिकका समान स्वच्छ, एवं देदीप्यमान, शुद्ध मोती जस्तो, तथा गुणमूर्तिहरू ब्रह्मा विष्णु रुद्रद्वारा पनि उपास्य (उपासना गर्न योग्य) थियो ।।१०।।

CC-0. Jangamwadi Math Digital Collection.

**विशुद्धज्ञानकरणं विषयं सर्वयोगिनाम्।**
**कोटिसूर्यप्रतीकाशं चन्द्रकोटिसमप्रभम्।।११।।**

**अप्राकृतगुणाधारमनन्तमहिमास्पदम् ।**

**भावार्थ :** विशुद्धज्ञानको असाधारण कारण, समस्य योगिहरूका ध्यानको विषय, करोडौं सूर्यका समान देदीप्यमान, करोडौं चन्द्रमाका समान कान्तियुक्त प्राकृतिकगुणहरूदेखि भिन्न, सर्वज्ञता, तृप्ति अनादिबोध आदि गुणहरूको आधार तथा अनन्त महिमाले युक्त थियो ॥११॥

**तदीया परमा शक्तिः सच्चिदानन्दलक्षणा।।१२।।**

**समस्तलोकनिर्माण–समवायस्वरूपिणी।**
**तदिच्छयाऽभवत् साक्षात्तत्स्वरूपानुसारिणी।।१३।।**

**भावार्थ :** उसकी सत् चित् तथा आनन्दलक्षणले युक्त भएकी परमाशक्ति समस्त लोकनिर्माणको समवायकारणरूप छन्, उनकै इच्छाले उनको स्वरूप जस्तै भइन् ॥१२-१३॥

**स शम्भुर्भगवान् देवः सर्वज्ञः सर्वशक्तिमान्।**
**जगत्सिसृक्षुः प्रथमं ब्रह्माणं सर्वदेहिनाम्।।**
**कर्तारं सर्वलोकानां विदधे विश्वनायकः।।१४।।**

**भावार्थ :** विश्वनायक भगवान् सर्वज्ञ सर्वशक्तिमान् ती शम्भुले संसार रचना गर्ने इच्छाले युक्त भएर सर्वप्रथम समस्त लोक तथा जीवहरूका कर्ता ब्रह्माको रचना गरे ॥१४॥

**तस्मै प्रथमपुत्राय शङ्करः शक्तिमान् विभुः।**
**सर्वज्ञः सकला विद्याः सानुग्रहमुपादिशत्।।१५।।**

**भावार्थ :** सर्वज्ञ सर्वशक्तिमान् तथा व्यापक भगवान् शंकरले आफ्ना त्यस प्रथम पुत्रलाई समस्त विद्याहरूको अनुग्रहपूर्वक उपदेश दिनुभयो ॥१५॥



**प्राप्तविद्यो महादेवाद् ब्रह्मा विश्वनियामकात्**
**समस्तलोकान्निर्मातुं समुद्यमपरोऽभवत्।**
**कृतोद्योगोऽपि निर्माणे जगतां शङ्कराज्ञया**
**अज्ञातोपायसम्पत्तेरभवन्माययाऽऽवृतः।।१६।।**

**भावार्थ :** विश्व नियामक महादेवबाट विद्याप्राप्त गर्ने ब्रह्मा समस्त लोकहरूको सृष्टि रचना कार्यमा लाग्नुभयो, शंकरका आज्ञाले संसार निर्माणमा प्रयत्नरत भएर पनि उपायहरूलाई न जान्नाका कारण ब्रह्मा मायाद्वारा आवृत्त अर्थात् किंकर्तव्यविमूढ भए ॥१६॥

**विधातुमखिलाँलोकानुपायं प्राप्तुमिच्छया।**
**पुनस्तं प्रार्थयामास देवदेवं त्रियम्बकम्।।१७।।**

**भावार्थ :** समस्त लोकहरूको रचनाका लागि उपाय प्राप्त गर्ने इच्छाले ब्रह्माले पुनः उन देवाधिदेव त्रिलोचनसंग प्रार्थना गरे ॥१७॥

**नमस्ते देवदेवेश! नमस्ते करुणाकर!।**
**अस्मदादिजगत्सर्वनिर्माणनविधिक्षम ।।१८।।**

**भावार्थ :** अब ब्रह्माजीद्वारा गरिएका प्रार्थनाको प्रकार बताइन्छ - हे देव देवेश! हजुरलाई मेरो नमस्कार छ । हे करूणाकर! म देखि लिएर समस्त जगत्को सृष्टि गर्नमा सक्षम हजुरलाई नमस्कार छ ॥१८॥

**उपायं वद मे शम्भो जगत्स्रष्टः जगत्पते ।**
**सर्वज्ञः सर्वशक्तिस्त्वं सर्वकर्ता सनातनः।।१९।।**

**भावार्थ :** हे शम्भु! हे संसारका स्वामी! मलाई उपाय बताउनुहोस् किनकि हजुर सर्वज्ञाता, सर्वशक्तिमान्, सर्वकर्ता तथा सनातन हुनुहुन्छ ॥१९॥

**इति संप्रार्थितः शम्भुर्ब्रह्मणा विश्वनायकः।**
**उपायमवदत् तस्मै लोकसृष्टिप्रवर्तनम्।।२०।।**

CC-0. Jangamwadi Math Digital Collection.

**भावार्थ :** यस प्रकारले ब्रह्मा जी द्वारा प्रार्थित विश्वनायक शिवले उनलाई (ब्रह्मालाई) लोकसृष्टि प्रवर्तक अर्थात् संसारको सृष्टि कसरी गर्नु पर्छ? यसको उपाय बताउनु भयो ।।२०।।

**उपायमीश्वरेणोक्तं लब्ध्वाऽपि चतुराननः।**
**न समर्थोऽभवत् कर्तुं नानारूपमिदं जगत्।।२१।।**

**भावार्थ :** ईश्वरद्वारा बताइएको उपाय प्राप्त गरेर पनि चतुरानन ब्रह्मा नानारूप भएका यस संसारको सृष्टि गर्नमा सफल हुनुभएन ।।२१।।

**पुनस्तं प्रार्थयामास ब्रह्मा विह्वलमानसः।**
**देवदेव महादेव जगत्प्रथमकारण।।२२।।**

**भावार्थ :** यस पछि सृष्टिकार्यमा असफलताका कारणले व्याकुलचित्त भएका, ब्रह्माले पुन: उन शिव सँग प्रार्थना गर्दै भन्नु भयो - हे देवाधिदेव महादेव! हे संसारका प्रथमकारण! हजूरलाई बारंबार नमस्कार छ ।।२२।।

**नमस्ते सच्चिदानन्द स्वेच्छाविग्रहराजित।**
**भव शर्व महेशान सर्वकारणकारण।।२३।।**

**भवदुक्तो ह्युपायो मे न किञ्चिज्ज्ञायतेऽधुना।**

**भावार्थ :** हे सच्चिदानन्द! स्वेच्छाले शरीर धारण गर्ने, भव, शर्व, महेश्वर आदि नामले जानिने समस्त कारण का पनि कारण! हजूरद्वारा बताएको उपाय मैले केही बुझिन ।।२३।।

**सृष्टिं विधेहि भगवन् प्रथमं परमेश्वर।**
**ज्ञातोपायस्ततः कुर्यां जगत्सृष्टिमुमापते।।२४।।**

**भावार्थ :** हे परमेश्वर! हे भगवन्! पहिले अर्थात् सर्वप्रथम हजूरले सृष्टि गरेर मलाई देखाई बक्सियोस् । हे उमापते! त्यस पछाड़ी उपाय जानेर म संसारको रचना गर्नें छु ।।२४।।



**इत्येवं प्रार्थितः शम्भुर्ब्रह्मणा विश्वयोनिना।**
**ससर्जात्मसमप्रख्यान् सर्वगान् सर्वशक्तिकान्।।२५।।**

**प्रबोधपरमानन्दपरिवाहितमानसान् ।**
**प्रमथान् विश्वनिर्माणप्रलयापादनक्षमान्।।२६।।**

**भावार्थ :** विश्वकारणभूत ब्रह्माजी द्वारा यस प्रकार प्रार्थना गरेपछि भगवान् शिवले आफुजस्तै शोभा भएका प्रमथगणहरूको सृष्टि गर्नु भयो । ती सबै सर्वगामी, सर्वशक्तिमान्, प्रबोधजनित परमानन्दले परिपूर्ण चित्त भएका तथा विश्वको रचना गर्नमा समर्थ थिये ।।२५-२६।।

**तेषु प्रमथवर्गेषु सृष्टेषु परमात्मना ।**
**रेणुको दारुकश्चेति द्वावभूतां शिवप्रियौ ।।२७।।**

**भावार्थ :** परमात्मा शिवद्वारा रचित ती प्रमथगणहरूमा **रेणुक** तथा **दारुक** नामका दुइटा प्रमथ शिवजीका अत्यन्तै प्रिय भये ।।२७।।

**सर्वविद्याविशेषज्ञौ सर्वकार्यविचक्षणौ।**
**मायामलविनिर्मुक्तौ महिमातिशयोज्ज्वलौ।।२८।।**

**भावार्थ :** अब पाँच श्लोकमा ती दुई गणेश्वरहरूको महिमा वर्णन गरिन्छ - यिनी दुवै समस्त विचारहरूमा पारङ्गत, सकलकार्य सम्पादनमा कुशल, मायाको मलबाट रहित आफ्नै महिमाले अत्यन्त तेजस्वी थिये ।।२८।।

**आत्मानन्दपरिस्फूर्तिरसास्वादनलम्पटौ ।**
**शिवतत्त्वपरिज्ञानतिरस्कृतभवामयौ ।।२९।।**

**भावार्थ :** आत्मानन्दका परिस्फुरणबाट उत्पन्न रसको आस्वादन गर्ने तथा शिवतत्त्वका परिपूर्ण ज्ञानद्वारा संसाररूपी आमय अर्थात् रोगबाट टाढा थिये ।।२९।।

**नानापथमहाशैवतन्त्रनिर्वाहतत्परौ ।**
**वेदान्तसारसर्वस्वविवेचनविचक्षणौ ।।३०।।**

CC-0. Jangamwadi Math Digital Collection.

**भावार्थ :** अनेक मार्गयुक्त शिवाद्वय तन्त्रका परिपालनमा तत्पर तथा वेदान्तसार सर्वस्वको विवेचन गर्नमा सधैं तत्पर रहन्थे ॥३०॥

**नित्यसिद्धौ निरातङ्कौ निरङ्कुशपराक्रमौ।**
**तादृशौ तौ महाभागौ संवीक्ष्य परमेश्वरः।।३१।।**

**समर्थौ सर्वकार्येषु विश्वासपरमाश्रितौ।**
**अन्तःपुरद्वारपालौ निर्ममे नियतौ विभुः।।३२।।**

**भावार्थ :** नित्यसिद्ध, आतङ्करहित, अजेय पराक्रम भएका भाग्यशाली ती दुइलाई देखेर परमेश्वरले इनलाई समस्त कार्य सम्पन्नगर्नमा समर्थ तथा परम विश्वसनीय माने । फलतः भगवान् शिवले यी दुवैलाई अन्तःपुरका द्वारपालका रूपमा नियुक्त गर्नुभयो ॥३१-३२॥

**गणेश्वरौ रेणुकदारुकावुभौ विश्वासभूतौ नवचन्द्रमौलेः।**
**अन्तःपुरद्वारगतौ सदा तौ वितेनतुर्विश्वपतेस्तु सेवाम्।।३३।।**

**भावार्थ :** यस प्रकार रेणुक तथा दारुक यी दुवै बालचन्द्र द्वारा भासित (प्रकाशित) मस्तकयुक्त शिवका विश्वासपात्र भएर सदा अन्तःपुरका द्वारमा उभिएर विश्वरक्षक भगवान् शिवका सेवामा संलग्न भये ॥३३॥

***ॐ तत्सत् इति श्रीशिवगीतेषु सिद्धान्तागमेषु शिवाद्वैतविद्यायां शिवयोगशास्त्रे श्रीरेणुकागस्त्यसंवादे वीरशैवधर्मनिर्णये श्रीशिवयोगिशिवाचार्यविरचिते श्रीसिद्धान्तशिखामणौ जगत्सृष्टिविचारे-रेणुकदारूकावतरणं नाम द्वितीयः परिच्छेदः।***

**यस प्रकार श्रीसिद्धान्तशिखामणिको अनुक्रमवर्णन नामक द्वितीयपरिच्छेदको आचार्य हरिप्रसादअधिकारी कृत सुबोधिनी नामक नेपाली व्याख्या पूर्णभयो ।**
**।। द्वितीयपरिच्छेद पूर्ण भयो ।।**



CC-0. Jangamwadi Math Digital Collection.

# तृतीयः परिच्छेदः

## रेणुकाचार्यस्य भूलोकावतरणं

### कैलासवर्णनम्

**कदाचिदथ कैलासे कलधौतशिलामये।**
**गन्धर्ववामनयनाक्रीडामौक्तिकदर्पणे ।।१।।**

**भावार्थ :** प्रारम्भदेखि सात श्लोक सम्म कैलासको वर्णन गरिदैछ त्यस पिछाडी एक पटक चाँदीका शिलाहरूले युक्त तथा गन्धर्व स्त्रीहरूका क्रीडाका लागि मौक्तिकमय दर्पणतुल्य कैलास पर्वतमाथि भगवान् शिव विराजमान हुनुभएको थियो ।।१।।

**मन्दारवकुलाशोकमाकन्दप्रायभूरुहे ।**
**मल्लीमरन्दनिष्यन्दपानपीनमधुव्रते ।।२।।**

**भावार्थ :** त्यस पर्वत माथि कल्पवृक्ष, पारिजात, मौलसिरी, अशोक, आँप, आदिका सुन्दर वृक्ष उम्रिएका थिये । बेली, चमेली, आदि पुष्पको रस पान गरेर त्यहाँका भ्रमरहरू परमानन्दित तथा स्थूल आकार का थिये ।।२।।

**कुङ्कुमस्तबकामोदकूलङ्कषहरिन्मुखे ।**
**कलकण्ठकुलालापकन्दलद्रागबन्धुरे ।।३।।**

**भावार्थ :** दिशाहरू रक्तपुष्प (रातोफूल) का गुच्छाहरूबाट उत्पन्न सुगन्धले परिपूर्ण नदीहरूले युक्त थिये । त्यो पर्वत कोइलीपक्षीहरूका मधुरगुञ्जनद्वारा शोभायमान भैरहेको थियो ।।३।।

**किन्नरीगीतमाधुर्यपरिवाहितगह्वरे ।**
**सानन्दवरयोगीन्द्रवृन्दालङ्कृतकन्दरे ।।४।।**

**भावार्थ :** त्यस पर्वतका गुफाहरू किन्नरस्त्रीहरूका गीतमाधुर्यले व्याप्त थिये। कन्दराहरू ब्रह्मानुभवले युक्तभएका योगिजनसमूहद्वारा अलङ्कृत थियो ।।४।।



**हेमारविन्दकलिकासुगन्धिरसमानसे ।**
**शातकुम्भमयस्तम्भशतोत्तुङ्गविराजिते ।।५।।**

**भावार्थ :** हिमालयस्थ मानसरोवर स्वर्णिमकमलका कोपिलाहरूको सुगन्धि रसले युक्त थियो । सुनद्वारा बनाइएका सैकडौं अग्ला अग्ला स्तम्भहरू त्यहाँ विराजमान थिये ।।५।।

**माणिक्यदीपकलिकामरीचिद्योतितान्तरे।**
**द्वारतोरणसंरूढशङ्खपद्मनिधिद्वये ।।६।।**

**भावार्थ :** त्यस पर्वतको भित्री भाग माणिक्य दीपकलिकाका किरणहरूले प्रकाशमान थियो तथा उसका द्वारमा स्थित तोरण शङ्ख र पद्म यी दुइ निधिले युक्त थियो ।।६।।

**मुक्तातारकितोदारवितानाम्बरमण्डिते ।**
**स्पर्शलक्षितवैडूर्यमयभित्तिपरम्परे ।।७।।**

**भावार्थ :** त्यो पर्वत मोतीरत्न जडित विशाल वस्त्रद्वारा निर्मित तम्बू (चदुंवा) ले सुशोभित थियो । त्यसका भित्तामा स्पर्शबाट जानिने वैदूर्य (नीलम) मणिहरू जडिएका थिये । तिनको ज्ञान स्पर्शबाट मात्र हुन सक्थ्यो न कि दर्शनबाट ।।७।।

**सञ्चरत्प्रमथश्रेणीपदवाचालनूपुरे ।**
**प्रवालवलभीशृङ्गशृङ्गारमणिमण्टपे ।।८।।**

**भावार्थ :** त्यस स्थानमा भ्रमण गरिरहने प्रमथगणहरूका खुट्टामा बाँधिएका घुँघुरूको ध्वनि सर्वदा गुञ्जायमान रहन्थ्यो । प्रबालद्वारा निर्मित बलभी (छानो) तथा शृङ्ग शिखर युक्त अलङ्कृत मणिहरूद्वारा बनाइएका मण्डपहरू त्यहाँ शोभायमान थिये ।।८।।

**वन्दारुदेवमुकुटमन्दाररसवासितम् ।**
**रत्नसिंहासनं दिव्यमध्यस्तं परमेश्वरम्।।९।।**

CC-0. Jangamwadi Math Digital Collection.

**भावार्थ :** वन्दनामा निरत भएका देवताहरूका मुकुटमा सजाइएका कल्पवृक्षका पुष्परागद्वारा सुगन्धित भएका रत्नसिंहासनमा विराजमान परमेश्वरको सेवा उनका पारिवारीकजनहरूद्वारा भैरहेको थियो ॥९॥

**तमास्थानगतं देवं सर्वलोकमहेश्वरम् ।**
**त्रय्यन्तकमलारण्यविहारकलहंसकम् ॥१०॥**

**भावार्थ :** यस पिछाडी परमेश्वरका स्वरूप एवं वैभवको वर्णन गरिन्छ देवताहरूलेयुक्त भएका स्थानमा विराजमान समस्त देवताका स्वामी ती परमेश्वर वेदान्त अर्थात् उपनिषद्रूपी कमलपुष्पसमूहमा विहार गर्ने राजहंसका समान शोभाले युक्त थिये ॥१०॥

**उदारगुणमोंकारशुक्तिकापुटमौक्तिकम् ।**
**सर्वमङ्गलसौभाग्यसमुदायनिकेतनम् ॥११॥**

**भावार्थ :** ती परमेश्वर उदारता आदि समस्त सद्गुणहरुले युक्त, ओंकाररूपी शुक्तिका मोती तथा समस्त मङ्गलकारी सौभाग्य समूहका भण्डार अर्थात् खजाना थिये ॥११॥

**संसारविषमूर्च्छालुजीवसञ्जीवनौषधम् ।**
**नित्यप्रकाशनैर्मल्यकैवल्यसुरपादपम् ॥१२॥**

**भावार्थ :** ती परमेश्वर अर्थात् भगवान् शिव संसाररूपी विषद्वारा मूर्च्छित जीवनहरूका लागि संजीवनी अर्थात् अमृत औषधी तथा नित्यप्रकाश एवं निर्मलताले युक्त कैवल्य (मोक्ष)का कल्पवृक्ष थिये ॥१२॥

**अनन्तपरमानन्दमकरन्दमधुव्रतम् ।**
**आत्मशक्तिलतापुष्यत्त्रिलोकीपुष्पकोरकम् ॥१३॥**

**भावार्थ :** ती परमेश्वर अनन्त परमानन्दको सेवनगर्ने मधुप(भ्रमर) तथा आफ्नो शक्तिरूपी लताद्वारा पुष्ट त्रिभुवनरूपी पुष्पका कोपिलाका समान शोभायमान हुनुहुन्थ्यो ॥१३॥



**ब्रह्माण्डकुण्डिकाषण्डपिण्डीकरणपण्डितम् ।**
**समस्तदेवताचक्रचक्रवर्तिपदे स्थितम् ॥१४॥**

**भावार्थ :** ती परमेश्वर ब्रह्माण्डरूपी कुण्डिकाका टुक्राहरूलाई जोड्नमा निपुण समस्त देवसमूहका चक्रवर्ती प्रतीत हुनुभैरहेको थियो ॥१४॥

**चन्द्रबिम्बायुतच्छायादायादद्युतिविग्रहम् ।**
**माणिक्यमुकुटज्योतिर्मञ्जरीपिञ्जराम्बरम् ॥१५॥**

**भावार्थ :** ती भगवान् शङ्कर हज्जारौं चन्द्रमाको प्रकाश समान कान्तिले युक्त शरीरभएका तथा माणिक्य जडित मुकुट का प्रकाशकिरणले उनका वस्त्रहरू प्रकाशित थिये ॥१५॥

**चूडालं सोमकलया सुकुमारबिसाभया ।**
**कल्याणपुष्पकलिकाकर्णपूरमनोहरम् ॥१६॥**

**भावार्थ :** ती परमेश्वरले कोमल विसतन्तु (कमलतन्तु) का समान चन्द्रकलालाई केशगुच्छामाथि धारण गरेको थियो तथा कल्याणरूपी फूलका कोपिला उनका कर्णपूरका रूपमा अत्यन्तशोभायमान भैरहेका थिये ॥१६॥

**मुक्तावलयसम्बद्धमुण्डमालाविराजितम् ॥१७॥**
**पर्याप्तचन्द्रसौन्दर्यपरिपन्थिमुखश्रियम् ॥१७॥**

**भावार्थ :** ती परमेश्वर मोतिहरूका मालामा गुँथिएका मुण्डमालाले अत्यन्त सुशोभित थिये, उनको मुखशोभा प्रचुर चन्द्रकान्तिको सौन्दर्य संग प्रतिस्पर्द्धा गर्दथ्यो ॥१७॥

**प्रातःसम्फुल्लकमलपरियायत्रिलोचनम् ।**
**मन्दस्मितमितालापमधुराधरपल्लवम् ॥१८॥**

**भावार्थ :** उनका तीन नेत्र प्रातःकालमा फूलेका कमल जस्ता थिये तथा अधरोष्ठ पल्लव मन्दमुस्कान तथा मित (थोरै) भाषणले अत्यन्त सुन्दर थिये ॥१८॥

CC-0. Jangamwadi Math Digital Collection.

गण्डमण्डलपर्यन्तक्रीडन्मकरकुण्डलम् ।
कालिम्ना कालकूटस्य कण्ठनाले कलङ्कितम्।।१९।।

**भावार्थ :** मकर (गोही) को आकृतियुक्त कर्णाभरण उनका गाला सम्म झुण्डिएका थिए तथा कण्ठ (घाँटी) को नाली कालकूट विषको कालिमाले कलंकित अर्थात् नीलो भएको थियो ॥१९॥

मणिकङ्कणकेयूरमरीचिकरपल्लवैः ।
चतुर्भिः संविराजन्तं बाहुमन्दारशाखिभिः।।२०।।

**भावार्थ :** कल्पवृक्षका शाखाका समान सुन्दर तथा मणिजड़ित कंकण धारण गरेका करपल्लवयुक्त चार भुजाद्वारा ती परमशोभायमान थिये ॥२०॥

गौरीपयोधराश्लेषकृतार्थभुजमध्यमम् ।
सुवर्णब्रह्मसूत्राङ्कं सूक्ष्मकौशेयवाससम्।।२१।।

**भावार्थ :** उनका भुजाहरूको मध्यभाग अर्थात् छाती गौरीका स्तनले संश्लिष्ट थियो तथा उनले सुवर्णको जनै एवं सूक्ष्म रेशमी वस्त्र धारण गरेको थियो ॥२१॥

नाभिस्थानावलम्बिन्या नवमौक्तिकमालया।
गङ्गयेव कृताश्लेषं मौलिभागावतीर्णया।।२२।।

**भावार्थ :** नाभि स्थानसम्म झुण्डिएको मोतीको माला शिरबाट उत्रिएर गंगाजीले उनको आलिंगन गरे जस्तै सुशोभित भईरहेको थियो ॥२२॥

पदेन मणिमञ्जीरप्रभापल्लवितश्रिया।
चन्द्रवत्स्फाटिकं पीठं समावृत्य स्थितं पुरः।।२३।।

**भावार्थ :** मणि जड़ित मञ्जरीको कान्तिले पल्लव जस्तो शोभा युक्त चरणलाई चन्द्रसमान जाज्वल्यमान स्फटिकद्वारा निर्मित पीठमा (आसनमा) राखेर विराजमान हुनुभएको थियो ॥२३॥



वामपार्श्वनिवासिन्या मङ्गलप्रियवेषया ।
समस्तलोकनिर्माणसमवायस्वरूपया ।।२४।।

**भावार्थ :** अब पारमेश्वरी शक्ति उमाको वर्णन गरिन्छ— परमेश्वरका वामभागमा उमा विराजमान थिइन्। मंगलमय तथा प्रिय भेषभूषाले युक्त भएकी ती उमा समस्त लोक रचनाको समवायीकारणरूपा थिइन् ॥२४॥

इच्छाज्ञानक्रियारूपबहुशक्तिविलासया।
विद्यातत्त्वप्रकाशिन्या विनाभावविहीनया।।२५।।

**भावार्थ :** ती भवानी इच्छाज्ञान क्रियारूपी अनेक शक्तिहरूले सुशोभित थिइन्। तथा शुद्ध विद्या तत्त्वकी प्रकाशिका हुनका साथै शिवका साथमा उनको अविनाभाव (कहिले अलग नहुनेवाला) सम्बन्ध थियो ॥२५॥

संसारविषकान्तारदाहदावाग्निलेखया।
धम्मिल्लमल्लिकामोदझङ्कुर्वद्भृङ्गमालया।।२६।।

**भावार्थ :** ती संसाररूपी विषमय जंगललाई जलाउनका लागि दावाग्नि ज्वालाका समान शोभायमान थिइन् तथा उनका वेणीमा (केशको चुल्ठोमा) गुँथिएका जूही पुष्पका सुगन्धले आकृष्ट भएर भृङ्गमाला (भमराको समूह) झंकार गरीरहन्थ्यो ॥२६॥

सम्पूर्णचन्द्रसौभाग्यसंवादिमुखपद्मया।
नासामौक्तिकलावण्यनाशीरस्मितशोभया।।२७।।

**भावार्थ :** उनको मुखमण्डल पूर्णचन्द्रका सौन्दर्यलाई तिरस्कृत गर्नेवाला थियो, नाकमा जड़ित मोतीका सौन्दर्यले उनको नासाछिद्र मन्दहास गरीरहेको जस्तो प्रतीत हुन्थ्यो ॥२७॥

मणिताटङ्करङ्गान्तर्वलितापाङ्गलीलया ।
नेत्रद्वितयसौन्दर्यनिन्दितेन्दीवरत्विषा ।।२८।।

CC-0. Jangamwadi Math Digital Collection.

**भावार्थ :** ती उमा मणिजडित ताटंक (कानको आभरण) रूपी रंगमञ्चमा अपांगलीला (कटाक्ष विक्षेप) गरीरहे जस्तो प्रतीत हुन्थ्यो । आफ्ना दुई नेत्रका सौन्दर्यले नीलकमलको कान्तिलाई पनि तिरस्कृत गरीरहेकी थिइन् ।।२८।।

**कुसुमायुधकोदण्डकुटिलभ्रूविलासया।।२९।।**
**बन्धूकवुसुमच्छायाबन्धुभूताधरश्रिया।।२९।।**

**भावार्थ :** उनको भ्रूविलास (आँखी भौं घुमाउने कला) कामदेवको धनुषका समान वक्र (बाङ्गो) थियो तथा ओठको शोभा शालवृक्षको छाँया जस्तो थियो ।।२९।।

**कण्ठनालजितानङ्गकम्बुबिब्बोकसम्पदा ।**
**बाहुद्वितयसौभाग्यवञ्चितोत्पलमालया ।।३०।।**

**भावार्थ :** ती उमा कण्ठनाल (घाँटी) बाट निर्गत शब्दद्वारा कामदेवका शङ्खको ध्वनिलाई तिरस्कृत गर्दथिन् तथा दुवै भुजाका सौन्दर्यले नीलकमलका शोभालाई पनि तुच्छ सिद्ध गर्दथिन् ।।३०।।

**स्थिरयौवनलावण्यशृङ्गारितशरीरया ।**
**अत्यन्तकठिनोत्तुङ्गपीवरस्तनभारया ।।३१।।**

**भावार्थ :** उनको शरीर स्थिर यौवनका लावण्य(सौन्दर्य) ले शृङ्गारयुक्त प्रतीत भईरहेको थियो, ती अत्यन्त कठिन उच्च तथा फैलिएका स्तनभारले युक्त हुनाले नम्र अर्थात् निउरेकी थिइन् ।।३२।।

**मृणालवल्लरीतन्तुबन्धुभूतावलग्नया ।**
**शृङ्गारतटिनीतुङ्गपुलिनश्रोणिभारया ।।३२।।**

**भावार्थ :** उनको कमर कमलनालका तन्तुका समान पातलो थियो ती उमा शृङ्गरूपी नदीका अग्ला अग्ला किनारा जस्ता नितम्बका भारले अलसगमना (बिस्तारै हिड्ने वाली) थिइन् ।।३३।।

**कुसुम्भकुसुमच्छायाकोमलाम्बरशोभया।**
**शृङ्गारोद्यानसंरम्भरम्भास्तम्भोरुकाण्डया।।३३।।**



**भावार्थ :** कुसुम्भ (बर्राको फूल) पुष्पको रङ्गयुक्त कोमलवस्त्रले ती शोभायमान थिइन्, उनका जङ्घाहरू शृंगार उद्यानका शोभायुक्त कदली (केरा) का स्तम्भ जस्ता थिये ।।३३।।

**चूतप्रवालसुषुमासुकुमारपदाब्जया ।**
**स्थिरमङ्गलशृङ्गारभूषणालङ्कृताङ्गया।।३४।।**

**भावार्थ :** उनका चरण आँपका कोमल नयाँ नयाँ कोपिलाहरूका समान सुन्दर तथा सुकुमार थिये, उनका अङ्गहरू स्थायी मंगलमय शृङ्गारयुक्त आभूषणहरूले अलंकृत थिये ।।३४।।

**हारनूपुरकेयूरचमत्कृतशरीरया ।**
**चक्षुरानन्दलतया सौभाग्यकुलविद्यया।।३५।।**

**भावार्थ :** उनको शरीर, हार(गलाको आभरण) नूपुर (चरणको अलंकार) र केयूर (भूजाहरूको आभूषण) ले चम्किरहेको थियो । आखाँहरू आनन्दका लताहरू समान थिये, परिणामतः तिनी सौभाग्य कुलविद्या स्वरूपा थिइन् ।।३५।।

**उमया सममासीनं लोकजालकुटुम्बया।**
**अपूर्वरूपमभजन् परिवाराः समन्ततः।।३६।।**

**भावार्थ :** लोक समूहका कुटुम्बले युक्त भएकी ती उमाका साथमा भगवान् शिव विराजमान हुनुहुन्थ्यो । यस्ता अपूर्वरूप भएका भगवान उमानाथको उनका परिवारी जनहरू सबैतिरबाट सेवा गरिरहेका थिये ।।३६।।

**पुण्डरीकाकृतिं स्वच्छं पूर्णचन्द्रसहोदरम्।**
**दधौ तस्य महालक्ष्मीः सितमातपवारणम्।।३७।।**

**भावार्थ :** महालक्ष्मीले उनको छत्र धारण गरेकी थिइन्, जुन छत्र कमल-पुष्पको आकारभएको उज्वल पूर्णचन्द्र जस्तो तथा श्वेत वर्णको थियो ।।३७।।

**तन्त्रीझङ्कारशालिन्या सङ्गीतामृतविद्यया।**
**उपतस्थे महादेवमुपान्ते च सरस्वती।।३८।।**

CC-0. Jangamwadi Math Digital Collection.

**भावार्थ :** छेउमा सरस्वती वीणाको झंकारले युक्त संगीतरूपी अमृतविद्याद्वारा महादेवको उपासना गरिरहेकी थिइन् ॥३८॥

**झणत्कङ्कणजातेन हस्तेनोपनिषद्वधूः।**
**ओंकारतालवृन्तेन वीजयामास शङ्करम्॥३९॥**

**भावार्थ :** उननिषद् रूपी वधू (पत्नी) झंकारयुक्त चुराले युक्त भएका हातहरूले ॐकाररूपी पंखाद्वारा शंकरको सेवा गरिरहेकी थिइन् ॥३९॥

**चलच्चामरिकाहस्ता झङ्कुर्वन्मणिकङ्कणाः।**
**आसेवन्त तमीशानमभितो दिव्यकन्यकाः॥४०॥**

**भावार्थ :** जस्का हातमा चमर चलिरहेका थिये तथा मणिजड़ित चुराहरू झंकार गरिरहेका थिये, यस्ता इन्द्राणी आदि दिव्य कन्याहरू सबैतिरबाट ती परमेश्वरको सेवा गरिरहेका थिये ॥४०॥

**चामराणां विलोलानां मध्ये तन्मुखमण्डलम्।**
**रराज राजहंसानां भ्रमतामिव पङ्कजम्॥४१॥**

**भावार्थ :** चलायमान चमरहरूका मध्येमा ती शङ्करजीको मुखमण्डल घुम्दै गरेका राजहंसहरूका बीचमा स्थित कमलपुष्प जस्तै शोभायमान भईरहेको थियो ॥४१॥

**मन्त्रेण तमसेवन्त वेदाः साङ्गविभूतयः ।**
**भक्त्या चूडामणिं कान्तं वहन्त इव मौलिभिः॥४२॥**

**भावार्थ :** अङ्गरूपी विभूतिहरूले युक्त वेदपुरूष आफ्ना उपनिषद्रूपी शिरहरूमा मनोहर चूडामणिका रूपमा धारण गरिएकी भक्तिका साथमा मन्त्रहरूको उच्चारणद्वारा ती शङ्करजीको सेवा गरिरहेका थिये ॥४२॥

**तदीयायुधधारिण्यस्तत्समानविभूषणाः ।**
**अङ्गभूताःस्त्रियः काश्चिदासेवन्त तमीश्वरम्॥४३॥**



**भावार्थ :** ती वेदका अङ्गभूत दिव्य स्त्रीहरू उनका अस्त्र-शस्त्रहरूलाई धारण गरेर उनकै समान आभूषणहरूले अलंकृत भएर ती ईश्वरको सेवा गरिरहेका थिये ॥४३॥

**आप्ताधिकारिणः केचिदनन्तप्रमुखा अपि।**
**अष्टौ विद्येश्वरा देवमभजन्त समन्ततः॥४४॥**

**भावार्थ :** अधिकार प्राप्त अनन्त आदि उत्तम कोटिका आठ विश्वेश्वरहरू पनि चारैतिरबाट उनको सेवा गरिरहेका थिये ॥४४॥

**ततो नन्दी महाकालश्चण्डो भृङ्गी रिटिस्ततः।**
**घण्टाकर्णः पुष्पदन्तः कपाली वीरभद्रकः॥४५॥**

**एवमाद्या महाभागा महाबलपराक्रमाः।**
**निरङ्कुशमहासत्त्वा भेजिरे तं महेश्वरम्॥४६॥**

**भावार्थ :** यस पछाड़ि नन्दी, महाकाल, चण्ड, भृंगी, रिटि, घण्टाकर्ण, पुष्पदन्त, कपाली, वीरभद्र आदि प्रमथ गणहरू जो महाबली महापराक्रमी स्वतन्त्र महासत्ववान् थिये । यिनीहरू पनि ती परमेश्वरको सेवामा सर्वदा संलग्न रहन्थे ॥४५-४६॥

**अणिमादिकमैश्वर्यं येषां सिद्धेरपोहनम्।**
**ब्रह्मादयःसुरा येषामाज्ञालङ्घनभीरवः॥४७॥**

**भावार्थ :** अब ती प्रमथगणहरूको विशेषता बताइन्छ - ती प्रमथगणहरूको सिद्धिको सामु अणिमा, महिमा, लघिमा, गरिमा, प्राप्ति, प्राकाम्य, ईशित्व, र वशित्व यी आठ सिद्धिहरू पनि तुच्छ प्रतीत हुन्थे । ब्रह्मा आदि देवताहरू पनि तिनका आज्ञाको उल्लङ्घन गर्नमा भयभीत हुन्थे ॥४७॥

**मोक्षलक्ष्मीपरिष्वङ्गमुदिता येऽन्तरात्मना।**
**येषामीषत्करं विश्वसर्गसंहारकल्पनम्॥४८॥**

CC-0. Jangamwadi Math Digital Collection.

**भावार्थ :** तिनीहरू अन्तरात्मामा मोक्षलक्ष्मीको आलिंगन गरेर आनन्दमग्न रहन्थे, अतः तिनका लागि विश्वको सृष्टि एवं संहारको कार्य अत्यन्त सरल थियो, अर्थात् तिनका लागि अत्यन्त सजिलो काम थियो ॥४८॥

**ज्ञानशक्तिः परा येषां सर्ववस्तुप्रकाशिनी।**
**आनन्दकणिका येषां हरिब्रह्मादिसम्पदः॥४९॥**

**भावार्थ :** तिनको पराज्ञानशक्ति समस्त वस्तुहरूलाई प्रकाशित गर्नमा समर्थ थियो तथा विष्णु, ब्रह्मा आदिको समस्त वैभव तिनका साथमा रहेका आनन्दकणको बराबर मात्र थियो ॥४९॥

**आकाङ्क्षन्ते पदं येषां योगिनो योगतत्पराः।**
**काङ्क्षणीयफलो येषां सङ्कल्पः कल्पपादपः॥५०॥**

**भावार्थ :** योगमा तत्पर योगीहरू तिनका चरणकमलको सेवा गर्नमा इच्छुक रहन्छन् तिनको संकल्प नै मनले चिताएको फल दिने वाला कल्पवृक्ष हो ॥५०॥

**कर्मकालादिकार्पण्यचिन्ता येषां न विद्यते।**
**येषां विक्रमसन्नाहा मृत्योरपि च मृत्यवः॥५१॥**

**ते सारूप्यपदं प्राप्ताः प्रमथा भेजिरे शिवम्॥५२॥**

**भावार्थ :** जसलाई कर्म एवं काल आदिबाट उत्पन्न हुने दुःखको चिन्ता हुँदैन किनकि तिनका पराक्रमपूर्ण कार्यहरू मृत्युका पनि मृत्युतुल्य हुन्छन्। भगवान् शिवका सारूप्य पद प्राप्तगरेका ती प्रमथगणहरू निरन्तर शिवका सेवामा निरत रहन्थे ॥५१॥

**ब्रह्मोपेन्द्रमहेन्द्राद्या विश्वतन्त्राधिकारिणम्।**
**आयुधालङ्कृतप्रान्ताः परितस्तं सिषेविरे॥५२॥**

**भावार्थ :** ब्रह्मा, विष्णु, देवराज इन्द्र आफ्ना आफ्ना शस्त्रहरूले सुसज्जित भएर विश्वविस्तारका अधिकारी ती भगवान् शिवको सेवामा सबै प्रकारले तत्पर रहन्थे ॥५२॥



**आदित्या वसवो रुद्रा यक्षगन्धर्वकिन्नराः।**
**दानवा राक्षसा दैत्याः सिद्धा विद्याधरोरगाः॥**
**अभजन्त महादेवमपरिच्छिन्नसैनिकाः॥५३॥**

**भावार्थ :** द्वादशसूर्य, अष्टावसु, एकादशरूद्र, कुबेर आदि यक्ष हाहा, हूहू आदि गन्धर्व, अश्वमुख आदि किन्नर, बाण आदि दानव, रावण आदि राक्षस, तारक आदि दैत्य, आदिनाथ आदि सिद्ध, मणिधर आदि विद्याधर, शेषनाग आदि सर्प, असंख्य सैन्य बलले युक्त भएर देवाधिदेव महादेवको सेवामा संलग्न रहन्थे ॥५३॥

**वसिष्ठो वामदेवश्च पुलस्त्यागस्त्यशौनकाः।**
**दधीचिर्गौतमश्चैव सानन्दशुकनारदाः॥५४॥**

**उपमन्युभृगुव्यासपाराशरमरीचयः ।**
**इत्याद्या मुनयः सर्वे नीलकण्ठं सिषेविरे॥५५॥**

**भावार्थ :** वशिष्ठ, वामदेव, पुलस्त्य, अगस्त्य, शौनक, दधीचि, गौतम, सानन्द, शुकदेव, नारद, उपमन्यु, भृगु, व्यास, पराशर, मरीचि, आदि समस्त मुनिहरू ती नीलकण्ठ भगवानको सेवामा संलग्न थिये ॥५४-५५॥

**पार्श्वस्थपरिवाराणां विमलाङ्गेषु बिम्बितः।**
**सर्वान्तर्गतमात्मानं स रेजे दर्शयन्निव॥५६॥**

**भावार्थ :** छेउमा रहेका परिवारहरूका निर्मल अंगमा प्रतिबिम्बित ती भगवान शिव आफूलाई सबैका अन्तरात्मामा विराजमान देखाउँदै शोभायमान भइरहेका थिये ॥५६॥

**क्षणं स शम्भुर्देवानां कार्यभागं निरूपयन्।**
**क्षणं गन्धर्वराजानां गानविद्यां विभावयन्॥५७॥**

**भावार्थ :** भगवान् शम्भु एक क्षणका लागि देवताहरूका कार्यको निर्देशन गर्नु हुन्थ्यो भने द्वितीय क्षणमै गन्धर्वहरूद्वारा गाइएको गानविद्याको श्रवण गर्नमा तल्लीन हुनुहुन्थ्यो ॥५७॥

CC-0. Jangamwadi Math Digital Collection.

**ब्रह्मविष्ण्वादिभिर्देवैः क्षणमालापमाचरन्।**
**क्षणं देवमृगाक्षीणां लालयन्नृत्यविभ्रमम्।।५८।।**

**भावार्थ :** कहिले क्षणभर ब्रह्मा, विष्णु आदि देवताहरूसँग वार्ता गर्नुहुन्थ्यो तथा द्वितीय क्षणमैं देवस्त्रीहरूका नृत्यको प्रशंसा गर्न लाग्नुहुन्थ्यो ॥५८॥

**व्यासादीनां क्षणं कुर्वन् वेदोच्चारेषु गौरवम्।**
**विदधानः क्षणं देव्या मुखे बिम्बाधरे दृशः।।५९।।**

**भावार्थ :** एकक्षणमा वेदोच्चारणका विषयमा व्यास आदि ऋषि मुनिहरूको प्रशंसा गर्नुहुन्थ्यो भने द्वितीयक्षणमा देवी उमाको बिम्ब समान अधर युक्त मुखारविन्दको दर्शनमा तल्लीन हुनुहुन्थ्यो ॥५९॥

**हास्यनृत्यं क्षणं पश्यन् भृङ्गिणा परिकल्पितम्।**
**नन्दिना वेत्रहस्तेन सर्वतन्त्राधिकारिणा।।६०।।**

**अमुञ्चता सदा पार्श्वमात्माभिप्रायवेदिना।**
**चोदितान् वासयन् कांश्चिद्विसृजन् भ्रूविलासतः।।**
**सम्भावयंस्तथा चान्यानन्यानपि नियामयन्।।६१।।**

**भावार्थ :** कहिले भृङ्गीहरूद्वारा विहित हास्य नृत्यलाई हेर्नुहुन्थ्यो भने कहिले सर्वकार्याधिकारी हातमा वेतको लौरो लिएका सदा छेउमा उभिएका एवं मनको अभिप्रायलाई जान्ने नन्दीद्वारा बोलाइएका भक्तहरूलाई आउने तथा अन्य भक्तहरूलाई जाने सन्देश भ्रूविलासद्वारा दिदैं तथा प्रियवचनद्वारा सबैलाई सन्तुष्ट गर्दै एवं कतिलाई शासित गर्दै स्वधाममा भगवान् शिव विराजमान रहनुहुन्थ्यो ॥६०-६१॥

**समस्तभुवनाधीशमौलिलालितशासनः।**
**अकुण्ठशक्तिरव्याजलावण्यललिताकृतिः।।६२।।**

**भावार्थ :** उनको आदेश समस्त भुवनका स्वामीं हरूका लागि शिरोधार्य हुन्थ्यो । उनको आकृति स्वाभाविक सौन्दर्यले परिपूर्ण थियो तथा शक्ति कुण्ठा रहित अर्थात् अव्याहत (काँहि पनि खण्डित नहुने) थियो ॥६२॥



**स्थिरयौवनसौरभ्यशृङ्गारितकलेवरः ।**
**आत्मशक्त्यमृतास्वादरसोल्लासितमानसः।।६३।।**

**भावार्थ :** उनको शरीर स्थिर यौवनका सुरभि (सुगन्ध) ले सुसज्जित थियो तथा मन आत्मशक्तिरूपी अमृतारसास्वादले उल्लासयुक्त थियो ॥६३॥

**स्वाभाविकमहैश्वर्यविश्रामपरमावधिः।**
**निष्कलङ्कमहासत्त्वनिर्मितानेकविग्रहः।।६४।।**

**भावार्थ :** ती महादेव स्वाभाविक महाऐश्वर्यका अन्तिमसीमा कलंक रहित महासत्त्व स्वरूपद्वारा अनेक शरीर धारण गर्नमा समर्थ थिये ॥६४॥

**अखण्डारातिदोर्दण्डकण्डूखण्डनपण्डितः।**
**चिन्तामणिः प्रपन्नानां श्रीकण्ठः परमेश्वरः।।६५।।**

**भावार्थ :** ती परमेश्वर श्रीकण्ठ समस्त शत्रुहरूका भुजाहरूको चिलाई मेटाउनमा निष्णात थिये । शरणागतहरूकालागि चिन्तामणिका समान शोभायमान भईरहेका थिये ॥६५॥

**सभान्तरगतं तन्त्रं रेणुकं गणनायकम्।**
**प्रसादं सुलभं दातुं ताम्बूलं स तमाह्वयत्।।६६।।**

**भावार्थ :** यस्ता भगवान शिवले सभाभित्र बसेका मुख्यगणनायक रेणुकलाई प्रसाद सुलभ ताम्बूल दिनका लागि बोलाउनु भयो ॥६६॥

**शम्भोराह्वानसन्तोषसंभ्रमेणैव दारुकम्।**
**उल्लङ्घ्य पार्श्वमगमल्लोकनाथस्य रेणुकः।।६७।।**

**भावार्थ :** भगवानका सेवक ती रेणुक शंकरजीको आह्वा (दच्छा) लाई शीघ्र संतुष्ट गर्नका लागि दारूकलाई नाघेर तत्काल लोकनाथका वामभागमा पुगे ॥६७॥

**तमालोक्य विभुस्तत्र समुल्लङ्घितदारुकम्।**
**माहात्म्यं निजभक्तानां द्योतयन्निदमब्रवीत्।।६८।।**

CC-0. Jangamwadi Math Digital Collection.

**भावार्थ :** सर्वव्यापी परमेश्वरले आफ्ना भक्तहरूको माहात्म्य बताउनको लागि दारूकलाई नाघेर आएका रेणुकलाई भन्नुभयो ॥६८॥

**रे रे रेणुक दुर्बुद्धे कथमेष त्वयाऽधुना।**
**उल्लङ्घितः सभामध्ये मम भक्तो हि दारुकः।।६९।।**

**भावार्थ :** हे दुर्बुद्धि रेणुक! तिमीले सभाको बीचमा मेरा भक्त दारूकको उल्लंघन किन गर्‍यौ अर्थात् किन नाघ्यौ? ॥६९॥

**लङ्घनं मम भक्तानां परमानर्थकारणम्।**
**आयुः श्रियं कुलं कीर्तिं निहन्ति हि शरीरिणाम्।।७०।।**

**भावार्थ :** मेरा भक्तहरूलाई नाघ्नु महान् अनर्थको कारण हुन्छ, जसले भक्तहरूको उल्लंघन गर्छ त्यस्को आयु, लक्ष्मी, कुल तथा कीर्ति सबै नष्ट हुन्छन् ॥७०॥

**मम भक्तमवज्ञाय मार्कण्डेयं पुरा यमः।**
**मत्पादताडनादासीत् स्मरणीयकलेवरः।।७१।।**

**भावार्थ :** प्राचीनकालमा यमराजले मेरा भक्त मार्कण्डेयको अवज्ञा (अपमान) गर्नाले मेरा चरणका आघातले नष्ट भएका थिये ॥७१॥

**भृगोश्च शङ्कुकर्णस्य मम भक्तिमतोस्तयोः।**
**कृत्वानिष्टमभूद् विष्णुर्विकेशो दशयोनिभाक्।।७२।।**

**भावार्थ :** मेरा भक्त भृगु तथा शंकुकर्णको अनिष्ट गरेर विष्णु विशिष्ट केश युक्त भएका थिये, अर्थात् उनका मस्तकमा केश उत्पन्न भए तथा उनले दशपटक जन्म लिनु पर्‍यो ॥७२॥

**मद्भक्तेन दधीचेन कृत्वा युद्धं जनार्दनः।**
**भग्नचक्रायुधः पूर्वं पराभवमुपागमत्।।७३।।**

**भावार्थ :** प्राचीनकालमा मेरा भक्त दधीचिसंग युद्ध गर्नाले जनार्दन अर्थात् विष्णुको चक्र तथा धनुष भाँचिएर पराजय भएको थियो ॥७३॥



**कृताश्वमेधो दक्षोऽपि मद्भक्तांश्च गणेश्वरान्।**
**अवमत्य सभामध्ये मेषवक्त्रोऽभवत् पुरा।।७४।।**

**भावार्थ :** अश्वमेधयज्ञ गर्ने वाला दक्ष प्रजापतिले पनि सभाका मध्यमा मेरा भक्त गणेश्वरहरूको अपमान गरेर भेडाको मुख प्राप्त गरेका थिये, काँहि-काँहि बाख्राको मुख प्राप्त गरेको उल्लेख पनि शास्त्रहरूमा भेटिन्छ ॥७४॥

**श्वेतस्य मम भक्तस्य दुरतिक्रमतेजसः।**
**औदासीन्येन कालोऽपि मया दग्धः पुराऽभवत्।।७५।।**

**भावार्थ :** प्राचीनकालमा अनतिक्रमणीय तेज भएका मेरा भक्त श्वेत, उदासीन, हुनका कारण मैले काललाई पनि जलाईदिएको थिएँ ॥७५॥

**एवमन्येऽपि बहवो मद्भक्तानामतिक्रमात्।**
**परिभूता हताश्चासन् भक्ता मे दुरतिक्रमाः।।७६।।**

**भावार्थ :** त्यस्तै प्रकारले अरू धेरै जनहरू पनि मेरा भक्तको अतिक्रमण गर्नाले पराजित भएका थिये अर्थात् मारिएका थिये । अतः मेरा भक्तहरू अनुल्लंघनीय हुन्छन् ॥७६॥

**अविचारेण मद्भक्तो लङ्घितो दारुकस्त्वया।**
**एष त्वं रेणुकानेन जन्मवान् भव भूतले।।७७।।**

**भावार्थ :** हे रेणुक! तिमीले विचार नगरीकन मेरा भक्त दारूकको उल्लंघन गर्‍यौ, अर्थात् नाघ्यौ यसकारण अब तिमी पृथ्वीमा जन्म लेऊ ॥७७॥

**इत्युक्तः परमेशेन भक्तमाहात्म्यशंसिना।**
**प्रार्थयामास देवेशं प्रणिपत्य स रेणुकः।।७८।।**

**भावार्थ :** भक्तहरूको माहात्म्य बताउने परमेश्वरद्वारा यसप्रकार पृथ्वीमा जन्म लिने आदेश गरिये पछि त्यो रेणुक भगवान्‌का चरणमा शरणागत भएर प्रार्थना गर्न लाग्यो ॥७८॥

CC-0. Jangamwadi Math Digital Collection.

**मानुषीं योनिमासाद्य महादु:खविवर्धिनीम्।**
**जात्यायुर्भोगवैषम्यहेतुकर्मोपपादिनीम् ।।७९।।**

**समस्तदेववैकङ्कर्यकार्पण्यप्रसवस्थलीम्।**
**महातापत्रयोपेतां वर्णाश्रमनियन्त्रिताम्।।**
**विहाय त्वत्पदाम्भोजसेवां किं वा वसाम्यहम्।।८०।।**

**यथा मे मानुषो भावो न भवेत् क्षितिमण्डले।**
**तथा प्रसादं देवेश विधेहि करुणानिधे।।८१।।**

**भावार्थ :** हे देवेश! महादु:खलाई बढाउने वाला जन्म आयु र योगको विशमताको कारणभूत कर्महरूले युक्त समस्त देवताहरूको सेवकत्व रूपी जन्मस्थली दैहिक, दैविक, भौतिक यी तीन तापहरूले युक्त वर्णाश्रम धर्मद्वारा नियन्त्रित मनुष्य योनिलाई प्राप्तगरेर हजुरका चरणकमलको सेवाले रहित भएर पृथ्वी लोकमा म कसरी रहन सकुँला? हे करुणानिधे! पृथ्वीमण्डलमा जसरी मेरो मनुष्यभाव रहन्न यस्तो कृपा गरिबक्सियोस् ।।७९-८१।।

**इति सम्प्रार्थितो देवो रेणुकेन महेश्वरः।**
**मा भैषीर्मम भक्तानां कुतो भीतिरिहेष्यति।।८२।।**

**भावार्थ :** रेणुकद्वारा यस प्रकार प्रार्थना गरेपछि महेश्वरले भन्नुभयो - हे रेणुक! तिमी न डराऊ, यस जगतमा मेरा भक्तहरूलाई कहाँ बाट भय हुन्छ? ।।८२।।

**श्रीशैलस्योत्तरे भागे त्रिलिङ्गविषये शुभे।**
**कोल्लिपाक्याभिधानोऽस्ति कोऽपि ग्रामो महत्तरः।।८३।।**

**भावार्थ :** श्रीशैलपर्वतको उत्तरभागमा अवस्थित तैलङ्गाना देशमा कोल्लिपाकी नामको एक ठूलो गाँउ छ ।।८३।।

**सोमेश्वराभिधानस्य तत्र वासवतो मम।**
**अस्पृशन् मानुषं भावं लिङ्गात्प्रादुर्भविष्यसि।।८४।।**



**भावार्थ :** त्यहाँ सोमेश्वर नामले विख्यात भएर रहेको मेरो लिङ्ग (सोमेश्वर महादेव) बाट तिमी मानवभावको स्पर्श नगरिकन उत्पन्न हुने छौ अर्थात् मनुष्य देहबाट तिम्रो उत्पत्ति हुने छैन ।।८४।।

**मदीयलिङ्गसंभूतं मद्भक्तपरिपालकम्।**
**विस्मिता मानुषाः सर्वे त्वां भजन्तु मदाज्ञया।।८५।।**

**भावार्थ :** सबै जनहरूले आश्चर्ययुक्त भएर मेरा आज्ञाले मेरा लिङ्गबाट उत्पन्न मेरा भक्तका परिपालक तिम्रो सेवा गर्ने छन् ।।८५।।

**मदद्वैतपरं शास्त्रं वेदवेदान्तसंमतम्।**
**स्थापयिष्यसि भूर्लोके सर्वेषां हितकारकम्।।८६।।**

**भावार्थ :** तिमीले पृथ्वी लोकमा वेद वेदान्त सम्मत तथा सबैका लागि हितकारक शिवाद्वैत शास्त्र अर्थात् वीरशैवसिद्धान्तको स्थापना गर्ने छौ ।।८६।।

**मम प्रतापमतुलं मद्भक्तानां विशेषतः।**
**प्रकाशय महीभागे वेदमार्गानुसारतः।।८७।।**

**भावार्थ :** हे रेणुक! तिमी पृथ्वी तलमा गएर वेदमार्गको अनुसरण गर्दै मेरा अतुलनीय प्रतापको बारेमा विशेषगरेर मेरा भक्तहरूलाई बताऊ ।।८७।।

**इत्युक्त्वा परमेश्वरः स भगवान् भद्रासनादुत्थितो**
**ब्रह्मोपेन्द्रमुखान् विसृज्य विबुधान् भ्रूसंज्ञया केवलम्।**
**पार्वत्या सहितो गणैरभिमतैः प्राप स्वमन्तःपुरं**
**क्षोणीभागमवातरत् पशुपतेराज्ञावशाद् रेणुकः।।८८।।**

**भावार्थ :** यति भनेर ती भगवान् परमेश्वर आफ्ना भद्रासनबाट उठ्नु भयो, केवल भ्रुकुटी का ईशाराले ब्रह्मा उपेन्द्र आदि देवताहरूलाई बिदा गरेर अभिमत गण तथा पार्वतीका साथमा आफ्ना अन्तःपुरमा जानु भयो, पशुपतिका आज्ञाले रेणुक पनि पृथ्वीतलमा अवतरित भये ।।८८।।

CC-0. Jangamwadi Math Digital Collection.

*ॐ तत्सत् इति श्रीशिवगीतेषु सिद्धान्तागमेषु शिवाद्वैतविद्यायां शिवयोगशास्त्रे श्रीरेणुकागस्त्य संवादे वीरशैवधर्मनिर्णये श्रीशिवयोगिशिवाचार्यविरचिते श्रीसिद्धान्तशिखामणौ कैलासवर्णनं रेणुकावतरणकारणं च नाम तृतीयः परिच्छेदः।*

यस प्रकार श्रीसिद्धान्तशिखामणिको रेणुकभूर्लोकावतरण नामक तृतीय परिच्छेदको आचार्य हरिप्रसादअधिकारी-कृत सुबोधिनी नामक नेपाली व्याख्या पूर्णभयो ।

।। तृतीयपरिच्छेद पूर्ण भयो ।।



CC-0. Jangamwadi Math Digital Collection.

# चतुर्थः परिच्छेदः

**अथाष्टभिः सूत्रैः शिवयोगिरेणुकगणेश्वरस्य स्वरूपं वर्णयति**

**अथ त्रिलिङ्गविषये कोल्लिपाक्याभिधे पुरे।**
**सोमेश्वरमहालिङ्गात् प्रदुरासीत् स रेणुकः।।१।।**

**रेणुकको अवतार एवं उनका स्वरूपको वर्णन—**

**भावार्थ :** यस पिछाडी रेणुक तैलङ्गाना देशमा कोल्लिपाकी नामक नगरमा सोमेश्वरमहादेव नामक महालिङ्गबाट प्रकट भये ।।१।।

**प्रादुर्भूतं तमालोक्य शिवलिङ्गात् त्रिलिङ्गजाः।**
**विस्मिताः प्राणिनः सर्वे बभूवुरतितेजसम्।।२।।**

**भावार्थ :** तैलङ्गाना देशका समस्त प्राणीहरू शिवलिङ्गबाट अत्यन्त तेजस्वी तिनको प्राकट्य देखेर छक्क परे ।।२।।

**भस्मोद्धूलितसर्वाङ्गं साररुद्राक्षभूषणम्।**
**जटामुकुटसंयुक्तं त्रिपुण्ड्राङ्कितमस्तकम्।।३।।**

**भावार्थ :** रेणुकको समस्त शरीर भष्म(खरानी) मा मुछिएको थियो। रुद्राक्षमालाले विभूषित जटा मुकुटयुक्त तिनको मस्तक त्रिपुण्ड्र(तीनधर्का) ले अंकित भएको थियो । मस्तकमा इष्टलिंग धारण गरेका तथा सदा लिंगपूजा मा निरत थिये ।।३।।

**कटीतटीपटीभूतकन्थापटलबन्धुरम् ।**
**दधानं योगदण्डं च भस्माधारं कमण्डलुम्।।४।।**

**भावार्थ :** उनले कमरमा कन्था(सन्यासी को जस्तो वस्त्र) बाँधेको थियो, योगदण्ड, भष्मपात्र तथा कमण्डलु धारण गरेको थियो ।।४।।



**शिवाद्वैतपरिज्ञानपरमानन्दमोदितम् ।**
**निर्धूतसर्वसंसारवासनादोषपञ्जरम् ।।५।।**

**भावार्थ :** तिनी शिवाद्वैतका परिपूर्णज्ञानजन्य परमानन्दमा मग्न थिये, तथा संसारका समस्त वासनारूपी पिंजडालाई उनले नष्ट गरेको थियो अर्थात् संसारको कुनै पनि वासना उनमा थियेन ।।५।।

**शिवागमसुधासिन्धुसमुन्मेषसुधाकरम् ।**
**चित्तारविन्दसंगूढशिवपादाम्बुजद्वयम् ।।६।।**

**भावार्थ :** तिनी शैवागमरूपी सुधासिन्धुको वृद्धिका लागि चन्द्रमाका समान थिये, तथा उनले आफ्ना हृदयकमला शिवका दुवैचरणलाई लुकाएर राखेको थियो ।।६।।

**यमादियोगतन्त्रज्ञं स्वतन्त्रं सर्वकर्मसु।।७।।**
**समस्तसिद्धसन्तानसमुदायशिखामणिम्।।७।।**

**भावार्थ :** तिनी यम, नियम, आसन, प्राणायाम, प्रत्याहार, धारणा, ध्यान, समाधि आदि समस्त योगसाधनाहरूका ज्ञाता थिये, समस्त कर्म गर्नमा स्वतन्त्र तथा समस्त सिद्धपरंपरासमूहका शिखामणि(शिरको मणि) थिये ।।७।।

**वीरसिद्धान्तनिर्वाहकृतपट्टनिबन्धनम् ।**
**आलोकमात्रनिर्भिन्नसमस्तप्राणिपातकम्।।८।।**

**भावार्थ :** ती रेणुकाचार्य वीरशैवसिद्धान्तको निर्वाह अर्थात प्रचार गर्नमा कटिबद्ध तथा दर्शनमात्रले समस्त प्राणिको दु:खहरण गर्नमा समर्थ थिये ।।८।।

**तमपृच्छन् जनाः सर्वे नमन्तः को भवानिति।**
**इति पृष्टो महायोगी जनैर्विस्मितमानसैः।।९।।**

**प्रत्युवाच शिवाद्वैतमहानन्दपरायणः।**
**पिनाकिनः पार्श्ववर्ती रेणुकाख्यगणेश्वरः।।१०।।**

CC-0. Jangamwadi Math Digital Collection.

**भावार्थ :** तिनी प्रकटभए पछि आश्चर्यमा परेका उपस्थित सबैजनहरूले प्रणाम गरेर उनीसँग सोधे - तपाँई को हुनुहुन्छ? आश्चर्यचकित भएर यसरी सोध्ने जनहरूलाई महायोगीले बताउनु भयो - म शिवाद्वैत महानन्दमा लीन शङ्करजीको पार्श्ववर्ती रेणुक नामक गणेश्वर हूँ ॥९-१०॥

**केनचित्कारणेनाहं शिवलिङ्गादिहाभवम्।**
**नाम्ना रेणुकसिद्धोऽहं सिद्धसन्ताननायकः।।११।।**

**भावार्थ :** कुनै कारणले संसारमा म यस शिवलिङ्गबाट उत्पन्न भएको हूँ। मेरो नाम रेणुकसिद्ध हो। म सिद्धपरंपराको नायक हूँ॥११॥

**स्वच्छन्दचारी लोकेऽस्मिन् शिवसिद्धान्तपालकः।**
**खण्डयन् जैनचार्वाकबौद्धादीनां दुरागमान्।।१२।।**

**भावार्थ** : म यस लोकमा स्वच्छन्दरूपले विचरण गर्दै जैन, चार्वाक, बौद्ध आदि नास्तिक आगमहरूको खण्डन गरी शिवसिद्धान्त को परिपालन गर्दछु ॥१२॥

**इत्युक्त्वा पश्यतां तेषां विषयस्थिरचक्षुषाम्।**
**उत्थाय व्योममार्गेण मलयाद्रिमुपागमत्।।१३।।**

**भावार्थ** : यति भनेर एकटक उनलाई हेरीरहेका जनसमूहका सामुन्ने ती रेणुक आकाशमार्गद्वारा उडेर मलयपर्वतमा गये ॥१३॥

**अथ सूत्रत्रयेण मलयाद्रिं वर्णयति—**

**नवचन्दनकान्तारकन्दलन्मन्दमारुतम् ।**
**अभङ्गुरभुजङ्गस्त्रीसंगीतरससंकुलम् ।।१४।।**

**भावार्थ : मलयपर्वतको वर्णन—** त्यो मलयपर्वत नया चन्दनका घना जङ्गलले भरिएको थियो। त्यसमा मन्दसुगन्धित हावा चली रहेको थियो। अत्यन्तै टाँसिएर रहेका सर्पिणीहरूका संगीतरसले त्यो पर्वत व्याप्त थियो ॥१४॥



**करिपोतकराकृष्टस्फुरदेलातिवासितम् ।**
**वराहदंष्ट्रिकाध्वस्तमुस्तासुरभिकन्दरम् ।।१५।।**

**भावार्थ** : हाती का बच्चाहरुद्वारा सूँडले तानिएका अलैंचीले ग र्दा त्यो पर्वत अत्यन्त सुगन्धित थियो। सुँगुर अर्थात् बँदेलका साना साना दाँतहरूले तोडिएका मुस्ता (मोथे) का सुगन्धले त्यस पर्वतका कन्दरा अर्थात् गुफाहरू व्याप्त थिये ॥१५॥

**पटीरदलपर्यङ्कप्रसुप्तव्याधदम्पतिम् ।**
**माधवीमल्लिकाजातीमञ्जरीरेणुरञ्जितम् ।।१६।।**

**भावार्थ** : त्यसै ठाउँमा व्याधदम्पत्ती (शिकारी पति-पत्नी) कदलीदल(केराको थाङ्) बाट तयार पारिएका पलंगमा सुतेका थिये। त्यो पर्वत माधवी अर्थात् वासन्ती जूही तथा चम्पाका पराग(फूलको रज) ले रञ्जित अर्थात् शोभायुक्त थियो ॥१६॥

**अथाष्टभिः सूत्रैरगस्त्याश्रमं वर्णयति—**

**तत्र कुत्रचिदाभोगसर्वर्तुकुसुमद्रुमे।**
**अपश्यदाश्रमं दिव्यमगस्त्यस्य महामुनेः।।१७।।**

**भावार्थ** : **अगस्त्यऋषिका आश्रमको वर्णन—** रेणुकाचार्यले त्यहाँ पुगेर सबै ऋतुहरूमा फुल्ने फूलहरूले युक्त रुखहरुले भरिभराउभएको महामुनि अगस्त्यको दिव्य विशाल आश्रम देखे ॥१७॥

**मन्दारचन्दनप्रायैर्मण्डितं तरुमण्डलैः।**
**शाखाशिखरसंलीनतारकागणकोरकैः ।।१८।।**

**भावार्थ** : त्यो आश्रम कल्पवृक्ष चन्दन आदिका वृक्ष (रुख) हरूले भरिएको थियो। ती वृक्षहरूमाथि देखिने कोपिलाहरू ताराहरू जस्तै शोभायमान थिये ॥१८॥

**मुनिकन्याकरानीतकलशाम्बुविवर्धितैः।**
**आलवालजलास्वादमोदमानमृगीगणैः।।१९।।**

CC-0. Jangamwadi Math Digital Collection.

**भावार्थ** : ती वृक्षहरू मुनिकन्याहरूका हातद्वारा ल्याइएका कलशका जलले बढाइएका थिये । मिर्गहरूको समूह उनका थलामा भरेको पानि पिएर प्रसन्न हुन्थ्यो ॥१९॥

**हेमारविन्दनिष्यन्दमकरन्दसुगन्धिभिः ।**
**मरालालापवाचालुवीचिमालामनोहरैः ॥२०॥**

**भावार्थ** : स्वर्णकमलबाट खसेका परागसुगन्धले युक्त त्यो आश्रम हाँसहरूका ध्वनितरङ्गले अत्यन्त मनोहर थियो ॥२०॥

**इन्दीवरवरज्योतिरन्धीकृतहरिन्मुखैः ।**
**लोपामुद्रापदन्यासचरितार्थतटाङ्कितैः ॥२१॥**

**भावार्थ** : त्यस आश्रमका दिशाहरू नीलकमलका ज्योतिले मानौं अन्धकारमय अर्थात् नीला भएका थिये । तलाउका किनाराहरू लोपामुद्रा अर्थात् अगस्त्य ऋषिकी पत्नीका पदचिह्न-(खुट्टा का पाइलाले) ले अंकित थिये ॥२१॥

**हारनीहारकर्पूरहरहासामलोदकैः ।**
**नित्यनैमित्तिकस्नाननियमार्थैस्तपस्विनाम् ॥२२॥**

**भावार्थ** : त्यस तलाउको जल शुद्ध बर्फ, कपूर, अथवा शिवका हास्यको समान स्वच्छ थियो, तपस्वीहरू त्यसै जलबाट नित्य नैमित्तिक स्नान नित्यकर्मादि क्रियाहरू सम्पन्न गर्दथे ॥२२॥

**प्रकृष्टमणिसोपानैः परिवीतं सरोवरैः ।**
**विमुक्तसत्त्ववैरस्यं ब्रह्मलोकमिवापरम् ॥२३॥**

**भावार्थ** : उत्तममणिद्वारा बनिएका सीढीले ती सरोवरहरू घेरिएका थिये। त्यो आश्रम प्राणीहरूको वैरभावले मुक्त द्वितीय ब्रह्मलोकका समान थियो ॥२३॥

**हूयमानाज्यसन्तानधूमगन्धिमहास्थलम् ।**
**शुकसंसत्समारब्धश्रुतिशास्त्रोपबृंहणम् ॥२४॥**



**भावार्थ** : त्यहाँको भूमि हवन गरियेका घ्यूका धुँवाले महासुगन्धयुक्त थियो, तथा त्यहाँ रहने शुक समूहद्वारा उच्चारित वेदमन्त्रहरूले त्यो आश्रम गुञ्जायमान थियो ॥२४॥

**अथागस्त्यमुनिं नवभिः सूत्रैर्वर्णयति—**

**तस्य मध्ये समासीनं मूले चन्दनभूरुहः ।**
**सुकुमारदलच्छायादूरितादित्यतेजसः ॥२५॥**

**भावार्थ : अगस्त्य सौन्दर्य वर्णन** — त्यस आश्रमका मध्यमा सुकुमार पातहरूको छाँयाले सूर्यको प्रकाश तथा गर्मीलाई रोक्ने चन्दनवृक्षका मुनि विराजमान भएका अगस्त्यमुनिलाई रेणुकाचार्यले देखे ॥२५॥

**तडित्पिङ्गजटाभारैस्त्रिपुण्ड्राङ्कितमस्तकैः ।**
**भस्मोद्धूलितसर्वाङ्गैः स्फुरद्रुद्राक्षभूषणैः ॥२६॥**

**नववल्कलवासोभिर्नानानियमधारिभिः ।**
**परिवीतं मुनिगणैः प्रमथैरिव शङ्करम् ॥२७॥**

**भावार्थ** : बिजुलीसमान चम्किने पँहेलो जटा भएका त्रिपुण्ड्रले शोभायमान मस्तक भएका समस्त अंगमा भस्मलेपनगरेका रूद्राक्षको आभूषण धारण गरेका, नवीन वल्कलको वस्त्र धारण गरेका तथा अनेक नियमहरूको पालन गर्ने मुनिसमूहले घेरिएका अगस्त्य ऋषिलाई रेणुकाचार्यले देखे । अगस्त्यऋषिको शोभाप्रमथगणहरूले घेरिएका भगवान् शंकरका समान प्रतीत हुन्थ्यो ॥२६-२७॥

**समुज्ज्वलजटाजालैस्तपःपादपपल्लवैः ।**
**स्फुरत्सौदामिनीकल्पैर्ज्वालाजालैरिवानलम् ॥२८॥**

**भावार्थ** : तपस्यारूपी वृक्षका पल्लवसमान चम्किने बिजुली जस्तै उज्ज्वल जटाहरूले अगस्त्य ऋषि ज्वालासमूहले घेरिएका अग्निसमान प्रतीत भईरहेका थिये ॥२८॥

CC-0. Jangamwadi Math Digital Collection.

**विशुद्धभस्मकृतया त्रिपुण्ड्राङ्कितरेखया।**
**त्रिस्रोतसेव सम्बद्धशिलाभागं हिमाचलम्।।२९।।**

**भावार्थ** : विशुद्धभस्मद्वारा बनिएका त्रिपुण्ड्रका तीन रेखाहरूले अगस्त्य ऋषि गंगाका तीन श्रोतसंग सम्बद्ध शिलाले युक्त भएका हिमालय जस्तै प्रतीत भईरहेका थिये ॥२९॥

**भस्मालङ्कृतसर्वाङ्गं शशाङ्कमिव भूगतम्।**
**वसानं वल्कलं नव्यं बालातपसमप्रभम्।।३०।।**

**भावार्थ** : उनको समस्त शरीर भस्मद्वारा अलंकृत थियो, उनको दर्शनले चन्द्रमा पृथ्वीमा उत्रेर आएका हुन् कि जस्तो भान हुन्थ्यो, उनले बालसूर्यका किरण जस्तै कान्तियुक्त नवीन वल्कल वस्त्र धारण गरेको थियो ॥३०॥

**वडवाग्निशिखाजालसमालीढमिवार्णवम्।**
**सर्वासामपि विद्यानां समुदायनिकेतनम्।।३१।।**

**भावार्थ** : ती अगस्त्य ऋषि वाडवाग्नि(समुद्रको अग्नि) को शिखा(ज्वाला) हरूले व्याप्त समुद्र जस्तै प्रतीत भईरहेका थिये साथै उनी समस्त विद्याहरूका समुदायका आश्रय पनि थिये ॥३१॥

**न्यक्कृतप्राकृताहन्तं निरूढशिवभावनम्।**
**तृणीकृतजगज्जालं सिद्धीनामुदयस्थलम्।।३२।।**

**भावार्थ** : प्राकृत (सामान्यजनहरूमा रहने अथवा प्रकृति तत्त्वबाट उत्पन्न) अहंकारले रहित शिव भावनामा दृढ ती अगस्त्य ऋषि समस्त सिद्धिहरूका उद्गमस्थान थिये तथा संसारलाई तृणवत् मान्दथे ॥३२॥

**मोहान्धकारतपनं मूलबोधमहीरुहम्।**
**ददर्श स महायोगी मुनिं कलशसंभवम्।।३३।।**

**भावार्थ** : मोहरूपी अन्धकारका लागि सूर्यका समान बोधरूपी वृक्षका मूलस्वरूप तथा कुम्भबाट उत्पन्न ती अगस्त्य ऋषिलाई महायोगी रेणुकाचार्यले देखे ॥३३॥



**तमागतं महासिद्धं समीक्ष्य कलशोद्भवः।**
**गणेन्द्रं रेणुकाभिख्यं विवेद ज्ञानचक्षुषा।।३४।।**

**भावार्थ** : कुम्भबाट उत्पन्न भएका ऋषिले ती महासिद्धलाई आँउदै गरेको देखेर आफ्नु दिव्यदृष्टिले यी रेणुक नामक गणेश्वर रहेछन् भन्ने जाने ॥३४॥

**तस्यानुभावं विज्ञाय सहसैव समुत्थितः।**
**लोपामुद्राकरानीतैरुदकैरतिपावनैः ।।**
**पादौ प्रक्षालयामास स तस्य शिवयोगिनः।।३५।।**

**भावार्थ** : तिनको प्रभावलाई जानेर अगस्त्य ऋषि जी एकाएक खड़ा हुनुभयो तथा लोपामुद्राका हातद्वारा ल्याइएका अत्यन्त पवित्र जलले, ती शिवयोगी रेणुकाचार्यको पादप्रक्षालन गरे ॥३५॥

**संपूज्य तं यथाशास्त्रं तन्नियोगपुरस्सरम्।**
**मुनिर्विनयसम्पन्नो निषसादासनान्तरे।।३६।।**

**भावार्थ** : विनय सम्पन्न अगस्त्यमुनिजी शास्त्रविधि अनुसार उनको पूजन स्वागत आदि गरेर उनका आज्ञाले अर्का आसनमा विराजमान हुनुभयो ॥३६॥

**रेणुकागस्त्यसंवादः**

**समासीनं मुनिवरं सर्वतेजस्विनां विभुम्।**
**उवाच शान्तया वाचा रेणुकः सिद्धशेखरः।।३७।।**

**भावार्थ** : **रेणुक-अगस्त्य संवाद**— समस्त तेजस्वीहरूमा श्रेष्ठ ऋषिवर अगस्त्यलाई आसनमा बसाएर सिद्ध शेखर रेणुकाचार्यले शान्त वाणीले यसो भन्नुभयो ॥३७॥

**निर्विघ्नं वर्तसे किं नु नित्या ते नियमक्रिया।**
**अथ वाऽगस्त्य तेजस्विन् कुतः स्युस्तेऽन्तरायकाः।।३८।।**

**भावार्थ** : हे तेजस्वी अगस्त्यजी तपाई निर्विघ्न हुनुहुन्छ? तपाँईका नित्य क्रियाहरू नियमपूर्वक निर्विघ्नरूपमा चल्दैछन्? अथवा काँहिबाट विघ्न आउने सम्भावना छ? ॥३८॥

CC-0. Jangamwadi Math Digital Collection.

**विन्ध्यो निरुद्धो भवता विश्वोल्लङ्घनविभ्रमः।**
**नहुषो रोषलेशात् ते सद्यः सर्पत्वमागतः।।३९।।**

**भावार्थ** : हे अगस्त्यजी! तपाँइले विश्व उल्लंघनको साहस गर्ने विन्ध्याचलपर्वतलाई रोकिदिनु भयो । हजूरका अत्यल्पक्रोधले नहुषनामक राजा सर्प भये । यी दुवै कथाहरू पुराणमा उल्लिखित छन् ।।३९।।

**आचान्ते भवता पूर्वं पङ्कशेषाः पयोधयः।**
**जीर्णस्ते जाठरे वह्नौ दृप्तो वातापिदानवः।।४०।।**

**भावार्थ** : हे ऋषिजी प्राचीनकालमा हजूरले आचमन मात्रले समुद्रको पान गर्नु भएको थियो तथा समुद्रमा मात्र हिलो बँचेको थियो । भयङ्कर वातापि राक्षसलाई आफ्ना जठराग्निले डड़ाईदिनुभएको थियो। त्यी दुवै कथाहरू पनि पुराणमा प्रसिद्ध छन् ।।४०।।

**एवंविधानां चित्राणां सर्वलोकातिशायिनाम्।**
**कृत्यानां तु भवान् कर्ता कस्तेऽगस्त्य समप्रभः।।४१।।**

**भावार्थ** : तपाँई यस प्रकार अलौकिक (सामान्य जनले गर्न न सकिने) कार्य गर्नमा समर्थ हुनुहुन्छ । हे अगस्त्य जी! हजूरभन्दा तेजस्वी यस संसारमा को छ? अर्थात् कोहि पनि छैन ।।४१।।

**शिवाद्वैतपरानन्दप्रकाशनपरायणम् ।**
**भवन्तमेकं शंसन्ति प्रकृत्या सङ्गवर्जितम् ।।४२।।**

**भावार्थ** : जनहरू हजूरलाई एकमात्र शिवाद्वैतपरानन्दको प्रकाशमा संलग्न रहने तथा स्वभावत: आसक्ति आदि दुर्गुणबाट रहित जान्दछन् तथा स्तुति गर्दछन् ।।४२।।

**पुरा हैमवतीसूनुरवदत् ते षडाननः।**
**शिवधर्मोत्तरं नाम शास्त्रमीश्वरभाषितम्।।४३।।**

**भावार्थ** : प्राचीनकालमा पार्वतीपुत्र षडानन(छ मुख भएका) कार्तिकेयले तपाँईलाई शिवभाषित शिवधर्मोत्तरनामकशास्त्रको उपदेश गरेको थियो ।।४३।।



**भक्तिः शैवी महाघोरसंसारभयहारिणी।**
**त्वया राजन्वती लोके जाताऽगस्त्य महामुने।।४४।।**

**भावार्थ** : हे महामुनि अगस्त्य! यसलोकमा संसारको महाभयलाई मेटाउने शैवीभक्ति हजूरकै कारणले धर्मात्मा राजाहरूद्वारा शिरोधार्य तथा प्रकाशमान भयो ।।४४।।

**अगस्त्यमुनिवचनम्**

**इति तस्य वचः श्रुत्वा सिद्धस्य मुनिपुङ्गवः।**
**गम्भीरगुणया वाचा बभाषे भक्तिपूर्वकम्।।४५।।**

**भावार्थ** : **अगस्त्य वचन**— मुनिहरूमा श्रेष्ठ ती अगस्त्यजी रेणुकाचार्यको यस्तो वाणी सुनेर भक्तियुक्त गम्भीरस्वरले बोल्नुभयो ।।४५।।

**अहमेव मुनीन्द्राणां लालनीयोऽस्मि सर्वदा।**
**भवदागमसम्पत्तिर्मां विना कस्य संभवेत्।।४६।।**

**भावार्थ** : हे आचार्यवर! तपाँइको आगमनरूपी सम्पत्ति मेरा अतिरिक्त कहाँ छ? यस्तैकारणहरूले नै म सर्वदा मुनिहरूका बीचमा आदरको पात्र बनेको छु ।।४६।।

**स्थिरमद्य शिवज्ञानं स्थिरा मे तापसक्रिया।**
**भवद्दर्शनपुण्येन स्थिरा मे मुनिराजता।।४७।।**

**भावार्थ** : आज, हजूरको दर्शनबाट उत्पन्न भएका पुण्यले मेरो शिवज्ञान स्थिर भयो । मेरो तपस्या पनि स्थिर अर्थात् पूर्ण भयो तथा मुनिहरूका मध्यमा राजतुल्यता अर्थात् सदा सर्वदाका लागि ऋषिश्रेष्ठ या मुनिश्रेष्ठ पनि भयें । यो सबै हजूरले दर्शन दिदा मात्र सम्भव भएको हो ।।४७।।

**संसारसर्पदष्टानां मूर्च्छितानां शरीरिणाम्।**
**कटाक्षस्तव कल्याणं समुज्जीवनभेषजम्।।४८।।**

**भावार्थ** : हे आचार्यप्रवर! संसाररूपी सर्पद्वारा डसिएका हुनाले मूर्च्छितप्राय मनुष्यहरूका लागि हजूरको कृपादृष्टि कल्याणकारिणी तथा सञ्जीवनी औषधि तुल्य हो ।।४८।।

CC-0. Jangamwadi Math Digital Collection.

**समस्तलोकसन्दाहतापत्रयमहानलः ।**
**त्वत्पदाम्बुजकणास्वादादुपशाम्यति देहिनाम्।।४९।।**

**भावार्थ** : समस्त लोकहरूलाई डड़ाउनमा समर्थ तथा जीवहरूका लागि तापत्रयरूपी महाअनल (महा अग्नि) हजूरका चरणोदकको एक थोपा पान गरे पछि तत्काल शान्त हुन्छ ।।४९।।

**तर्हि कोऽहमित्याकाङ्क्षायामाह—**

**रेणुकं त्वां विजानामि गणनाथं शिवप्रियम्।**
**अवतीर्णमिमां भूमिं मदनुग्रहकाङ्क्षया।।५०।।**

**भावार्थ** : म तिमीलाई गणहरूका स्वामी शिवको प्रिय रेणुककारूपमा राम्ररी जान्दछु । तपाँई मँ माथि कृपा गर्ने इच्छाले नै यस पृथ्वीमा अवतीर्ण हुनु भएको हो ।।५०।।

**भवादृशानां सिद्धानां प्रबोधध्वस्तजन्मनाम्।**
**प्रवृत्तिरीदृशी लोके परानुग्रहकारिणी।।५१।।**

**भावार्थ** : शिवबोध (तत्त्वबोध) द्वारा जन्महरूलाई नाश गर्ने अर्थात् जन्म संस्कारबाट मुक्तभएका तपाँई जस्ता सिद्धहरूको लोकप्रवृत्ति (लोकमा अवतीर्ण हुनु) नै यस संसारको परानुग्रहको अर्थात् परकल्याणको कारण हुन पुग्दछ ।।५१।।

**त्वन्मुखाच्छ्रोतुमिच्छामि सिद्धान्तं श्रुतिसंमतम्।।५२।।**
**सर्वज्ञ वद मे साक्षाच्छैवं सर्वार्थसाधकम्।।५२।।**

**सद्यः सिद्धिकरं पुंसां सर्वयोगीन्द्रसेवितम्।**
**दुराचारैरनाघ्रातं स्वीकृतं वेदवेदिभिः।।**
**शिवात्मैक्यमहाबोधसम्प्रदायप्रवर्तकम्।।५३।।**

**भावार्थ** : हे रेणुकाचार्य जी! म तपाँईका मुखारविन्दबाट वेदसम्मत शिवाद्वैत सिद्धान्तको श्रवण गर्न चाहन्छु । हे सर्वज्ञ, हजूरले मलाई साक्षात्सबैकामना



हरूलाई पूर्ण गर्ने, मनुष्यलाई तत्काल सिद्धि दिने, समस्त योगीन्द्रहरूद्वारा सेवित (सेवागरिएको) दुराचारिहरूले न छोइएका वेदवेत्ताहरूद्वारा स्वीकृत तथा शिवजीव ऐक्य महाज्ञानयुक्त सम्प्रदायप्रवर्तक शिवाद्वैतसिद्धान्त बताई बक्सियोस् ।।५२-५३।।

**उक्त्वा भवान् सकललोकमहोपकारं**
**सिद्धान्तसंग्रहमनादृतबाह्यतन्त्रम् ।**
**सद्यः कृतार्थयितुमर्हति दिव्ययोगिन्**
**नानागमश्रवणवर्तितसंशयं माम्।।५४।।**

**भावार्थ** : हे दिव्य योगी जी! तपाँई समस्तसंसारका महान् उपकारक हुनुहुन्छ, अतः वेदविरुद्धतन्त्र अर्थात् सिद्धान्तहरूलाई निरस्त गर्ने सिद्धान्त संग्रह बताएर विभिन्न आगमहरुको श्रवण गर्नाले संशयग्रस्त भएको मेरो कल्याण गर्नुहोस् ।।५४।।

***ॐ तत्सत् इति श्रीशिवगीतेषु सिद्धान्तागमेषु शिवाद्वैतविद्यायां शिवयोगशास्त्रे श्रीरेणुकागस्त्य संवादे वीरशैवधर्मनिर्णये श्रीशिवयोगिशिवाचार्यविरचिते श्रीसिद्धान्तशिखामणौ श्रीरेणुकागस्त्यसम्भाषणप्रसङ्गोनाम चतुर्थः परिच्छेदः।***

**यस प्रकार श्रीसिद्धान्तशिखामणिको रेणुकागस्त्यदर्शन नामक चतुर्थपरिच्छेदको आचार्य हरिप्रसादअधिकारी कृत सुबोधिनी नामक नेपाली व्याख्या पूर्णभयो ।**
**।। चतुर्थपरिच्छेद पूर्ण भयो ।।**

ooo

CC-0. Jangamwadi Math Digital Collection.

# पञ्चमः परिच्छेदः

### श्रीरेणुकाचार्येण अगस्त्यऋषये तत्त्वोपदेशः

**अथागस्त्यवचः श्रुत्वा रेणुको गणनायकः।**
**ध्यात्वा क्षणं महादेवं साम्बमाह समाहितः।।१।।**

**भावार्थ** : **रेणुकाचार्यद्वारा अगस्त्यऋषिलाई तत्त्वोपदेश** - यस पछाड़ि गणाधिपति रेणुकाचार्यले अगस्त्यऋषिका वचनलाई सुनेर शान्तचित्त भएर माता पार्वतीसहित महादेवको एक क्षण ध्यान गरेर भन्नुभयो ।।१।।

**अगस्त्य मुनिशार्दूल समस्तागमपारग।**
**शिवज्ञानकरं वक्ष्ये सिद्धान्तं शृणु सादरम्।।२।।**

**भावार्थ** : हे समस्त आगमहरूका पारगामी मुनिश्रेष्ठ अगस्त्यजी म तपाँईलाई शिवज्ञान दिनेवाला सिद्धान्त बताउनेछु, कृपया आदरपूर्वक श्रवण गर्नुहोस् ।।२।।

**अगस्त्य खलु सिद्धान्ता विख्याता रुचिभेदतः।**
**भिन्नाचारसमायुक्ता भिन्नार्थप्रतिपादकाः।।३।।**

**भावार्थ** : हे अगस्त्य! रुचि भेदले भिन्न-भिन्न आचार-विचार भएका भिन्न-भिन्न विषयहरूलाई लिएर अनेक सिद्धान्त संसारमा प्रचलित छन् ।।३।।

**सांख्यं योगः पाञ्चरात्रं वेदाः पाशुपतं तथा।**
**एतानि मानभूतानि नोपहन्यानि युक्तिभिः।।४।।**

**भावार्थ** : ती सिद्धान्तहरूमा सांख्य, योग, पाञ्चरात्र, वेद तथा पाशुपत यी प्रामाणिक दर्शन हुन्, तर्कद्वारा यिनीहरूको खण्डन गर्नुहुँदैन ।।४।।

**वेदः प्रधानं सर्वेषां सांख्यादीनां महामुने।**
**वेदानुसरणादेषां प्रामाण्यमिति निश्चितम्।।५।।**



**भावार्थ** : हे महामुने! वेद, सांख्य आदि समस्तशास्त्रहरूमा प्रधानशास्त्र हो। वेदको अनुसरण गर्नाले नै यी सांख्य आदि दर्शनको पनि प्रामाण्य निश्चित भएको हो ।।५।।

**पाञ्चरात्रस्य सांख्यस्य योगस्य च तथा मुने।**
**वेदैकदेशवर्तित्वं शैवं वेदमयं मतम्।।६।।**

**भावार्थ** : हे मुने! पाञ्चरात्र, सांख्य तथा योग यी सिद्धान्तहरू मात्र वेदको एकभागलाई मान्दछन्, अतः तिनीहरू अंशतः वैदिक अथवा अर्धवैदिक हुन् । शैवसिद्धान्त पूर्णतया वेदमय अथवा पूर्ण वैदिक हो ।।६।।

**वेदैकदेशवर्तिभ्यः सांख्यादिभ्यो महामुने।**
**सर्ववेदानुसारित्वाच्छैवतन्त्रं विशिष्यते।।७।।**

**भावार्थ** : हे महामुने! वेदको एक भागलाई मात्रे सांख्य आदि हरूको अपेक्षा सम्पूर्ण वेदहरूको अनुसरणगर्ने शैवतन्त्र अर्थात् शैवशास्त्र विशिष्ट शास्त्र हो, सबै भन्दा विशिष्ट हो ।।७।।

**शैवतन्त्रमिति प्रोक्तं सिद्धान्ताख्यं शिवोदितम्।**
**सर्ववेदार्थरूपत्वात् प्रामाण्यं वेदवत् सदा।।८।।**

**भावार्थ** : शिवद्वारा उपदिष्ट सिद्धान्तनामक तन्त्र नै शैवतन्त्रको नामले कहिएको छ, सम्पूर्ण वेदहरूको तात्पर्य रूप हुनका कारण यसको प्रामाण्य सदा वेदको बराबर छ ।।८।।

**आगमा बहुधा प्रोक्ताः शिवेन परमात्मना।**
**शैवं पाशुपतं सोमं लाकुलं चेति भेदतः।।९।।**

**भावार्थ** : परमात्मा शिवले शैव, पाशुपत, सोम, लाकुल भेदले अनेक प्रकारका आगमहरूको उपदेश गर्नु भएको छ ।।९।।

**तेषु शैवं चतुर्भेदं तन्त्रं सर्वविनिश्चितम्।**
**वामं च दक्षिणं चैव मिश्रं सिद्धान्तसंज्ञकम्।।१०।।**

CC-0. Jangamwadi Math Digital Collection.

**भावार्थ** : ती आगमहरूमा शैवतन्त्र वाम दक्षिण मिश्र र सिद्धान्त नामले चार प्रकारको मानिन्छ, सबै आचार्यहरूको यहि मत छ ॥१०॥

**शक्तिप्रधानं वामाख्यं दक्षिणं भैरवात्मकम्।**
**सप्तमातृपरं मिश्रं सिद्धान्तं वेदसंमतम्।।११।।**

**भावार्थ** : वाम नामकतन्त्र शक्तिप्रधान तन्त्र मानिन्छ, दक्षिण तन्त्र भैरवप्रधान हुन्छ, मिश्रतन्त्र सप्तमात्रिका प्रधान हुन्छ तथा सिद्धान्ततन्त्र पूर्णरूपले वेदसम्मत या वेदप्रधान हुन्छ ॥११॥

**वेदधर्माभिधायित्वात् सिद्धान्ताख्यः शिवागमः।**
**वेदबाह्यविरोधित्वाद् वेदसंमत उच्यते।।१२।।**

**भावार्थ** : सिद्धान्त नामक शिवागम वेदोक्त धर्मको प्रतिपादक तथा वेदविरोधी-हरूको विरोधी हुनाले वेदसम्मत मानिन्छ ॥१२॥

**वेदसिद्धान्तयोरैक्यमेकार्थप्रतिपादनात् ।।१३।।**
**प्रामाण्यं सदृशं ज्ञेयं पण्डितैरेतयोः सदा।।१३।।**

**भावार्थ** : एक अर्थ अर्थात् समान विषयको प्रतिपादन गर्नाले पण्डितहरू वेद तथा शैवसिद्धान्त यी दुवैको प्रामाण्य एक समान मान्दछन् अथवा पण्डितले दुबैको प्रामाण्य एक समान मान्नु पर्छ ॥१३॥

**सिद्धान्ताख्ये महातन्त्रे कामिकाद्ये शिवोदिते।**
**निर्दिष्टमुत्तरे भागे वीरशैवमतं परम्।।१४।।**

**भावार्थ** : शिवद्वारा उपदिष्ट कामिकागम देखि लिएर वातुलागम सम्मका विषयहरूको सिद्धान्त नामक महातन्त्रका उत्तरभागमा उत्कृष्ट वीरशैव मतको प्रतिपादन गरिएको छ ॥१४॥

**विद्यायां शिवरूपायां विशेषाद् रमणं यतः।**
**तस्मादेते महाभागा वीरशैवा इति स्मृताः।।१५।।**



**भावार्थ** : यस सिद्धान्तमा शिवरूपा विद्यामा साधकद्वारा विशेषरूपले रमण गरिन्छ । अतएव महाभाग्यशाली यिनीहरूलाई वीरशैवनामले सम्बोधित गरिन्छ ॥१५॥

**वीशब्देनोच्यते विद्या शिवजीवैक्यबोधिका।**
**तस्यां रमन्ते ये शैवा वीरशैवास्तु ते मताः।।१६।।**

**भावार्थ** : अथवा 'वी' शब्दले शिवजीवको ऐक्यरूपा विद्या कहिन्छ। जो शैव त्यसमा रमण गर्दछन्, ती वीरशैव मानिन्छन् ॥१६॥

**विद्यायां रमते यस्मान्मायां हेयां श्ववद्रहरेत्।**
**अनेनैव निरुक्तेन वीरमाहेश्वरः स्मृतः।।१७।।**

**भावार्थ** : त्यो वीरशैव विद्यामा रमण गर्दछ तथा कुक्कुरलाई त्यागे सरी मायाको त्याग गर्दछ, यस निरुक्तिद्वारा त्यो वीरशैव वीरमाहेश्वर नामले पनि जानिन्छ ॥१७॥

**वेदान्तजन्यं यज्ज्ञानं विद्येति परिकीर्त्यते।**
**विद्यायां रमते तस्यां वीर इत्यभिधीयते।।१८।।**

**भावार्थ** : अथवा जो ज्ञान वेदान्तबाट उत्पन्न हुन्छ त्यसैलाई विद्या भनिन्छ । त्यस विद्यामा जो साधक रमण गर्दछ त्यही वीरशैव कहलाउँदछ ॥१८॥

**शैवैर्माहेश्वरैश्चैव कार्यमन्तर्बहिःक्रमात्।**
**शिवो महेश्वरश्चेति नात्यन्तमिह भिद्यते।।१९।।**

**यथा तथा न भिद्यन्ते शैवा माहेश्वरा अपि।**
**शिवाश्रितेषु ते शैवा ज्ञानयज्ञरता नराः।।२०।।**

**भावार्थ** : शैव तथा माहेश्वर दुबै प्रकारका साधकहरूद्वारा लिङ्गार्चन हृदय भित्र तथा बाहिर क्रमशः गरिनु पर्दछ । जसप्रकारले शिव र महेश्वरमा आत्यन्तिक भेद छैन त्यस्तै प्रकारले शैव र माहेश्वरहरूमा पनि ऐकान्तिक भेद छैन ॥१९-२०॥

CC-0. Jangamwadi Math Digital Collection.

**माहेश्वराः समाख्याताः कर्मयज्ञरता भुवि।**
**तस्मादाभ्यन्तरे कुर्युः शैवा माहेश्वरा बहिः।।२१।।**

**भावार्थ** : शिवशरणागतहरूमा जो व्यक्तिहरू ज्ञानयज्ञमा संलग्न रहन्छन् तिनीहरू शैवनामले विख्यात हुन्छन्। जो पृथ्वीमा कर्मयोगमा संलग्न रहन्छन् तिनी माहेश्वर कहलाईन्छन्। यस कारण शैवहरूले आभ्यन्तर ज्ञानयज्ञको साधना गरुन् तथा माहेश्वर साधकले बाह्य अर्थात् कर्मयज्ञ गरुन् ।।२१।।

**वीरशैवाः षड्भेदाः**

**वीरशैवास्तु षड्भेदाः स्थलधर्मविभेदतः।**
**भक्तादिव्यवहारेण प्रोच्यन्ते शास्त्रपारगैः।।२२।।**

**भावार्थ** : **वीरशैवभेद-निरूपण**— षट् स्थन तथा उनका आचारका भेदले भक्त माहेश्वर आदि व्यवहारले शास्त्रका ज्ञाताहरूले वीरशैवको छ (६) भेद बताएका छन् ।।२२।।

**शास्त्रं तु वीरशैवानां षड्विधं स्थलभेदतः।।२३।।**
**धर्मभेदसमायोगाद् अधिकारिविभेदतः।।२३।।**

**भावार्थ** : स्थल भेद तथा धर्म भेद सहित अधिकारी भेदले वीरशैवहरूको शास्त्र छ प्रकारको हुन्छ ।।२३।।

**आदौ भक्तस्थलं प्रोक्तं ततो माहेश्वरस्थलम्।**
**प्रसादिस्थलमन्यत्तु प्राणलिङ्गिस्थलं ततः।।२४।।**

**भावार्थ** : पहिलो भक्तस्थल, त्यस पछाडि माहेश्वर स्थल, फेरी प्रसादी स्थल, तत्पश्चात् प्राणीलिङ्गी स्थल, शरणस्थल तथा छैठौं ऐक्यस्थल मानिएको छ ।।२४।।

**अंगस्थलान्तर्गतभक्तस्थलम्**

**शरणस्थलमाख्यातं षष्ठमैक्यस्थलं मतम्।**
**भक्तस्थलं प्रवक्ष्यामि प्रथमं कलशोद्भव।।**
**तदवान्तरभेदांश्च समाहितमनाः शृणु।।२५।।**



**भावार्थ** : **भक्तस्थलवर्णन**— हे कुम्भज! म पहिले भक्तस्थल तथा उसको अवान्तर भेदहरूको वर्णन गर्नेछु, स्थिरचित्त भएर सुन्नुहोस् ।।२५।।

**शैवी भक्तिः समुत्पन्ना यस्यासौ भक्त उच्यते।**
**तस्यानुष्ठेयधर्माणामुक्तिर्भक्तस्थलं मतम्।।२६।।**

**भावार्थ** : जसका मन भित्र शिव प्रति भक्ति उत्पन्न हुन्छ, त्यो भक्त कहलाइन्छ। उनि द्वारा अनुष्ठेय धर्महरूको प्रतिपादन गर्ने स्थल भक्तस्थल मानिन्छ ।।२६।।

**अवान्तरस्थलान्यत्र प्राहुः पञ्चदशोत्तमाः।**
**पिण्डता पिण्डविज्ञानं संसारगुणहेयता।।२७।।**

**दीक्षा लिङ्गधृतिश्चैव विभूतेरपि धारणम्।**
**रुद्राक्षधारणं पश्चात् पञ्चाक्षरजपस्तथा।।२८।।**

**भक्तमार्गक्रिया चैव गुरोर्लिङ्गस्य चार्चनम्।**
**जङ्गमस्य तथा ह्येषां प्रसादस्वीकृतिस्तथा।।२९।।**

**अत्र दानत्रयं प्रोक्तं सोपाधि निरुपाधिकम्।**
**सहजं चेति निर्दिष्टं समस्तागमपारगैः।।३०।।**

**एतानि शिवभक्तस्य कर्तव्यानि प्रयत्नतः।**

**भावार्थ** : विद्वान्हरूले यस भक्तस्थलका पन्द्र अवान्तर स्थलभेद बताएका छन् ती यस प्रकार छन् - १. पिण्डस्थल, २. पिण्डज्ञानस्थल, ३. संसारहेयस्थल, ४. दीक्षाप्राप्तिरूपगुरुकारूण्यस्थल, ५. लिङ्गधारण-स्थल, ६. विभूतिधारणस्थल, ७. रूद्राक्षधारणस्थल, ८. पञ्चाक्षर-जपस्थल, ९. भक्तिमार्गक्रियास्थल, १०. उभयस्थल (गुरू र शिवलिङ्गको पूजा), ११. त्रिविधसम्पत्तिको स्थल, १२. चतुर्विध सारायस्थल, इनको प्रसाद स्वीकृति तीन प्रकारका दान बताइएका छन् ती हुन्— १३. सोपाधि दानस्थल, १४. निरुपाधि दानस्थल, १५. सहज दान स्थल। यस प्रकार पन्द्र अवान्तरस्थल आगमशास्त्रका

CC-0. Jangamwadi Math Digital Collection.

विद्वानहरूद्वारा बताइएका छन्। शिवभक्त द्वारा इनको प्रयत्नपूर्वक अभ्यास गरिनु पर्दछ ॥२७-३०॥

पिण्डस्थलम् – (१)

**बहुजन्मकृतैः पुण्यैः प्रक्षीणे पापपञ्जरे।।३१।।**
**शुद्धान्तःकरणो देही पिण्डशब्देन गीयते ।**

**भावार्थ** : **पिण्डस्थलवर्णन**— अनेक जन्महरूमा अर्जित पुण्यद्वारा जब पाप पञ्जर अर्थात् पाप समूह नष्ट हुन्छ तब शुद्धअन्तस्करणले युक्त जीव पिण्ड कहलाउँछ । विशेष - जस्ता प्रकारले एक गमन क्रिया दुई खुट्टा बाट, एक दर्शन क्रिया दुई आँखाबाट सम्पन्न हुन्छ, त्यसै प्रकारले एक आत्मलाभ गुरूपदेश र स्वानुभव दुवै बाट सम्पादित हुन्छ ॥३१॥

**शिवशक्तिसमुत्पन्ने प्रपञ्चेऽस्मिन् विशिष्यते।।३२।।**
**पुण्याधिकः क्षीणपापः शुद्धात्मा पिण्डनामकः।**

**भावार्थ** : शिव तथा शक्तिले उत्पन्न यस प्रपञ्च(संसार) मा पापरहित तथा धेरै पुण्यभएको 'पिण्ड' नामक विशुद्ध आत्मा सबै बाट विलक्षण हुन्छ ॥३२-३३॥

**एक एव शिवः साक्षाच्चिदानन्दमयो विभुः।।३३।।**

**निर्विकल्पो निराकारो निर्गुणो निष्प्रपञ्चकः।**
**अनाद्यविद्यासम्बन्धात्तदंशो जीवनामकः।।३४।।**

**देवतिर्यङ्मनुष्यादिजातिभेदे व्यवस्थितः।**
**मायी महेश्वरस्तेषां प्रेरको हृदि संस्थितः।।३५।।**

**भावार्थ** : वस्तुत शिव एउटै छन् । ती साक्षात् चिदानन्दमय, व्यापक निर्विकल्पक निराकार निर्गुण एवं प्रपञ्च रहित हुनुहुन्छ । अनादि-अविद्या-सम्बन्धका कारणले जीवनामक उनको अंश देव, मनुष्य, तिर्यक्,(पशु, पक्षी) सरीसृप आदि जातिभेदयुक्त शरीरमा रहन्छ । ती समस्त जीवहरूका प्रेरक या



मायेश्वर (माया का ईश्वर) सबैका हृदयमा सूक्ष्मरूपले विराजमान हुनुहुन्छ ॥३४-३५॥

**विशेष :-** यो कथन वस्तुतः **'एकमेवाद्वितीयम्'** यस वेदवाक्यको छाया हो। एकम् एव र अद्वितीय यी तीन पदले ब्रह्ममा विजातीय सजातीय तथा स्वगत भेदको निषेध गर्दछन् । गाईको भैसी सँग रहेको भेद विजातीय हो एउटी गाईको अर्की गाई सँग हुने भेद सजातीय हो । यसैगरि एउटै गाईका सिंग, नाक,आँखा, मुख आदिमा भेदको कल्पना गर्नु स्वगतभेद हो । शिव ई तीनै प्रकारका भेदहरूले रहित हुनुहुन्छ । जीव उनकै अंश हो । यस विषयमा उक्त श्रुतिका साथै - **ममैवांशो जीवलोको जीवभूतः सनातनः** (श्रीमद्भगवद्गीता) तथा **अंशो नाना व्यपदेशात्** (२/३/४३ ब्र.सू.) आदि शास्त्र प्रमाण छन् ।

**चन्द्रकान्ते यथा तोयं सूर्यकान्ते यथानलः।**
**बीजे यथाङ्कुरः सिद्धस्तथात्मनि शिवः स्थितः।।३६।।**

**भावार्थ** : जसरी चन्द्रकान्तमणिमा जल, सूर्यकान्तमणिमा अग्नि तथा बीजमा अङ्कुर पहिलैदेखि स्थितभएको हुन्छ । त्यसरी नै प्रत्येक आत्मामा शिव रहनुहुन्छ ॥३६॥

**आत्मत्वमीश्वरत्वं च ब्रह्मण्येकत्र कल्पितम्।**
**बिम्बत्वं प्रतिबिम्बत्वं यथा पूषणि कल्पितम्।।३७।।**

**भावार्थ** : जस्ता प्रकारले एउटै पूषा अर्थात् सूर्यमा बिम्बत्व तथा प्रतिबिम्बत्व दुवै साथै रहन्छन् त्यसै प्रकारले एकैब्रह्ममा आत्मत्व तथा ईश्वरत्व दुइटै कल्पित छन् । मायामा प्रतिबिम्बित ब्रह्म ईश्वर तथा अविद्यामा प्रतिबिम्बित ब्रह्म जीव कहलाऊँछ ॥३७॥

**गुणत्रयविभेदेन परतत्त्वे चिदात्मनि।**
**भोक्तृत्वं चैव भोज्यत्वं प्रेरकत्वं च कल्पितम्।।३८।।**

**भावार्थ** : सत्व रजस् तमस् यी तीनगुणहरूका भेदले चित्स्वरूप तत्त्वमा भोकृत्व भोज्यत्व तथा प्रेरकत्व कल्पित हुन् वास्तविक होइनन् ॥३८॥

CC-0. Jangamwadi Math Digital Collection.

**गुणत्रयात्मिका शक्तिर्ब्रह्मनिष्ठा सनातनी।**
**तद्वैषम्यात् समुत्पन्ना तस्मिन् वस्तुत्रयाभिधा।।३९।।**

**भावार्थ** : ब्रह्ममा रहने त्रिगुणात्मिका शक्ति सनातनी अर्थात् नित्य हो । तीन गुणहरूका वैषम्यले उसब्रह्मबाटपनि तीन प्रकारका पदार्थ उत्पन्न भये ।।३९।।

**विशेष :-** श्लोकमा आएका **'ब्रह्मनिष्ठा'** पद शक्तिको विशेषण हो । त्यसको अर्थ हो ब्रह्ममा स्थित । यो स्थिति ब्रह्म र शक्तिको संयोगरूप होइन किनकि संयोग दुईपदार्थहरुको मात्र हुन सक्छ । श्लोकमा ब्रह्मनिष्ठा शक्तिको विशेषण हो । त्यस्को अर्थ हो - ब्रह्ममा स्थित । यो स्थिति ब्रह्म र शक्ति को संयोगरूप हैन किनभने संयोग दुईपदार्थ या एक पदार्थको बीचमा हुनेवाला क्रिया देखि उत्पन्न हुन्छ। यसको अतिरिक्त संयोग सम्बन्ध दुईवस्तुको एक अंशमा हुन्छ । ब्रह्म न क्रियावान् छ न सावयव । यस कारण यो स्थिति सामरस्यमयी हो। ब्रह्म र शक्तिको सम्बन्ध अग्नि र त्यस्को उष्णता, चन्द्र र त्यस्को शीतलताको समान छ । यो शक्ति ब्रह्म अथवा शिवको स्वभाव हो। यस विषयमा श्रीमद्भगवद्गीताको **'रसोऽहमप्सु कौन्तेय'** इत्यादि वाक्यहरू प्रमाण छन् ।

परमेश्वरको शक्ति नित्य सनातनी ज्ञान क्रियासामरस्यस्वरूपा छ। यो उनको स्वभाव अथवा स्वातन्त्र्य हो । परमेश्वर प्रकाशस्वरूप छ । उसको शक्ति यस प्रकाशको विमर्श हो । श्वेताश्वेतर उपनिषद्मा यस स्वरूपको वर्णन गर्ने क्रममा भनिएको छ कि- यसको पराशक्ति अनेक प्रकारले सुन्न सकिन्छ । ज्ञान, बल, क्रिया उसमा स्वभावले नै रहन्छन्। प्रश्न यो छ कि यदि त्यो शक्ति नित्य छ भने त्यसमा, संसारको रचना कसरी हुन्छ? उत्तरमा भन्न सकिन्छ कि जस्तै घ्यूमा काठिन्य आकस्मिकरूप देखिनै उत्पन्न हुन्छ त्यसरी नै उसमा संसारको अभिव्यक्ति पनि आकस्मिक हुन्छ । त्यस्को ज्ञानांश देखि सत्त्वगुणात्मिका विद्याशक्ति उत्पन्न हुन्छ । शुद्ध क्रियांशदेखि किञ्चित् (थोरै) सत्व र किञ्चित् तमस् देखि मिश्रित क्रियाशक्ति उत्पन्न हुन्छ । क्रिया ज्ञान हुँदैन, ज्ञान पनि क्रिया हुँदैन । यस प्रकारले अन्योऽन्याभावबुद्धि परमेश्वरको तमोगुण शक्ति हो यी तीनै शक्तिहरू परमेश्वरमा



मयूराण्डरसन्यायेन प्रच्छन्न अथवा सुप्त रहन्छन्। त्यस कारण सांख्यको परिणामवादको यहाँ अवकाश छैन । प्रश्न यो छ कि निरंशपरमेश्वरको शक्ति पनि निरंश छ । फेरी उस देखि अवयव युक्त सृष्टि कसरी हुन्छ? उत्तर यो छ कि जुन प्रकारले निरंश परमाणुमा संयोग सम्बन्ध भएभछि द्व्यणुक त्रसरेणु आदि बन्दछन् । त्यसरी नै यहाँ पनि निरवयव देखि सावयव सृष्टि हुन्छ । यसको अतिरिक्त परमेश्वरको शक्ति अघटित घटना पटीयसी हो । त्यो असम्भवलाई पनि सम्भव बनाउँदछ, यो नै परमेश्वरको स्वातन्त्र्य हो । प्रश्न यो छ कि त्यसो भए उसमा अविद्या पनि रहँदैन किनभने त्यो निरञ्जन र निरवद्य छ? उत्तर यो छ कि यस्तो मानने हो भने जीव र ईश्वरमा भेद रहँदैन । यदि भन्नु पर्‍यो कि यो विवेक प्रतिबिम्ब देखि हुन्छ भने यो सम्भव छैन किनभने मुख र दर्पण दुइटैको सत्ता हुँदा मात्रै बिम्ब प्रतिबिम्ब भाव हुन्छ, परमेश्वर त एउटा छ? उत्तर यो छ कि - पदार्थमा पनि बिम्ब प्रतिबिम्ब भाव परमेश्वरको सामर्थ्यातिशयको कारण, त्यस्तै प्रकारले सम्भव छ जस्तै स्वच्छ आकाशमा मलिनता आदि देखिन्छन्। यो संसार उनैको इच्छा देखि (बाट) अभिव्यक्त हुन्छ । यसको स्थिति सम्म नै शुद्धाशुद्धत्वको स्थिति रहन्छ । यसै स्थितिलाई ध्यानमा राखेर भनिएको छ जीव......दय: ।।

अन्तिम स्थितिमा केवल परमेश्वर नै रहन्छ । जीव अविद्या आदि कोहि पनि रहँदैन । जब सम्म ज्ञाता ज्ञान ज्ञेय यो त्रिपुटी बुद्धि रहन्छ तब सम्म सबै व्यवहार चल्दै रहन्छन् । जब ज्ञेयको ज्ञानमा र ज्ञानको ज्ञातामा लय हुन्छ तब ज्ञातृत्व पनि ज्ञेय-ज्ञान सापेक्ष हुन्छ। त्यस कारण शुद्ध चित्स्वरूप परमतत्त्वमात्रै शेष रहन्छ । अत: ब्रह्म अथवा शिवको विषयमा ब्राह्यप्रमाण समर्थ हुदैनन्, स्वानुभवमात्र प्रमाण हुन्छ । (ज०) (यतो०) इत्यादि वाक्य मनुष्यको उसको सांसारिकदशामा ब्रह्मको अस्तित्वको ज्ञान गराउँदछन्, उसका स्वरूपको बोध उसको विमर्शशक्तिरूपी कृपाको सहायता बाट हुन्छ ।

**किञ्चित्सत्त्वरजोरूपं भोक्तृसंज्ञकमुच्यते।**
**अत्यन्ततामसोपाधिर्भोज्यमित्यभिधीयते।।**
**परतत्त्वमयोपाधिर्ब्रह्मचैतन्यमीश्वर: ।।४०।।**

CC-0. Jangamwadi Math Digital Collection.

**भोक्ता भोज्यं प्रेरयिता वस्तुत्रयमिदं स्मृतम्।**
**अखण्डे ब्रह्मचैतन्ये कल्पितं गुणभेदत:।।४१।।**

**भावार्थ** : केही सत्त्व र केही रजोगुण का मिश्रणले उपहित(युक्त) चैतन्य भोक्ता कहिन्छ । अत्यन्त त्यस् उपाधियुक्त ब्रह्म भोज्य कहिन्छ। परत्त्वरूप सत्त्वको उपाधिले युक्त चैतन्य ईश्वर अर्थात् प्रेरक मानिन्छ । यस प्रकारले भोक्ता भोज्य अनि प्रेरक यी तीन पदार्थ मानिन्छन् । यी पदार्थहरु अखण्ड ब्रह्म चैतन्यमा गुणभेदले कल्पित छन् ।।४०-४१।।

**अत्र प्रेरयिता शम्भुः शुद्धोपाधिर्महेश्वरः।**
**संमिश्रोपाधयः सर्वे भोक्तारः पशवः स्मृताः।।४२।।**

**भोज्यमव्यक्तमित्युक्तं शुद्धतामसरूपकम्।**
**सर्वज्ञः प्रेरकः शम्भुः किञ्चिज्ज्ञो जीव उच्यते।।**
**अत्यन्तगूढचैतन्यं जडमव्यक्तमुच्यते।।४३।।**

**भावार्थ** : यी तीनैमा शुद्धसत्त्व उपाधि वाला महेश्वर अर्थात् शम्भु प्रेरयिता हुन् । अलिकति सत्त्व एवं तमोगुण बाट मिश्रित रजस् उपाधिवाला भोक्ता 'पशु' भनिएका छन् । शुद्ध तामस रूप अव्यक्त अर्थात् मूढ चैतन्य लाई भोज्यको संज्ञा दिइएको छ । प्रेरक शिव सर्वज्ञ हुनुहुन्छ । जी अल्पज्ञ छ । अत्यन्त गूढ चैतन्य-लाई जड या अव्यक्त भनिन्छ । वृक्ष आदि मात्र पिपासा (तिर्खा) धेरै देखिन्छ, हरियो घाँस तथा ढुंगा आदिमा पनि वृद्धि देखिन्छ त्यसकारण यो मान्नुपर्छ कि यी पदार्थहरूमा चैतन्य अत्यन्त गूढ (गुप्त) छ ।।४२-४३।।

**उपाधिः पुनराख्यातः शुद्धाशुद्धविभेदतः।**
**शुद्धोपाधिः परा माया स्वाश्रया मोहकारिणी।।४४।।**

**भावार्थ** : शुद्ध र अशुद्धका भेदले उपाधि दुईप्रकारको मानिएको छ। शुद्ध उपाधि माया हो जो आफैमा आश्रित रहन्छ, मायाले ईश्वरलाई मोहमा पार्न सक्दैन यदि स्वेच्छाले ईश्वर मायामा बाँधिन्छ भने त्यो ईश्वरको ऐश्वर्य हो ।।४४।।



**अशुद्धोपाधिरप्येवमविद्याश्रयमोहिनी ।**
**अविद्याशक्तिभेदेन जीवा बहुविधाः स्मृताः।।४५।।**

**भावार्थ** : अशुद्ध उपाधिनै अविद्या हो, यसले आफ्नो आश्रयभूत जीव-लाई मोहमा डुबाउँछ । अविद्याशक्तिका भेदले जीव अनेकप्रकारका मानिएका छन् ।।४५।।

**मायाशक्तिवशादीशो नानामूर्तिधरः प्रभुः।**
**सर्वज्ञः सर्वकर्ता च नित्यमुक्तो महेश्वरः।।४६।।**

**भावार्थ** : भगवान् शिव माया नामक शक्तिको सहायताले अनेक रूप धारण गर्नुहुन्छ, ती परमेश्वर सर्वज्ञ, सर्वकर्ता तथा नित्यमुक्त हुनुहुन्छ ।।४६।।

**विशेष -** निरूपाधि परमेश्वर जब शुद्धमायोपाधिले युक्त हुन्छ, तब उसले सद्योजात वामदेव, अघोर, तत्पुरुष तथा ईशानका रूपमा आफुलाई आभासित गराउँछ । तन्त्रशास्त्रमा यी पाँच चीज सदा शिवका पाँच मुख मानिएका छन् ।

**किञ्चित्कर्ता च किञ्चिज्ज्ञो बद्धोऽनादिशरीरवान्।**
**अविद्यामोहिता जीवा ब्रह्मैक्यज्ञानवर्जिताः।।४७।।**

**भावार्थ** : अनादिशरीरवाला परमेश्वर माया शक्तिद्वारा जब बद्ध हुन्छन्, तब तिनी किञ्चित् कर्ता, अल्पज्ञ अर्थात् जीवरूपमा परिणत हुन्छन् ।।४७।।

**परिभ्रमन्ति संसारे निजकर्मानुसारतः।**
**देवतिर्यङ्मनुष्यादिनानायोनिविभेदतः ।।४८।।**

**भावार्थ** : अविद्याका कारण मोहयुक्त जीव स्वात्मब्रह्मैक्य ज्ञानबाट रहित भएर आफ्ना कर्म अनुसार, देव, तिर्यक्, मनुष्य, आदि अनेक योनिका भेदले युक्त भएर संसारमा परिभ्रमण गर्दछन् ।।४८।।

**अथ कथं भ्रमन्तीत्याह**

**चक्रनेमिक्रमेणैव भ्रमन्ति हि शरीरिणः।**
**जात्यायुर्भोगवैषम्यकारणं कर्म केवलम्।।४९।।**

CC-0. Jangamwadi Math Digital Collection.

**भावार्थ** : शरीरधारी जीवचक्रका मध्यभागमा स्थित गोलाका समान क्रमै संग संसारमा भ्रमण गरिरहन्छन्, जन्म, आयु तथा भोगहरूको विषमताको कारण केवल कर्म हो ॥४९॥

**एतेषां देहिनां साक्षी प्रेरकः परमेश्वरः।**
**एतेषां भ्रमतां नित्यं कर्मयन्त्रनियन्त्रणे।।५०।।**

**भावार्थ** : नित्य भ्रमण गर्ने यी जीवहरूको कर्मरूपी यन्त्रलाई नियन्त्रण गरी प्रेरणा दिनेवाला परमेश्वर नै यिनको साक्षी हो ॥५०॥

**देहिनां प्रेरकः शम्भुर्हितमार्गोपदेशकः।**
**पुनरावृत्तिरहित-मोक्षमार्गोपदेशकः ।।५१।।**

**भावार्थ** : शिव नै शरीरधारीहरूको प्रेरक तथा हितकारीमार्गको उपदेशक हुनुहुन्छ । उनै पुनर्जन्म रहित ऐकान्तिक तथा आत्यन्तिक मोक्षका उपदेष्टा (उपदेश दिने वाला) हुन् ॥५१॥

**स्वकर्मपरिपाकेन प्रक्षीणमलवासनः।**
**शिवप्रसादाज्जीवोऽयं जायते शुद्धमानसः।।५२।।**

**भावार्थ** : आफ्ना कर्महरूको पूर्णपाक भएपछि जीवको मल तथा वासना क्षीण हुन जान्छ । तब शिवका अनुग्रहले यो जीव शुद्ध चित्तवाला हुन्छ ॥५२॥

**शुद्धान्तःकरणे जीवे शुद्धकर्मविपाकतः।**
**जायते शिवकारुण्यात् प्रस्फुटा भक्तिरैश्वरी।।५३।।**

**भावार्थ** : शुद्ध अन्तःकरण भएका जीवका भित्री हृदयमा शुद्धकर्मको परिपाकले शिवको करूणावश शिवप्रति निर्मल भक्ति उत्पन्न हुन्छ ॥५३॥

**जन्तुरन्त्यशरीरोऽसौ पिण्डशब्दाभिधेयकः।।५४।।**

**भावार्थ** : अन्तिम शरीरवाला यो जीव पिण्डशब्दको वाच्य हुन्छ अर्थात् पिण्डशब्दले जानिन्छ ॥५४॥



**पिण्डज्ञानस्थलम् – (२)**

**शरीरात्मविवेकेन पिण्डज्ञानी स कथ्यते।**
**शरीरमेव चार्वाकैरात्मेति परिकीर्त्यते।।५५।।**

**भावार्थ** : **पिण्डज्ञानस्थल वर्णन**— जसले शरीर र आत्माको भेद जान्दछ त्यो पिण्डज्ञानी कहलाउँदछ । चार्वाकहरू शरीरलाई नै आत्मा मान्दछन् ॥५५॥

**इन्द्रियाणां तथात्मत्वमपरैः परिभाष्यते।**
**बुद्धितत्त्वगतैर्बौद्धैर्बुद्धिरात्मेति गीयते।।५६।।**

**नेन्द्रियाणां न देहस्य न बुद्धेरात्मता भवेत्।**
**अहंप्रत्ययवेद्यत्वाद् अनुभूतस्मृतेरपि।।५७।।**

**शरीरेन्द्रियबुद्धिभ्यो व्यतिरिक्तः सनातनः।**
**आत्मस्थितिविवेकी यः पिण्डज्ञानी स कथ्यते।।५८।।**

**भावार्थ** : यसैप्रकार अन्य चार्वाकहरू इन्दियहरूलाई आत्मा मान्दछन्। बुद्धितत्त्वलाई मूल मान्ने बौद्धहरू बुद्धि अर्थात् विज्ञानलाई नै आत्मा मान्दछन् । न इन्द्रिय, न शरीर, न बुद्धि नै आत्मा हो किनकि 'अहम् अहम्' उच्चारण गर्दा जो ज्ञान हुन्छ, आत्मा उसको विषय हो तथा अनुभूत विषयको स्मरण इन्द्रिय तथा बुद्धिबाट भिन्न सनातन नित्य छ, त्यही आत्मा हो । यस प्रकारको आत्मस्थितिको विवेकगर्नेवाला व्यक्ति पिण्डज्ञानी कहिन्छ ॥५६-५८॥

**विशेष -** धनपुत्र आदि बाह्यविषयहरूको नाशले दुःख उनको वृद्धिले सुख हुने हुनाले बाह्यविषय नै आत्मा हो यस्तो विचार सामान्यजनहरूको हुने गर्दछ, ती विषयहरू देखि भिन्न शरीर नै सुखदुःखको अनुभव गर्दछ। अतः शरीर नै आत्मा हो चार्वाकहरू यसै सिद्धान्तलाई मान्दछन् । अर्का प्रकारका चार्वाकहरू इन्द्रियलाई नै आत्मा मान्दछन् । यो मान्यता पनि उचित प्रतीत हुँदैन किनकि यदि इन्द्रिय समूहलाई नै आत्मा मानियो भने एक या दुई इन्द्रिय नष्ट हुँदा सबैको मरण भई हाल्थ्यो तथा एक-एक इन्द्रिय आत्मा हुँदो हो त जल मधुर पनि छ स्वच्छ

CC-0. Jangamwadi Math Digital Collection.

पनि छ, यस्तो दुई इन्द्रियबाट एकसाथ हुने ज्ञान सम्भव थिएन त्यसकारण इन्द्रिय आत्मा हुन सक्दैन, कुनै जनहरू बुद्धि नै आत्मा हो यस्तो सिद्धान्त मान्दछन् यसलाई स्वीकार्दा बुद्धि जड़ हुनाले आत्मालाई पनि जड मान्नुपर्ने हुन्छ । तर आत्मा चेतन छ किनकि आत्मा स्मृति तथा अनुभव दुवैले युक्त हुन्छ। अत: बुद्धि आत्मा हो भन्ने मत पनि स्वीकार्य हुन सक्दैन, यस विषयमा ग्रन्थकारको कथन यस्तो छ - यो मेरो शरीर हो, यो मेरो बुद्धि हो, म यस प्रकार स्मरण गरिरहेको छु, मेरा इन्द्रियहरू नष्ट भएका छन्, तथापि म जानिरहेको छु इत्यादि अनुभवले सिद्ध हुन्छ कि उपर्युक्त इन्द्रियहरूबाट भिन्न कुनै आत्मा नामक अतिरिक्त तत्त्व छ। रूप, संज्ञा, संस्कार, विज्ञान र वेदना नामक पाँच स्कन्ध युक्त पदार्थ पनि आत्मा हुन सक्दैन, किनकि यदि रूपादि भान नै आत्मा हो भने त्यो अनित्य हुनेछ र सुषुप्ति तथा मूर्च्छाको अवस्थामा आत्माको अस्तित्व रहने छैन । यदि म जान्दछु इत्यादि अनुभवका आधारमा अहं प्रत्ययलाई नै आत्मा मान्ने हो भने, अहं प्रत्यय अनित्य हुनाले आत्मा पनि अनित्य हुन जानेछ, यदि अहं प्रत्ययलाई नित्य मान्ने हो भने हाम्रा सिद्धान्तको पुष्टि हुनेछ । आत्मा क्षणिक विज्ञानरूप पनि होइन किनकि विज्ञानरूपभन्नाले रूपज्ञान नष्ट भएपछि रसको स्मृति हुने वाला छैन तथा रूपस्मृतिको कोहि जनक पनि हुँदैन यस प्रकार समस्त लोक व्यवहार उच्छिन्न हुन्छ अर्थात् नष्ट हुन्छ । अत: कुनै यस्तो तत्त्व छ जो नित्य आफ्नो अनुसन्धान गर्ने वाला ज्ञानस्मृति तथा अपोहन शक्ति वाला छ । त्यही आत्मा हो । भगवानले गीतामा पनि भन्नु भएको छ ।

**''मत्तः स्मृतिर्ज्ञानमपोहनं च'' १५/१५**

अहम् अहं गर्दा जो ज्ञान हुन्छ त्यो आत्मा तत्स्वरूप नै छ। यहाँ यो ख्याल राख्नु पर्ने विषय छ कि वेदान्त अहंलाई ज्ञानको विषय मान्दछ। किनक ज्ञान वृत्तिसापेक्ष हुन्छ, वेदान्तका अनुसार आत्मा आफ्नु शुद्धरूपमा चित्स्वरूप हुन्छ किन्तु टीकाकार उसलाई अहं प्रत्यय स्वरूप बताउँछन् किनकि यसबाट भिन्न केहि पनि दृष्टिगोचर हुँदैन, यस्तो शंका गर्नु हुन्न कि सुषुप्ति अर्थात् मूर्च्छा कालमा उसको अनुभव न हुनाले त्यो अनित्य हो किनकि उक्त अवस्थाहरूमा त्यो शून्यस्थानमा निमग्न रहन्छ । यस कारण उसको प्रकाश तिरोहित रहन्छ, यदि



सुषुप्ति अवस्थामा आत्मा रहदैनथ्यो भने जागे पछि म सुखपूर्वक सुतें यस्तो सुखस्मृति हुँदैनथ्यो । किन्तु हुन्छ, अत: आत्मा नित्य छ, स्वतन्त्र अंशीभूत प्राणवायुका परिष्पन्दका कारणले त्यो त्याग तथा ग्रहणको कर्ता मानिन्छ ।

यहाँ यो प्रश्न उठ्छ कि उपर्युक्त विवरण बाट कुनै शरीरधारी जीवात्माको सिद्धि चाँहि गर्न सकिन्छ तर ईश्वरको सिद्धि गर्न सकिन्न। अत: जस्ता प्रकारले लोकमा दाउरा चिर्ने आदि क्रिया कर्मेन्द्रियका अधीनमा हुन्छन् तथा उनको कोहि न कोहि कर्ता अवश्य हुन्छ । जो स्वतन्त्र हुन्छ । यस्तै प्रकारले संसारका समस्त कार्यहरूका परमकर्ता ईश्वर हुन् । यसो भन्ने योगदर्शनका अनुयायिहरूको मत पनि खण्डित हुन जान्छ । किनकि आत्म तत्त्व नै ईश्वर हो न कि **'क्लेशकर्मविपााकाषयैः अपरामृष्टः पुरुषविशेष ईश्वरः' (पा.यो.सू.१२४)** यस सूत्रमा निर्दिष्ट पुरुष विशेष ।

**नश्वराणि शरीराणि नानारूपाणि कर्मणा।**
**आश्रितो नित्य एवासाविति जन्तोर्विवेकिता।।५९।।**

**भावार्थ** : यी शरीहरू नश्वर हुन् तथा कर्मका अनुसार अनेक रूप धारण गर्ने वाला हुन् यो आत्मा शरीरमा आश्रित रहने वाला तथा नित्य हो जबकि शरीर अनित्य हो, यही जीवको विवेक हो ॥५९॥

**शरीरात् पृथगात्मानमात्मभ्यः पृथगीश्वरम्।**
**प्रेरकं यो विजानाति पिण्डज्ञानीति कथ्यते।।६०।।**

**भावार्थ** : आत्मा शरीरबाट अलग छ तथा उसलाई प्रेरणा दिने ईश्वर आत्माहरूबाट भिन्न छ । यस प्रकारको ज्ञान जसलाई हुन्छ त्यसलाई पिण्डज्ञानी भनिन्छ ॥६०॥

**संसारहेयस्थल - (३)**

**निरस्तहृत्कलङ्कस्य नित्यानित्यविवेकिनः।**
**संसारहेयताबुद्धिर्जायते वासनाबलात्।।६१।।**

CC-0. Jangamwadi Math Digital Collection.

**भावार्थ** : **संसार हेयस्थल वर्णन**— जसका हृदयको कलङ्क अर्थात् मलिन वासना समाप्त भै सकेको हुन्छ, तथा जसले नित्य र अनित्यको भेद जान्दछ, सत् संस्कारवासनाका प्रभावले जसमा यो संसार हेय अर्थात् त्याज्य हो यस्तो बुद्धि (विवेक) उत्पन्न हुन्छ ॥६१॥

**ऐहिके क्षणिके सौख्ये पुत्रदारादिसंभवे।**
**क्षयित्वादियुते स्वर्गे कस्य वाञ्छा विवेकिनः।।६२।।**

**भावार्थ** : पुत्र स्त्री आदिबाट उत्पन्न यसलोकको क्षणिक सुख तथा क्षय(नाश) अतिशय(धेर-थोर) आदि दोषयुक्त स्वर्गसुखका लागि कुन विवेकीमा इच्छा हुन सक्छ? अर्थात् कुनै विवेकीलाई यस्तो इच्छा हुन सक्दैन ॥६२॥

**जातस्य हि ध्रुवो मृत्युर्ध्रुवं जन्म मृतस्य च।**
**जन्तुर्मरणजन्मभ्यां परिभ्रमति चक्रवत्।।६३।।**

**भावार्थ** : जसले जन्म लिन्छ उसको मृत्यु तथा जसको मृत्यु हुन्छ उसको जन्म निश्चित छ । मरण र जन्म द्वाराजीव चक्रवत् (चक्रजस्तै गरि) घुमी रहन्छ ॥६३॥

**मत्स्यकूर्मवराहाङ्गैर्नृसिंहमनुजादिभिः ।**
**जातेन निधनं प्राप्तं विष्णुनापि महात्मना।।६४।।**

**भावार्थ** : महात्मा विष्णुले पनि मत्स्य(माछो) कच्छप(कछुवा) शूकर(वराह) नरसिंह(नृसिंह) एवं मनुष्य राम, कृष्ण आदि अवतार ग्रहण गरेर मृत्यु प्राप्त गर्नु भयो ॥६४॥

**भूत्वा कर्मवशाज्जन्तुर्ब्राह्मणादिषु जातिषु।**
**तापत्रयमहावह्निसन्तापाद् दह्यते भृशम्।।६५।।**

**भावार्थ** : जीव आफ्ना पूर्वजन्मकृत कर्मका कारणले ब्राह्मण आदि जातिहरूमा उत्पन्न भएर (आध्यात्मिक, आधिदैविक, आधिभौतिक) तीन तापहरूको विशाल अग्निमा जलिरहेको हुन्छ ॥६५॥



**कर्ममूलेन दुःखेन पीड्यमानस्य देहिनः।।६६।।**
**आध्यात्मिकादिना नित्यं कुत्र विश्रान्तिरिष्यते।।६६।।**

**भावार्थ** : कर्मबाट उत्पन्न आध्यात्मिक आदि दुःखले सधैं पीडित हुने जीवलाई शान्ति कहाँ बाट मिल्न सक्छ? अर्थात् काँहिबाट पनि मिल्न सक्दैन ॥६६॥

**आध्यात्मिकं तु प्रथमं द्वितीयं चाधिभौतिकम्।**
**आधिदैविकमन्यच्च दुःखत्रयमिदं स्मृतम्।।६७।।**

**भावार्थ** : पहिलो आध्यात्मिक दोस्रो आधिभौतिक तेस्रो आदिदैविक यसप्रकार तीन दुःख मानिएका छन् ॥६७॥

**आध्यात्मिकं द्विधा प्रोक्तं बाह्याभ्यन्तरभेदतः।**
**वातपित्तादिजं दुःखं बाह्यमाध्यात्मिकं मतम्।।६८।।**

**भावार्थ** : बाह्य (बाहिरी) आभ्यन्तर (भित्री) भेदले आध्यात्मिक दुःख दुईप्रकारको मानिएको छ । वात, पित्त, श्लेष्मा(कफ) आदिबाट उत्पन्न दुःख बाह्य-आभ्यन्तर दुःख मानिएको छ ॥६८॥

**रागद्वेषादिसम्पन्नमान्तरं परिकीर्त्यते।**
**आधिभौतिकमेतद्धि दुःखं राजादिभूतजम्।।६९।।**

**भावार्थ** : राग द्वेष आदिबाट प्राप्त हुने दुःख आभ्यन्तर दुःख मानिन्छ अर्थात् कहिन्छ । तथा जो दुःख राजा आदिका कारणबाट उत्पन्न हुन्छ । त्यो आधिभौतिक दुःख मानिएको छ ॥६९॥

**आधिदैविकमाख्यातं ग्रहयक्षादिसम्भवम्।**
**दुःखैरेतैरुपेतस्य कर्मबद्धस्य देहिनः।।**
**स्वर्गे वा यदि वा भूमौ सुखलेशो न विद्यते।।७०।।**

**भावार्थ** : ग्रह, यक्ष, आदिबाट उत्पन्न दुःख आधिदैविक हो । यी दुःखहरूले युक्त तथा कर्मले बाधिएको जीवका लागि स्वर्ग या पृथिवीमा लेशमात्र (अलिकति पनि) सुख हुँदैन ॥७०॥

CC-0. Jangamwadi Math Digital Collection.

**तटित्सु वीचिमालासु प्रदीपस्य प्रभासु च।**
**सम्पत्सु कर्ममूलासु कस्य वा स्थिरतामतिः।।७१।।**

**भावार्थ** : आकाशमा चम्किने बिजुलीको लहर बत्तीको कान्ति तथा कर्मद्वारा अर्जित सम्पत्तिलाई कुन समझदार व्यक्तिले स्थिर मान्न सक्छ? अर्थात् कसैले मान्न सक्दैन ।।७१।।

**मलकोशे शरीरेऽस्मिन् महादुःखविवर्धने।**
**तडिदङ्कुरसङ्काशे को वा रुच्येत पण्डितः।।७२।।**

**भावार्थ** : मलको भण्डार तथा महादुःखलाई बढाउनेवाला बिजुलीको चमक समान नश्वर यस शरीरका विषयमा कुन बुद्धिमान् मनुष्यले प्रीति गर्नेछ? ।।७२।।

**नित्यानन्दचिदाकारमात्मतत्त्वं विहाय कः।**
**विवेकी रमते देहे नश्वरे दुःखभाजने।।७३।।**

**भावार्थ** : नित्य आनन्द एवं चित्स्वरूप आत्मतत्त्वलाई छोडेर कुन विवेकी मनुष्य यस नश्वर (नाशवान्) एवं दुःखको पात्र अर्थात् दुःखको भाँडो, यस शरीरमा रमण गर्नेछ? ।।७३।।

**विवेकी शुद्धहृदयो निश्चितात्मसुखोदयः।**
**दुःखहेतौ शरीरेऽस्मिन् कलत्रे च सुतेषु च।।७४।।**

**सुहृत्सु बन्धुवर्गेषु धनेषु कुलपद्धतौ।**
**अनित्यबुद्ध्या सर्वत्र वैराग्यं परमश्नुते।।७५।।**

**भावार्थ** : विवेकवान् शुद्ध हृदय भएको आत्मसुखनिश्चययुक्त मनुष्य दुःखको कारणभूत यस शरीर पत्नी, पुत्र, मित्र बन्धुवर्ग धन एवं कुलपरम्परामा अनित्य बुद्धि अर्थात् यो सबै अनित्य हो भन्ने विचार गरेर सर्वत्र परमवैराग्यको अनुभव गरिरहन्छ ।।७४-७५।।

**विवेकिनो विरक्तस्य विषयेष्वात्मरागिणः।।७६।।**
**संसारदुःखविच्छेदहेतौ बुद्धिः प्रवर्तते।।७६।।**



**भावार्थ** : विवेकी विषयहरूमा विरक्त आत्मामा अनुरक्त मनुष्यको बुद्धि संसारदुःखलाई नष्टगर्नाका लागि प्रवृत्त हुन्छ ।।७६।।

**नित्यानित्यविवेकिनः सुकृतिनः शुद्धाशयस्यात्मनो**
**ब्रह्मोपेन्द्रमहेन्द्रमुख्यविभवेष्वस्थायितां पश्यतः।**
**नित्यानन्दपदे निराकृतजगत्संसारदुःखोदये**
**साम्बे चन्द्रशिरोमणौ समुदयेद्भक्तिर्भवध्वंसिनी।।७७।।**

**भावार्थ** : नित्यानित्यको विवेकले युक्त पुण्यवान् पवित्र हृदय भएका ब्रह्मा, विष्णु, इन्द्र आदिका वैभवलाई अस्थाई मान्ने मनुष्यको नित्यानन्दको स्थानभूत, जंगम एवं संसरणील मृत्युलोकका दुःखलाई हटाउने अम्बा सहित चन्द्रमौलि (शङ्कर) मा संसारबन्धनलाई हटाउन सक्ने भक्ति उत्पन्न हुन्छ अर्थात् यस्तो भक्ति उत्पन्न हुनु पर्दछ ।।७७।।

***ॐ तत्सत् इति श्रीशिवगीतेषु सिद्धान्तागमेषु शिवाद्वैतविद्यायां शिवयोगशास्त्रे श्रीरेणुकागस्त्य संवादे वीरशैवधर्मनिर्णये श्रीशिवयोगिशिवाचार्यविरचिते श्रीसिद्धान्तशिखामणौ भक्तस्थले पिण्डादिस्थलत्रयप्रसङ्गो नाम पञ्चमः परिच्छेदः।***

**यस प्रकार श्रीसिद्धान्तशिखामणिको पिण्डज्ञान संसारहेयस्थलप्रसङ्ग नामक पञ्चमपरिच्छेदको आचार्य हरिप्रसादअधिकारी कृत सुबोधिनी नामक नेपाली व्याख्या पूर्णभयो ।**

❍❍❍

CC-0. Jangamwadi Math Digital Collection.

# षष्ठः परिच्छेदः

दीक्षालक्षणगुरुकारुण्यस्थल - (४)

**ततो विवेकसम्पन्नो विरागी शुद्धमानसः।**
**जिज्ञासुः सर्वसंसारदोषध्वंसकरं शिवम्।।१।।**

**उपैति लोकविख्यातं लोभमोहविवर्जितम्।**
**आत्मतत्त्वविचारज्ञं विमुक्तविषयभ्रमम्।।२।।**

**शिवसिद्धान्ततत्त्वज्ञं छिन्नसन्देहविभ्रमम्।**
**सर्वतन्त्रप्रयोगज्ञं धार्मिकं सत्यवादिनम्।।३।।**

**कुलक्रमागताचारं कुमार्गाचारवर्जितम्।**
**शिवध्यानपरं शान्तं शिवतत्त्वविवेकिनम्।।४।।**

**भस्मोद्धूलननिष्णातं भस्मतत्त्वविवेकिनम्।**
**त्रिपुण्ड्रधारणोत्कण्ठं धृतरूद्राक्षमालिकम्।।५।।**

**लिङ्गधारणसंयुक्तं लिङ्गपूजापरायणम्।**
**लिङ्गाङ्गयोगतत्त्वज्ञं निरूढाद्वैतवासनम्।।६।।**

**लिङ्गाङ्गस्थलभेदज्ञं श्रीगुरुं शिववादिनम्।**

**भावार्थ : दीक्षा लक्षण मुख्य कारूण्य स्थल वर्णन**— तत्पश्चात् विवेक सम्पन्न विरागी शुद्धचित्तयुक्त जिज्ञासु शिष्य गुरूका शरणमा जान्छ। गुरुको विशेषता यस प्रकार छ - त्यो गुरु समस्त संसारका दोषहरूको तथा दुःखहरूको नाश गर्नेवाला कल्याणकारी, लोकप्रसिद्ध, लोभमोहरहित, आत्मतत्त्वको विचारक, विषयका भ्रमबाट मुक्त, शिवाद्वैतसिद्धान्तका तत्त्वलाई जान्ने, सन्देहरहित, सम्पूर्णतन्त्रप्रयोग-हरूको ज्ञाता, धार्मिक, सत्यवादी, गुरूपरम्पराबाट, प्राप्त आचारको पालक कुमार्गको अनुसरण न गर्ने, शिवध्यानमा निमग्न, शान्त, शिवतत्त्व-विवेक सम्पन्न, भस्मधारणमा निष्णात, भस्मतत्त्वको ज्ञाता, त्रिपुण्ड्र धारण गर्नमा



उत्सुक, रूद्राक्षमाला धारणगर्ने, लिङ्गधारणले मुक्त, लिङ्गपूजापरायण, तत्त्वको ज्ञाता, दृढ अद्वैतभावना युक्त, लिङ्गाङ्गस्थलका भेदको ज्ञाता तथा शिववादी हुन्छ ॥१-६॥

**सेवेत परमाचार्यं शिष्यो भक्तिभयान्वितः।।७।।**
**षण्मासान् वत्सरं वापि यावदेष प्रसीदति।**

**भावार्थ** : गुरुमा भक्ति तथा संसारबाट भयले युक्त शिष्यले परमाचार्यको छ महिना अथवा एक वर्ष सम्म अथवा गुरु प्रसन्न होइञ्जेल सेवा गरोस् ॥७-८॥

**प्रसन्नं परमाचार्यं भक्त्या मुक्तिप्रदर्शकम्।।८।।**

**प्रार्थयेदग्रतः शिष्यः प्राञ्जलिर्विनयान्वितः।**
**भो कल्याण महाभाग शिवज्ञानमहोदधे।।९।।**

**आचार्यवर्य सम्प्राप्तं रक्ष मां भवरोगिणम्।**

**भावार्थ** : प्रसन्न तथा मोक्षमार्गका प्रदर्शक परमाचार्यका अगाडि उभिएर श्रद्धाभक्तियुक्त भएर हात जोडेर नम्रतासंग शिष्यले निवेदन गरोस् - हे कल्याणकारी महाभाग, शिवज्ञानका सागर आचार्यहरूमा श्रेष्ठ! हजूरका शरणमा आएको भवरोग(संसार) ले पीडित मेरो रक्षा गर्नुहोस् ॥८-९॥

**इति शुद्धेन शिष्येण प्रार्थितः परमो गुरुः।।१०।।**
**शक्तिपातं समालोक्य दीक्षया योजयेदमुम्।**

**भावार्थ** : शुद्धशिष्यद्वारा यस प्रकार प्रार्थना गरेपछि परमगुरुले शक्तिपातको अर्थात् शक्तिपातका चिह्नहरूको परीक्षा गरेर त्यस शिष्यलाई दीक्षा प्रदान गरोस् ॥१०-११॥

**दीयते च शिवज्ञानं क्षीयते पाशबन्धनम्।**
**यस्मादतः समाख्याता दीक्षेतीयं विचक्षणैः।।१२।।**

**भावार्थ** : जसरी यसद्वारा शिवतत्त्वको ज्ञान दिइन्छ तथा पाशबन्धनको नाश हुन्छ। त्यसकारण विद्वान्हरू यस संस्कारात्मक प्रक्रियालाई दीक्षा भन्दछन् ॥११-१२॥

CC-0. Jangamwadi Math Digital Collection.

**सा दीक्षा त्रिविधा प्रोक्ता शिवागमविशारदैः।।१२।।**
**वेधारूपा क्रियारूपा मन्त्ररूपा च तापस।**

**भावार्थ** : हे तपस्वी अगस्त्य! शैवागमका विद्वान्हरू यस दीक्षाको तीन प्रकार बतलाँउछन् - वेधारूपा, क्रियारूपा तथा मन्त्ररूपा ॥१२-१३॥

**गुरोरालोकमात्रेण हस्तामस्तकयोगतः।।१३।।**
**यः शिवत्वसमावेशो वेधादीक्षेति सा मता।**
**मान्त्री दीक्षेति सा प्रोक्ता मन्त्रमात्रोपदेशिनी।।१४।।**

**भावार्थ** : गुरूले शिष्यलाई देख्ने बित्तिकै आफ्नुहात शिष्यका मस्तकमा राख्नुहुन्छ। यस प्रकार शिष्यभित्र जो शिवतत्त्वको समावेश हुन्छ त्यसलाई वेधादीक्षा मानिएको छ। मात्र मन्त्रको उपदेश दिनुलाई मान्त्रीदीक्षा भनिन्छ ॥१३-१४॥

**कुण्डमण्डलिकोपेता क्रियादीक्षा क्रियोत्तरा।**
**शुभमासे शुभतिथौ शुभकाले शुभेऽहनि।।१५।।**
**विभूतिं शिवभक्तेभ्यो दत्त्वा ताम्बूलपूर्वकम्।**
**यथाविधि यथायोगं शिष्यमानीय देशिकः।।१६।।**
**स्नातं शुक्लाम्बरधरं दन्तधावनपूर्वकम्।**
**मण्डले स्थापयेच्छिष्यं प्राङ्मुखं तमुदङ् मुखः।।१७।।**
**शिवस्य नाम कीर्तिं च चिन्तामपि च कारयेत्।**

**भावार्थ** : गुरुले शुभ महिना, शुभ तिथि, शुभ दिन एवं शुभ कालमा ताम्बूल सहित भस्म शिवभक्तहरूलाई निमन्त्रण गर्नका लागि दिएर शास्त्रोक्त विधि अनुसार शिष्यलाई ल्याउन्। आउनु भन्दा पहिले शिष्यले दतिवन्, स्नान, तथा श्वेतवस्त्र धारण गरि सकेको हुनुपर्दछ। आचार्यले शिष्यलाई मण्डपभित्र पूर्वाभिमुख गरेर बसाउन् तथा स्वयम् उत्तराभिमुख भएर आसन ग्रहण गरून् तत्पश्चात् गुरूले शिष्यलाई शिवको ध्यान तथा शिवनामको उच्चारण गराउन् ॥१५-१८॥



**विभूतिपट्टं दत्त्वाग्रे यथास्थानं यथाविधि।।१८।।**
**पञ्चब्रह्ममयैस्तत्र स्थापितैः कलशोदकैः।**
**आचार्यः सममृत्विग्भिस्त्रिः शिष्यमभिषिञ्चयेत्।।१९।।**

**भावार्थ** : यस पछाडि यथास्थान र विधानका अनुसार भस्मको त्रिपुण्ड्र धारण गराउन्। पुनः आचार्यले त्यहाँ स्थापित पञ्चब्रह्म अर्थात् सद्योजात, वामदेव, अघोर, तत्पुरूष तथा ईशान अथवा ब्रह्मा, विष्णु, रूद्र, ईश्वर, तथा सदाशिव युक्त कलशहरूका जलले ऋत्विजहरूद्वारा तीन पटक शिष्यको अभिषेक गरून् ॥१८-१९॥

**अभिशिच्य गुरुः शिष्यमासीनं परितः शुचिम्।**
**ततः पञ्चाक्षरीं शैवीं संसारभयतारिणीम्।।२०।।**
**तस्य दक्षिणकर्णे तु निगूढमपि कीर्तयेत्।**
**छन्दो रूपमृषिं चास्य दैवतान्यासपद्धतिम्।।२१।।**

**भावार्थ** : गुरुले अगाडी बसेका सबै प्रकारले शुद्ध शिष्यका दाहिना कानमा संसार भय तारिणी पञ्चाक्षरी विद्या (ॐ नमः शिवाय) को गुप्तरूपले उच्चारण गरून् साथै यस विद्याको छन्दःस्वरूप ऋषि देवता तथा न्यासपद्धतिको पनि उपदेश गरून् ॥२०-२१॥

### लिङ्गधारणस्थल - (५)

**स्फाटिकं शैलजं वापि चन्द्रकान्तमयं तु वा।**
**बाणं वा सूर्यकान्तं वा लिङ्गमेकं समाहरेत्।।२२।।**

**भावार्थ** : **लिङ्गधारण स्थल वर्णन**— (यसपछि गुरुले) स्फटिक पत्थर चन्द्रकान्तमणि, नर्मदेश्वर अथवा सूर्यकान्तमणि द्वारा बनाइएको एक लिङ्ग ल्याउन् ॥२२॥

**सर्वलक्षणसंपन्ने तस्मिंल्लिङ्गे विशोधिते।**
**पीठस्थितेऽभिषिक्ते च गन्धपुष्पादिपूजिते।।२३।।**

CC-0. Jangamwadi Math Digital Collection.

**मन्त्रपूते कलां शैवीं योजयेद्विधिना गुरुः।**

**भावार्थ** : सबै लक्षणले युक्त त्यस लिङ्गलाई शुद्ध गरेर पीठमा राखेर त्यसको अभिषेक गरून् । गन्ध पुष्प आदि द्वारा उसको पूजा गरेर मन्त्रबाट पवित्रित गरेर त्यसमा विधिपूर्वक शैवीकलाको संयोजन गरून् ।।२३-२४।।

**शिष्यस्य प्राणमादाय लिङ्गे तत्र निधापयेत्।।२४।।**

**तल्लिङ्गं तस्य तु प्राणे स्थापयेदेकभावतः।**
**एवं कृत्वा गुरुर्लिङ्गं शिष्यहस्ते निधापयेत्।।२५।।**

**भावार्थ** : फेरि शिष्यका प्राणलाई लिएर अर्थात् अङ्कुशमुद्रा द्वारा आकृष्ट गरेर त्यस लिङ्गमा स्थापित गरून्, त्यस पछि त्यस लिङ्गलाई शिष्यका प्राणमा एकीभावले स्थापित गरून् । यस प्रकारको अनुष्ठान गरेर गुरुले त्यस लिङ्गलाई शिष्यका हातमा राखिदिउन् ।।२४-२५।।

**प्राणवद्धारणीयं तत्प्राणलिङ्गमिदं तव।**
**कदाचित्कुत्रचिद्वापि न वियोजय देहतः।।२६।।**

**भावार्थ** : यस पछि गुरुले शिष्यलाई आज्ञा दिउन् कि - तिमीले यस प्राणलिङ्गलाई आफ्नु प्राणजस्तै मानेर शरीरमा धारण गर्नु । कहिले पनि कुनै अवस्थामा पनि यसलाई आफ्नो शरीरबाट अलग हुन न दिनु ।।२६।।

**यदि प्रमादात्पतिते लिङ्गे देहान्महीतले।**
**प्राणान् विमुञ्च सहसा प्राप्तये मोक्षसम्पदः।।२७।।**

**भावार्थ** : यदि असावधानीका कारणले यो लिङ्ग शरीरबाट अलग भएर पृथ्वीमा खस्यो भने मोक्ष प्राप्तगर्नका लागि तत्काल आफ्नो प्राण त्यागि दिनु ।।२७।।

**इति सम्बोधितः शिष्यो गुरुणा शास्त्रवेदिना।**
**धारयेच्छाङ्करं लिङ्गं शरीरे प्राणयोगतः।।२८।।**

**भावार्थ** : शास्त्रजान्ने गुरुद्वारा यसप्रकार समझाए पछि त्यस शिष्यले शिवलिङ्गलाई प्राणधारणपर्यन्त अर्थात् बाँचुञ्जेल आफ्ना शरीरमा धारण गर्नु पर्छ ।।२८।।



**लिङ्गस्य धारणं पुण्यं सर्वपापप्रणाशनम्।**
**आदृतं मुनिभिः सर्वैरागमार्थविशारदैः।।२९।।**

**भावार्थ** : यस प्रकार लिङ्गको धारण पुण्यप्रद एवं समस्तपापहरूलाई नाश गर्नेवाला हुन्छ । आगमतत्त्व जान्ने समस्त पण्डित तथा मुनिहरूले यसतथ्यलाई आदरपूर्वक स्वीकारेका छन् ।।२९।।

**लिङ्गधारणमाख्यातं द्विधा सर्वार्थसाधकैः।**
**बाह्यमाभ्यन्तरं चेति मुनिभिर्मोक्षकाङ्क्षिभिः।।३०।।**

**भावार्थ** : सर्वार्थ साधक यस लिङ्गको धारण मोक्षार्थी मुनिहरूद्वारा बाह्य र आभ्यन्तर भेदले दुईप्रकारको बताइएको छ ।।३०।।

**चिद्रूपं परमं लिङ्गं शाङ्करं सर्वकारणम्।**
**यत्तस्य धारणं चित्ते तदान्तरमुदाहृतम्।।३१।।**

**भावार्थ** : समस्त संसारको कारण शङ्करको चिद्रूप लिङ्ग अत्यन्त श्रेष्ठ हो । चित्तमा उसलाई धारण गर्नु आन्तरधारण कहलाउँछ ।।३१।।

**चिद्रूपं हि परं तत्त्वं शिवाख्यं विश्वकारणम्।**
**निरस्तविश्वकालुष्यं निष्कलं निर्विकल्पकम्।।३२।।**

**सत्तानन्दपरिस्फूर्तिसमुल्लासकलामयम्।**
**अप्रमेयमनिर्देश्यं मुमुक्षुभिरुपासितम्।।३३।।**

**परं ब्रह्म महालिङ्गं प्रपञ्चातीतमव्ययम्।**

**भावार्थ** : शिवनामक चित्त रूप परमतत्त्व विश्वको कारण हो । समस्त मलिनताबाट रहित त्यो लिङ्ग निष्कल तथा निर्विकल्प हो, सत् चित् तथा आनन्द स्फुरणको समुल्लासयुक्तकलाले त्यो युक्त छ, अप्रमेय अनिर्देश्य तथा मोक्षार्थिजनहरूद्वारा उपासित छ, यस्तो प्रपञ्चातीत अर्थात् संसारदेखि पर परब्रह्मरूप लिङ्ग महालिङ्ग हो ।।३२-३३।।

**तदेव सर्वभूतानामन्तस्त्रिस्थानगोचरम्।।३४।।**

CC-0. Jangamwadi Math Digital Collection.

**मूलाधारे च हृदये भ्रूमध्ये सर्वदेहिनाम्।**
**ज्योतिर्लिङ्गं सदा भाति यद्ब्रह्मेत्याहुरागमाः।।३५।।**

**भावार्थ** : त्यहि समस्त प्राणिहरूका शरीरभित्र तीन स्थानहरूमा रहन्छ । तीन स्थान हुन् - समस्त शरीरधारिहरूमा स्थित मूलाधार हृदय तथा भ्रूमध्य त्यो ज्योतिरूपी लिङ्ग यी स्थानहरूमा सदा प्रकाशित रहन्छ, आगमशास्त्रले यसैलाई ब्रह्म भनेको छ ॥३४-३५॥

**अपरिच्छिन्नमव्यक्तं लिङ्गं ब्रह्म सनातनम्।**
**उपासनार्थमन्तःस्थं परिच्छिन्नं स्वमायया।।३६।।**

**भावार्थ** : अपरिच्छिन्न, अव्यक्त, सनातन ब्रह्मरूप लिङ्ग प्राणीहरू द्वारा उपासना गरिनुका लागि आफ्नो शक्तिले मूलाधार आदि भित्रस्थित तथा परिच्छिन्न भयो ॥३६॥

**लयं गच्छति यत्रैव जगदेतच्चराचरम्।**
**पुनः पुनः समुत्पत्तिं तल्लिङ्गं ब्रह्म शाश्वतम्।।३७।।**

**भावार्थ** : जसमा यो चर अचर जगत् लीन हुन्छ तथा पटक पटक उत्पन्न हुन्छ त्यो शाश्वत नित्य ब्रह्मरूपी लिङ्ग हो ॥३७॥

**तस्माल्लिङ्गमिति ख्यातं सत्तानन्दचिदात्मकम्।**
**बृहत्वाद् बृहणत्वाच्य ब्रह्मशब्दाभिधेयकम्।।३८।।**

**भावार्थ** : यस कारण त्यो चित्त आनन्दमयी सत्ता लिङ्ग नामले कहिन्छ, सबैको अपेक्षा बृहत् (ठूलो) हुनाले एवं सबैको पोषक हुनाले त्यही सच्चिदानन्दतत्त्व ब्रह्मशब्दको वाच्य हुन्छ । यस प्रकार परब्रह्म नै महालिङ्ग तथा महालिङ्ग नै परब्रह्म हो ॥३८॥

**आधारे हृदये वापि भ्रूमध्ये वा निरन्तरम्।**
**ज्योतिलिङ्गानुसन्धानमान्तरं लिङ्गधारणम्।।३९।।**

**भावार्थ** : मूलाधार हृदय तथा भ्रूमध्यमा त्यस ज्योतिर्लिङ्गको निरन्तर, अनुसन्धान गरिरहनुलाई आन्तरलिङ्ग धारण भनिन्छ ॥३९॥



**आधारे कनकप्रख्यं हृदये विद्रुमप्रभम्।**
**भ्रूमध्ये स्फटिकच्छायं लिङ्गं योगी विभावयेत्।।४०।।**

**भावार्थ** : योगीले मूलाधारमा सुनको रङ्ग जस्तो चम्किने, हृदयमा मुँगाका समान तथा भ्रूमध्यमा स्फटिकको आभायुक्त लिङ्गको ध्यान गर्नुपर्छ ॥४०॥

**निरुपाधिकमाख्यातं लिङ्गस्यान्तरधारणम्।**
**विशिष्टं कोटिगुणितं बाह्यलिङ्गस्य धारणात्।।४१।।**

**भावार्थ** : यस निरुपाधिक लिङ्गको आन्तरधारण बाह्यलिङ्गधारणको अपेक्षा करोडौं गुना श्रेष्ठ मानिन्छ ॥४१॥

**ये धारयन्ति हृदये लिङ्गं चिद्रूपमैश्वरम्।**
**न तेषां पुनरावृत्तिर्घोरसंसारमण्डले।।४२।।**

**भावार्थ** : जस-जसले आफ्ना हृदयमा चिद्रूप शिवलिङ्गलाई धारण गर्दछन् उनको यस घोरसंसारमण्डलमा पुनर्जन्म हुँदैन ॥४२॥

**अन्तर्लिङ्गानुसन्धानमात्मविद्यापरिश्रमः ।**
**गुरूपासनशक्तिश्च कारणं मोक्षसम्पदाम्।।४३।।**

**भावार्थ** : अन्तर्लिङ्गको ध्यान आत्मविद्यामा परिश्रम (अर्थात् आत्मज्ञान सम्बन्धी शास्त्रहरूको श्रवण मनन) तथा गुरुसेवाको सामर्थ्य यी तीन मोक्षप्राप्ति का कारण हुन् ॥४३॥

**वैराग्यज्ञानयुक्तानां योगिनां स्थिरचेतसाम्।**
**अन्तर्लिङ्गानुसन्धाने रुचिर्बाह्ये न जायते।।४४।।**

**भावार्थ** : यस कारण ज्ञान र वैराग्यले युक्त स्थिर चित्त योगिहरूको रुचि अन्तर्लिङ्गानुसन्धानमा हुन्छ, बाह्य लिङ्गानुसन्धानमा हुँदैन ॥४४॥

**ब्रह्मा विष्णुश्च रुद्रश्च वासवाद्याश्च लोकपाः।**
**मुनयः सिद्धगन्धर्वा दानवा मानवास्तथा।।४५।।**

CC-0. Jangamwadi Math Digital Collection.

**सर्वे च ज्ञानयोगेन सर्वकारणकारणम्।**
**पश्यन्ति हृदये लिङ्गं परमानन्दलक्षणम्।।४६।।**

**भावार्थ** : ब्रह्मा, विष्णु, रूद्र(अवर कोटिका रुद्र) इन्द्रादि लोकपाल, मुनिगण, सिद्ध, गन्धर्व, दानव, मानव, यी सबैले ज्ञानयोगद्वारा समस्तकारणहरूका पनि कारण परमानन्दस्वरूप लिङ्गको हृदयमा साक्षात्कार गर्दछन् ।।४५-४६।।

**तस्मात्सर्वप्रयत्नेन शाङ्करं लिङ्गमुत्तमम्।**
**अन्तर्विभावयेद्विद्वान् अशेषक्लेशमुक्तये।।४७।।**

**भावार्थ** : त्यस कारण विद्वान्हरूले क्लेशबाट मुक्तिका लागि उत्तमप्रयासले शिवलिङ्गको ध्यान आफ्ना अन्त:स्करणमा गरून् ।।४७।।

**अन्तर्धारयितुं लिङ्गमशक्तः शक्त एव वा।**
**बाह्यं च धारयेल्लिङ्गं तद्रूपमिति निश्चयात्।।४८।।**

**भावार्थ** : अन्तर्लिङ्गलाई धारण गर्नमा समर्थ होस् अथवा न होस्, बाह्यलिङ्गलाई अन्तर्लिङ्गको रूप मानेर उसलाई अवश्य धारण गर्नु पर्छ ।।४८।।

**लिङ्गं तु त्रिविधं प्रोक्तं स्थूलं सूक्ष्मं परात्परम्।**
**इष्टलिङ्गमिदं स्थूलं यद्बाह्ये धार्यते तनौ।।४९।।**

**प्राणलिङ्गमिदं सूक्ष्मं यदन्तर्भावनामयम्।**
**परात्परं तु यत्प्रोक्तं तृप्तिलिङ्गं तदुच्यते।।५०।।**

**भावार्थ** : स्थूल सूक्ष्म परात्पर भेदले तीन प्रकारको बताइएको छ। जो बाहिरी शरीरमा धारण गरिन्छ त्यो इष्टलिङ्ग स्थूल हो । प्राणलिङ्ग सूक्ष्म हुन्छ, जो अन्तर्भावनारूप हुन्छ । जसलाई परात्परलिङ्ग कहिन्छ त्यो तृप्तिलिङ्ग हो ।।४९-५०।।

**भावनातीतमव्यक्तं परब्रह्म शिवाभिधम्।**
**इष्टलिङ्गमिदं साक्षादनिष्टपरिहारतः।।**
**धारयेदवधानेन शरीरे सर्वदा बुधः।।५१।।**



**भावार्थ** : भावना देखि पर अर्थात् अगाडी त्यस कारण अव्यक्त शिवनामक पर ब्रह्म अनिष्टको परिहार (हटाउनु) गर्ने हुनाले साक्षात् इष्टलिङ्ग हो ।।५१।।

**मूर्ध्नि वा कण्ठदेशे वा कक्षे वक्षःस्थलेऽपि वा।**
**कुक्षौ हस्तस्थले वापि धारयेल्लिङ्गमैश्वरम्।।५२।।**

**भावार्थ** : शिरमा, घाँटीमा, पार्श्वमा(छेउमा) अथवा छातीमा कुक्षि अर्थात् पेटभन्दा माथि अथवा हत्केलामा शिवलिङ्गलाई धारण गर्नु पर्छ ।।५२।।

**नाभेरधस्ताल्लिङ्गस्य धारणं पापकारणम्।**
**जटाग्रे त्रिकभागे च मलस्थाने न धारयेत्।।५३।।**

**भावार्थ** : नाभिभन्दा मुनि लिङ्गधारण गर्नु पापको कारण हुन्छ, जटाको अग्रभागमा पीठमा तथा मलस्थानमा लिङ्गलाई धारण गर्नु हुँदैन ।।५३।।

**लिङ्गधारी सदा शुद्धो निजलिङ्गं मनोरमम्।**
**अर्चयेद् गन्धपुष्पाद्यैः करपीठे समाहितः।।५४।।**

**भावार्थ** : लिङ्गलाई धारण गर्ने जन सर्वदा शुद्ध हुन्छ । अत: लिङ्गधारणकर्ताले समाहित अर्थात् एकाग्रचित्त भएर आफ्नो मनोरम लिङ्गलाई हातरूपी पीठासनमा राखेर गन्ध पुष्प आदिले पूजा/अर्चना गरोस् ।।५४।।

**बाह्यपीठार्चनादेतत् करपीठार्चनं वरम्।**
**सर्वेषां वीरशैवानां मुमुक्षूणां निरन्तरम्।।५५।।**

**भावार्थ** : मोक्षार्थी समस्त वीरशैवहरूका लागि यो करपीठार्चनब्रह्मपीठार्चन भन्दा सदैव श्रेष्ठ हुन्छ ।।५५।।

**ब्रह्मविष्ण्वादयो देवा मुनयो गौतमादयः।**
**धारयन्ति सदा लिङ्गमुत्तमाङ्गे विशेषतः।।५६।।**

**लक्ष्म्यादिशक्तयः सर्वाः शिवभक्तिविभाविताः।**
**धारयन्त्यलिकाग्रेषु शिवलिङ्गमहर्निशम्।।५७।।**

CC-0. Jangamwadi Math Digital Collection.

**भावार्थ** : ब्रह्मा, विष्णु आदि देवतागण, गौतम आदि मुनिवृन्द, विशेषरूपले त्यसलिङ्गलाई उत्तमाङ्ग अर्थात् शिरमा धारण गर्दछन् । शिवभक्तिले परिपूर्ण लक्ष्मी आदि समस्त शक्तिहरू यस शिवलिङ्गलाई मस्तकमा धारण गरीरहन्छन् ॥५६-५७॥

**वेदशास्त्रपुराणेषु कामिकाद्यागमेषु च।**
**लिङ्गधारणमाख्यातं वीरशैवस्य निश्चयात्।।५८।।**

**भावार्थ** : वेद, शास्त्र, पुराण, कामिक, आदि आगमहरूमा वीरशैवका लागि लिङ्ग धारण आवश्यक बताइएको छ ॥५८॥

**ऋगित्याह पवित्रं ते विततं ब्रह्मणस्पते।**
**तस्मात्पवित्रं तल्लिङ्गं धार्यं शैवमनामयम्।।५९।।**

**भावार्थ** : ऋग्वेदले भनेको छ। हे ब्रह्मणस्पते ! (हे ब्रह्मन् !) यो शिवलिङ्ग वितत (फैलिएको) अर्थात् शिवादि धरण्यन्त (शिव देखि लिएर पृथ्वी पर्यन्त) छत्तीस तत्त्वहरूमा व्याप्त छ। अत: तिम्रा लागि पवित्र छ। यस कारण पनि यस अनामय शिवलिङ्गलाई धारण गर्नुपर्दछ ॥५९॥

**ब्रह्मेति लिङ्गमाख्यातं ब्रह्मणः पतिरीश्वरः।**
**पवित्रं तद्धि निख्यातं तत्सम्पर्कात्तनुः शुचिः।।६०।।**

**भावार्थ** : वस्तुत: लिङ्गलाई नै ब्रह्म भनिएको छ। ब्रह्माका पनि ईश्वर अर्थात् शिव हुन्, यसरी लिङ्गको पवित्रता बताइएको छ । उसका सम्पर्कले त्यसलाई धारणगर्ने हरूको शरीर पनि शुद्ध हुन्छ ॥६०॥

**अतप्ततनुरज्ञो वै आमः संस्कारवर्जितः।**
**दीक्षया रहितः साक्षान्नाप्नुयाल्लिङ्गमुत्तमम्।।६१।।**

**भावार्थ** : तपस्यारहित अज्ञानी आम अर्थात् काँचो अपरिपक्व अन्त:स्करण भएको संस्कारहीन तथा दीक्षाहीन मनुष्यले स्वत: धारण गर्नु हुँदैन। आफ्नो इच्छाले लिङ्ग धारण गर्नु पापको कारण हुन्छ ॥६१॥



**अघोराऽपापकाशीति या ते रुद्र शिवा तनूः।**
**यजुषा गीयते यस्मात् तस्माच्छैवोऽघवर्जितः।।६२।।**

**भावार्थ** : यजुर्वेदले भन्छ— हे रुद्र! तपाईको शरीर अघोर पापरहित तथा मंगलकारी छ, यस कारण लिङ्गलाई धारण गर्ने मनुष्य (शिवोपासक) निष्पाप अर्थात् पापले रहित हुन्छ ॥६२॥

**यो लिङ्गधारी नियतान्तरात्मा**
**नित्यं शिवाराधनबद्धचित्तः।**
**स धारयेत् सर्वमलापहत्यै**
**भस्मामलं चारु यथाप्रयोगम्।।६३।।**

**भावार्थ** : जो लिङ्गधारी संयत चित्तवाला भएर नित्य शिवाराधनामा मन लगाउँदछन्, उनीहरूले समस्त पापको नाशका लागि सुन्दर एवं निर्मलभस्मलाई विधिविधान अनुसार धारण गरून् ॥६३॥

***ॐ तत्सत् इति श्रीशिवगीतेषु सिद्धान्तागमेषु शिवाद्वैतविद्यायां शिवयोगशास्त्रे श्रीरेणुकागस्त्य संवादे वीरशैवधर्मनिर्णये श्रीशिवयोगिशिवाचार्यविरचिते श्रीसिद्धान्तशिखामणौ भक्तस्थले गुरुकारुण्यस्थललिङ्गधारणस्थल-प्रसङ्गो नाम षष्ठः परिच्छेदः।***

**यस प्रकार श्रीसिद्धान्तशिखामणिको गुरुकारूण्य लिङ्गधारण प्रसङ्ग नामक षष्ठपरिच्छेदको आचार्य हरिप्रसादअधिकारी कृत सुबोधिनी नामक नेपाली व्याख्या पूर्णभयो ।**
**।। षष्ठपरिच्छेद पूर्ण भयो ।।**



CC-0. Jangamwadi Math Digital Collection.

# सप्तम परिच्छेद

भस्मधारणस्थल - (६)

**भस्मधारणसंयुक्तः पवित्रो नियताशयः।**
**शिवाभिधानं यत्प्रोक्तं भासनाद्भसितं तथा।।१।।**

**महाभस्मेति सञ्चिन्त्य महादेवं प्रभामयम्।**
**वर्तन्ते ये महाभागा मुख्यास्ते भस्मधारिणः।।२।।**

**भावार्थ** : **भस्मधारणस्थल वर्णन**— भस्मधारणले युक्त मनुष्य निश्चित आशयवाला तथा पवित्र हुन्छ। जो शिवको (पञ्चाक्षर मन्त्ररूपी नाम कहिएको छ) शिवको भासन अर्थात् प्रकाशन गर्नाले त्यो भसित अर्थात् महाभस्म हो, यस्ता प्रभामय महादेवको ध्यान गर्दै जस-जसले मन्त्र जप आदि कार्यहरू गर्दछन्, तिनीहरूनै मुख्य भस्मधारी हुन् ।।१-२।।

**शिवाग्न्यादिसमुत्पन्नं मन्त्रन्यासादियोगतः।**
**तदुपाधिकमित्याहुर्भस्मतन्त्रविशारदाः ।।३।।**

**भावार्थ** : जो भस्म मन्त्र न्यास आदिका योगले शिवाग्निबाट उत्पन्न हुन्छ, शास्त्र जान्ने विद्वान्हरूले त्यसलाई सोपाधिक भस्म बताउँछन् ।।३।।

**विभूतिर्भसितं भस्म क्षारं रक्षेति भस्मनः।**
**एतानि पञ्चनामानि हेतुभिः पञ्चभिर्भृशम्।।४।।**

**भावार्थ** : भस्मका, विभूति, भषित, भस्म, क्षार तथा रक्षा यी पाँच नामहरू निश्चितरूपले पाँचकारणबाट भएका हुन् ।।४।।

**विभूतिर्भूतिहेतुत्वाद् भसितं तत्त्वभासनात्।**
**पापानां भर्त्सनाद्भस्म क्षरणात् क्षारमापदाम्।।५।।**

**रक्षणात् सर्वभूतेभ्यो रक्षेति परिगीयते।**



**भावार्थ** : भूति अर्थात् ऐश्वर्यको कारण हुनाले यसलाई विभूति भनिएको हो, तत्त्वको भासन अर्थात् प्रकाशन गर्नाले यसलाई भसित भनिएको हो, पापहरूको भर्त्सन अर्थात् नाशगर्नाले यसलाई भस्म भनिएको हो, आपत्तिहरूको क्षरण(नाश) गर्ने हुनाले यसलाई क्षार भनिएको हो। समस्त प्राणिहरूको रक्षा गर्नाले यसलाई रक्षा पनि भनिन्छ ।।५-६।।

**नन्दा भद्रा च सुरभिः सुशीला सुमनास्तथा।।६।।**
**पञ्च गावो विभोर्जाताः सद्योजातादिवक्त्रतः।**

**भावार्थ** : नन्दा, भद्रा, सुरभि, सुशीला, र सुमना यी पाँच गाईहरू परमेश्वरका सद्योजात आदि पाँच मुखहरूबाट उत्पन्न भएका हुन् तिनमा सद्योजातबाट नन्दा, वामदेव बाट भद्रा, अघोर बाट सुरभि, तत्पुरूष नामक मुखबाट सुशीला र ईशाननामक मुखबाट सुमना उत्पन्न भएकी हुन् ।।६-७।।

**कपिला कृष्णा च धवला धूम्रा रक्ता तथैव च।।७।।**

**नन्दादीनां गवां वर्णाः क्रमेण परिकीर्तिताः।**
**सद्योजाताद्विभूतिश्च वामाद्भसितमेव च।।८।।**

**अघोराद्भस्म संजातं तत्पुरुषात्क्षारमेव च।**
**रक्षा चेशानवक्त्राच्च नन्दादिद्वारतोऽभवत्।।९।।**

**भावार्थ** : ती नन्दा आदि गाईहरूको वर्ण(रंग) क्रमशः कपिल, कृष्ण, श्वेत, धूम्र, तथा रातो बताइएको छ। सद्योजातबाट विभूति, वामदेव बाट भसित अघोरबाट भस्म, तत्पुरूषबाट क्षार ईशानबाट रक्षा नामक भस्म नन्दा आदि द्वारा तयार गरिए ।।७-९।।

**धारयेन्नित्यकार्येषु विभूतिं च प्रयत्नतः।**
**नैमित्तिकेषु भसितं क्षारं काम्येषु सर्वदा।।१०।।**

**प्रायश्चित्तेषु सर्वेषु भस्म नाम यथाविधि।**
**रक्षा च मोक्षकार्येषु प्रयोक्तव्या सदा बुधैः।।११।।**

CC-0. Jangamwadi Math Digital Collection.

**भावार्थ** : नित्य कर्ममा विभूति, नैमित्तिकमा भसित, काम्यकर्ममा क्षार प्रायश्चित्त कर्ममा भस्म तथा मोक्षकार्यमा रक्षा नामक भस्मलाई विद्वान्हरूले विधिवत् धारण गरून् ॥१०-११॥

**नन्दादीनां तु ये वर्णाः कपिलाद्याः प्रकीर्तिताः।**
**त एव वर्णा विख्याता भूत्यादीनां यथाक्रमम्।।१२।।**

**भावार्थ** : नन्दा आदि गाईहरूको जुन जुन कपिल आदि रंगको चर्चा पहिले गरियो, भूति आदिका क्रममा पनि तिनै वर्ण (रंग) बताइएका छन् ॥१२॥

**भस्मोत्पादनमुद्दिष्टं चतुर्धा तन्त्रवेदिभिः।**
**कल्पं चैवानुकल्पं तु उपकल्पमकल्पकम्।।१३।।**

**एषामादिममुत्कृष्टमन्यत् सर्वमभावतः।**

**भावार्थ** : तन्त्रशास्त्रका विद्वान्हरूले कल्प, अनुकल्प, उपकल्प तथा अकल्प का भेदले भस्म उत्पत्तिको चार प्रकार बताएका छन् । यिनीहरूमा प्रथम अर्थात् पहिलो श्रेष्ठ मानिएको छ । उसका अभावमा अरू सबै ग्राह्य हुन्छन् ॥१३-१४॥

**यथाशास्त्रोक्तविधिना गृहीत्वा गोमयं नवम्।।१४।।**

**सद्येन वामदेवेन कुर्यात् पिण्डमनुत्तमम्।**
**शोषयेत्पुरुषेणैव दहेद् घोराच्छिवाग्निना।।१५।।**

**कल्पं तद्भस्म विज्ञेयमनुकल्पमथोच्यते।**
**वनेषु गोमयं यच्च शुष्कं चूर्णीकृतं तथा।।१६।।**

**दग्धं चैवानुकल्पाख्यमापणादिगतं तु यत्।**
**वस्त्रेणोत्तारितं भस्म गोमूत्राबद्धपिण्डितम्।।१७।।**

**दग्धं प्रागुक्तविधिना भवेद्भस्मोपकल्पकम्।**
**अन्यैरापादितं भस्माप्यकल्पमिति निश्चितम्।।१८।।**



**भावार्थ** : **भस्मोपादन विधि**— शास्त्रोक्त विधिले सद्योजात मन्त्रको उच्चारण गर्दै गाईको ताजा गोबर लिएर तत्काल वामदेव मन्त्रको उच्चारण गरी त्यसको सुन्दर पिण्ड (डल्लो) बनाउनु, तत्पुरूष मन्त्रले त्यसलाई घाममा सुकाउनु, तथा अघोर मन्त्रको उच्चारण गर्दै त्यसलाई जलाउनु (अर्थात् खरानी पार्नु) यस विधिले तयार गरिएको भस्म 'कल्प' कहलाउँछ। यस पछाडि अनुकल्पको विधि बताइन्छ। बनमा गाईको सुकेको तथा धूलो भएको जो गोबर हुन्छ त्यसलाई जलाएर बनाएको भस्म 'अनुकल्प' कहलाउँ छ। यस पछाडि जो भस्म दुकानबाट ल्याएर कपडाले छानेर गोमूत्रले पिण्ड बनाएर पूर्वोक्त विधिले जलाइन्छ त्यसलाई 'उपकल्प' भस्म भनिन्छ। अर्को विधिविधान न जान्ने हरूले बनाएको भस्म 'अकल्प' कहलाउँछ। यस्तो शास्त्रको निर्णय छ ॥१४-१८॥

**एष्वेकतममादाय पात्रेषु कलशादिषु।**
**त्रिसन्ध्यमाचरेत्स्नानं यथासंभवमेव वा।।१९।।**

**भावार्थ** : कलश आदि पात्रहरूमा राखिएको उपर्युक्त भस्महरूमा कुनै एक भस्मलाई लिएर प्रातः, मध्याह्न, तथा सायंकाल तीन सन्ध्यामा तीन पल्ट स्नान गर्नु अथवा यथाशक्ति एकपटक स्नान गर्नु ॥१९॥

**स्नानकाले करौ पादौ प्रक्षाल्य विमलाम्भसा।**
**वामहस्ततले भस्म क्षिप्त्वाच्छाद्यान्यपाणिना।।२०।।**

**अष्टकृत्वाथ मूलेन मौनी भस्माभिमन्त्र्य च।**
**शिर ईशानमन्त्रेण पुरुषेण मुखं तथा।।२१।।**

**हृत्प्रदेशमघोरेण वामदेवेन गुह्यकम्।**
**पादौ सद्येन सर्वाङ्गं प्रणवेनैव सेचयेत्।।२२।।**

**भावार्थ** : भस्म स्नान देखि पहिले स्वच्छजलले दुवै हात खुट्टा धोयेर देब्रे हातका हत्केलामा भस्म राख्नु दाहिनो हातले त्यसलाई छोपेर आठ बार मूलमन्त्र (ॐ नमः शिवाय) ले मौन भएर भस्मको अभिमन्त्रण गर्नु फेरि ईशानमन्त्रले शिर, तत्पुरुष मन्त्रले मुख, अघोरमन्त्रले हृदय, वामदेवमन्त्रले गुह्य (गुदद्वार) सद्योजात मन्त्रले खुट्टा तथा ॐकारले सर्वाङ्गको अभिषेक गर्नुपर्दछ ॥२०-२२॥

CC-0. Jangamwadi Math Digital Collection.

**भस्मना विहितं स्नानमिदमाग्नेयमुत्तमम्।**
**स्नानेषु वारुणाद्येषु मुख्यमेतन्मलापहम्।।२३।।**

**भावार्थ** : भस्मद्वारा गरिएको यो स्नान आग्नेयस्नान कहालाउँछ। वरुण आदि सातप्रकारका स्नान हरूमा यो स्नान मुख्य तथा आभ्यन्तर (भित्रको) मल (दोष) लाई हटाउनेवाला मानिएको छ ॥२३॥

**भस्मस्नानवतां पुंसां यथायोगं दिनेदिने।**
**वारुणाद्यैरलं स्नानैर्बाह्यदोषापहारिभिः।।२४।।**

**भावार्थ** : प्रतिदिन शास्त्र अनुसार भस्म स्नानगर्ने हरूका लागि बाह्य दोषलाई हटाउने वारुण आदि स्नानको कुनै आवश्यकता हुँदैन ॥२४॥

**आग्नेयं भस्मना स्नानं यतिभिस्तु विधीयते।**
**आर्द्रस्नानात्परं भस्म आर्द्रे जन्तुवधो ध्रुवम्।।२५।।**

**भावार्थ** : यतिजन (सन्यासीजन) ले भस्मद्वारा आग्नेय स्नान गर्दछन्। भस्मस्नान आर्द्र (गीलो) स्नान अर्थात् जनस्नान भन्दा श्रेष्ठ हुन्छ किन कि जल स्नानमा निश्चितरूपले प्राणिहरूको हिंसा हुन्छ।

**विशेष**— मान्त्र, भौम, आग्नेय, वायव्य, दिव्य, वारुण र मानस यी सात प्रकारका स्नान हुन्छन् ॥२५॥

**आर्द्रं तु प्रकृतिं विद्यात् प्रकृतिं बन्धनं विदुः।**
**प्रकृतेस्तु प्रहाणार्थं भस्मना स्नानमिष्यते।।२६।।**

**भावार्थ** : जललाई प्रकृति मात्र पर्दछ। विद्वान्हरूले प्रकृतिलाई बन्धन मान्दछन्। यस प्रकृति अर्थात् बन्धनलाई त्याग्न का लागि भस्मद्वारा स्नान गरिन्छ ॥२६॥

**ब्रह्माद्या विबुधाः सर्वे मुनयो नारदादयः।**
**योगिनः सनकाद्याश्च बाणाद्या दानवा अपि।।२७।।**

**भस्मस्नानयुताः सर्वे शिवभक्तिपरायणाः।**
**निर्मुक्तदोषकलिला नित्यशुद्धा भवन्ति हि।।२८।।**



**भावार्थ** : ब्रह्मा आदि देवता नारद आदि मुनिगण, सनक आदि योगी, बाण आदि राक्षस यी सबै भस्मस्नानले युक्त तथा शिवभक्तिमा संलग्न भएर दोषरूपी हिलोबाट मुक्त तथा नित्यशुद्ध भयेका हुन् ॥२७-२८॥

**नमःशिवायेति भस्म कृत्वा सप्ताभिमन्त्रितम्।**
**उद्धूलयेत्तेन देहं त्रिपुण्ड्रं चापि धारयेत्।।२९।।**

**भावार्थ** : ॐ नमः शिवाय यस मन्त्रले भस्मलाई सातपटक अभिमन्त्रित गर्नु पर्छ। पुनः त्यसलाई शरीरमा लगाउनु पर्छ। यसका साथै त्रिपुण्ड्र (तीन धर्के तेर्छो टिको) पनि लगाउनु पर्छ ॥२९॥

**सर्वाङ्गोद्धूलनं चापि न समानं त्रिपुण्ड्रकैः।**
**तस्मात् त्रिपुण्ड्रमेवैकं लिखेदुद्धूलनं विना।।३०।।**

**भावार्थ** : समस्त शरीरमा भस्म लगाउनु पनि त्रिपुण्ड्र बराबर हुँदैन। यस कारण (यदि इच्छा न भये) भस्म लेपन नगरिकन मात्र त्रिपुण्डधारण गर्नु पर्छ ॥३०॥

**त्रिपुण्ड्रं धारयेन्नित्यं भस्मना सलिलेन च।**
**स्थानेषु पञ्चदशसु शरीरे साधकोत्तमः।।३१।।**

**भावार्थ** : उत्तमकोटिको साधकले प्रतिदिन भस्म र पानी मिलाएर शरीरमा पन्द्र स्थानमा त्रिपुण्ड्र धारण गरून् ॥३१॥

**उत्तमाङ्गे ललाटे च श्रवणद्वितये तथा।**
**गले भुजद्वये चैव हृदि नाभौ च पृष्ठके।।३२।।**

**बाहुयुग्मे ककुद्देशे मणिबन्धद्वये तथा।**
**त्रिपुण्ड्रं भस्मना धार्यं मूलमन्त्रेण साधकैः।।३३।।**

**भावार्थ** : साधकहरूले मूलमन्त्रको उच्चारण गर्दै शिर, ललाट, दुबै कान, घाँटी, भुजा, हृदय, नाभि, पीठ, दुबै बाहु, ककुद अर्थात् काँधको मध्यभाग तथा दुबै मणिबन्धमा भस्मद्वारा त्रिपुण्ड्र धारण गर्नुपर्छ ॥३२-३३॥

CC-0. Jangamwadi Math Digital Collection.

**वामहस्ततले भस्म क्षिप्त्वाच्छाद्यान्यपाणिना।**
**अग्निरित्यादिमन्त्रेण स्पृशन् वाराभिमन्त्र्य च।।३४।।**

**त्रिपुण्ड्रमुक्तस्थानेषु दध्यात् सजलभस्मना।**
**शिवं शिवङ्करं शान्तं स प्राप्नोति न संशयः।।३५।।**

**भावार्थ** : जो भक्त यस पछाडि पुनः देब्रे हातका हत्केलामा भस्म राखेर दाहिने हातले त्यसलाई छोपेर 'अग्निरिति भस्म' इत्यादि मन्त्रले अभिमन्त्रित गरेर शरीरका उक्तस्थानहरूमा जलसहित भस्मले त्रिपुण्ड्र धारण गर्दछ, त्यो शान्त शिव शंकरमा प्राप्त हुन्छ, यसमा कुनै सन्देह छैन ॥३४-३५॥

**मध्याङ्गुलित्रयेणैव स्वदक्षिणकरस्य तु।**
**षडङ्गुलायतं मानमपि वाऽलिकमानकम्।।३६।।**

**नेत्रयुग्मप्रमाणेन फाले दध्यात् त्रिपुण्ड्रकम्।**

**भावार्थ** : अफ्ना हातको तर्जनी, मध्यमा, अनामिका यी तीन औंलाहरूले छ अंगुल लामा अथवा निधार जति लामो त्रिपुण्ड्र लगाउनु पर्छ ॥३६॥

**मध्यमाऽनामिकाङ्गुष्ठैरनुलोमविलोमतः ।।३७।।**
**धारयेद्यस्त्रिपुण्ड्राङ्कं स रुद्रो नात्र संशयः।**

**भावार्थ** : जस मनुष्यले मध्यमा, अनामिका, अंगुष्ठले अनुलोम, विलोम विधि द्वारा उलटा सीधा त्रिपुण्ड्र धारण गर्दछ, त्यो स्वयं रूद्र हुन्छ । यसमा कुनै सन्देह छैन ॥३७॥

**ऋजु श्वेतमनुव्याप्तं स्निग्धं श्रोत्रप्रमाणकम्।।३८।।**
**एवं सल्लक्षणोपेतं त्रिपुण्ड्रं सर्वसिद्धिदम्।**

**भावार्थ** : सरल सेतो एक अर्कामा टासिएको चिल्लो तथा कानसम्म तानिएको यस प्रकारका उत्तमलक्षणहरूले युक्त भएको त्रिपुण्ड्र सबै प्रकारको सिद्धि दिने हुन्छ ॥३८॥

**प्रातःकाले च मध्याह्ने सायाह्ने च त्रिपुण्ड्रकम्।।३९।।**



**कदाचिद्भस्मना कुर्यात् स रुद्रो नात्र संशयः।**
**एवंविधं विभूत्या च कुरुते यस्त्रिपुण्ड्रकम्।।**
**स रौद्रधर्मसंयुक्तस्त्रयीमय इति श्रुतिः।।४०।।**

**भावार्थ** : प्रातःकाल, मध्याह्न तथा सायंकालमा कुनै पनि समय कम से कम एकपटक भस्म स्नान गर्नें अथवा त्रिपुण्ड्र लगाउने पुरूष स्वयं रुद्र हुन्छ । यसमा सन्देह छैन । यस प्रकारले जसले भस्मको त्रिपुण्ड्र लगाउँछ, त्यो रूद्रधर्मले युक्त तथा वेदस्वरूप हुन जान्छ । यस्तो श्रुतिको कथन छ ॥३९-४०॥

**ब्रह्मा विष्णुश्च रुद्रश्च देवाः शक्रपुरोगमाः।**
**त्रिपुण्ड्रं धारयन्त्येव भस्मना परिकल्पितम्।।४१।।**

**वसिष्ठाद्या महाभागा मुनयः श्रुतिकोविदाः।**
**धारयन्ति सदाकालं त्रिपुण्ड्रं भस्मना कृतम्।।४२।।**

**भावार्थ** : ब्रह्मा, विष्णु, रुद्र, इन्द्र आदि देवतागण पनि भस्मद्वारा बनाइएका त्रिपुण्ड्रलाई सधैं धारण गर्दछन् । वेद शास्त्रमा पारंगत वशिष्ठ आदि विद्वान् हरू पनि भस्म निर्मित त्रिपुण्ड्रलाई सदा धारण गर्दथे ॥४१-४२॥

**शैवागमेषु वेदेषु पुराणेष्वखिलेषु च।**
**स्मृतीतिहासकल्पेषु विहितं भस्मपुण्ड्रकम्।।**
**धारणीयं समस्तानां शैवानां च विशेषतः।।४३।।**

**भावार्थ** : शैवागम, वेद, सबै पुराण, स्मृति इतिहास तथा कल्पग्रन्थहरूमा भस्म पुण्ड्रको विधान बताइएको छ । अतः सबैले विशेष शैवहरूले यसलाई धारण गर्नुपर्दछ ॥४३॥

**नास्तिको भिन्नमर्यादो दुराचारपरायणः।**
**भस्मत्रिपुण्ड्रधारी चेन्मुच्यते सर्वकिल्बिषैः।।४४।।**

**भावार्थ** : नास्तिक शास्त्रीय नियमहरूको उल्लङ्घन गर्नें दुराचारीले पनि यदि भस्मत्रिपुण्ड्रको धारण गर्दछ भने त्यो समस्तपापहरूबाट मुक्त हुन्छ ॥४४॥

CC-0. Jangamwadi Math Digital Collection.

रुद्राक्षधारणस्थल - (७)

**भस्मना विहितस्नानस्त्रिपुण्ड्राङ्कितमस्तकः।**
**शिवार्चनपरो नित्यं रुद्राक्षमपि धारयेत्।।४५।।**

**भावार्थ** : **रुद्राक्षधारणस्थल वर्णन**— जसले भस्मले स्नान गरेको छ, मस्तकमा त्रिपुण्ड्र धारण गरेको छ। तथा प्रतिदिन शिवको पूजा गर्दछ भने, उसले रूद्राक्ष पनि धारण गर्नु पर्दछ ॥४५॥

**रुद्राक्षधारणादेव मुच्यन्ते सर्वपातकैः।**
**दुष्टचित्ता दुराचारा दुष्प्रज्ञा अपि मानवाः।।४६।।**

**भावार्थ** : दूषित मन भएका दुराचारी, भ्रष्टबुद्धि मनुष्य पनि केवल रूद्राक्ष धारण गर्नाले समस्त पापहरूबाट विमुक्त हुन्छ ॥४६॥

**पुरा त्रिपुरसंहारे त्रिनेत्रो जगतां पतिः।**
**उदपश्यत् पुरां योगमुन्मीलितविलोचनः।।४७।।**

**निपेतुस्तस्य नेत्रेभ्यो बहवो जलबिन्दवः।**
**तेभ्यो जाता हि रुद्राक्षा रुद्राक्षा इति कीर्तिताः।।४८।।**

**भावार्थ** : प्राचीनकालमा विश्वका स्वामी भगवान् शंकरले त्रिपुर संहारका समयमा आँखा खोलेर यौगिक दृष्टिले (शाम्भवी मुद्रा) धेरै समयसम्म उनका योगलाई हेर्नु भयो, त्यसै समय उनका नेत्रबाट जो अश्रु(आँसु) पृथ्वीमा खसे तीनै रुद्राक्ष बने, यसप्रकार रुद्रका आँखा बाट उत्पन्न हुनाका कारण संसारमा यिनको रुद्राक्षनाम प्रसिद्ध भयो ॥४७-४८॥

**रुद्रनेत्रसमुन्पन्ना रुद्राक्षा लोकपावनाः।**
**अष्टत्रिंशत्प्रभेदेन भवन्त्युत्पत्तिभेदतः।।४९।।**

**भावार्थ** : रुद्रका नेत्रबाट उत्पन्न लोकलाई पवित्र गर्ने यी रुद्राक्ष उत्पत्तिका भेदले ३८ प्रकारका हुन्छन् ॥४९॥



**नेत्रात्सूर्यात्मनः शम्भोः कपिला द्वादशोदिताः।**
**श्वेताः षोडशसञ्जाताः सोमरूपाद्विलोचनात्।।५०।।**

**कृष्णा दशविधा जाता वह्निरूपाद्विलोचनात्।**
**एवमुत्पत्तिभेदेन रुद्राक्षा बहुधा स्मृता।।५१।।**

**भावार्थ** : शिवका सूर्यात्मक नेत्रबाट १२ कपिल वर्णका रुद्राक्ष उत्पन्न भए, चन्द्ररूप नेत्रबाट सेतो वर्णका १६रुद्राक्ष उत्पन्न भए, वह्निरूप नेत्र बाट १०प्रकारका काला वर्णका रुद्राक्ष उत्पन्न भए, यस प्रकार उत्पत्ति भेदले रुद्राक्ष अनेक प्रकारका हुन्छन् (१२+१५+१०=३८) ॥५०-५१॥

**अच्छिद्रं कनकप्रख्यमनन्यधृतमुत्तमम्।**
**रुद्राक्षं धारयेत् प्राज्ञः शिवपूजापरायणः।।५२।।**

**भावार्थ** : छिद्ररहित अर्थात् कीराले न खाएको सुनको रङ्गजस्तो तथा कसैले धारण न गरेको रुद्राक्ष उत्तम मानिन्छ, शिवपूजामा परायण बुद्धिमान् व्यक्तिले यस्तै किसिमको रुद्राक्षलाई धारण गर्नुपर्छ ॥५२॥

**यथास्थानं यथावक्त्रं यथायोगं यथाविधि।**
**रुद्राक्षधारणं वक्ष्ये रुद्रसायुज्यसिद्धये।।५३।।**

**भावार्थ** : अब म शिवसामुज्यका लागि स्थान मुखशास्त्र र विधानको दृष्टिले रुद्राक्षधारणको तरिका बताउने छु ॥५३॥

**शिखायामेकमेकास्यं रुद्राक्षं धारयेद् बुधः।**
**द्वित्रिद्वादशवक्त्राणि शिरसि त्रीणि धारयेत् ।।५४।।**

**षट्त्रिंशद्धारयेन्मूर्ध्नि नित्यमेकादशानान्।**
**दशसप्तपञ्चवक्त्रान् षट षट् कर्णद्वये वहेत्।।५५।।**

**षडष्टवदनान् कण्ठे द्वात्रिंशद्धारयेत् सदा।**
**पञ्चाशद्धारयेद् विद्वान् चतुर्वक्त्राणि वक्षसि।।५६।।**

**त्रयोदशमुखान् बाह्वोर्धरेत् षोडश षोडश।**
**प्रत्येकं द्वादश वहेन्नवास्यान् मणिबन्धयोः।।५७।।**

CC-0. Jangamwadi Math Digital Collection.

**चतुर्दशमुखं यज्ञसूत्रमष्टोत्तरं शतम्।**
**धारयेत् सर्वकालं तु रुद्राक्षं शिवपूजकः।।५८।।**

**भावार्थ** : विद्वान्ले एकमुखी रुद्राक्षलाई शिखामा धारण गरुन्। दुई तीन र बाह्रमुखी यी तीन प्रकारका रुद्राक्षलाई शिरमा धारण गरुन्। एकादशमुखी ३६ रुद्राक्षलाई मस्तकमा तथा दश, सात र पाँच मुखवाला रुद्राक्षलाई ६-६ को संख्यामा दुबै कानमा धारण गरुन्। छ तथा अष्ट मुखी रुद्राक्षलाई ३२ को संख्यामा घाँटीमा धारण गरुन्। चारमुखी पचास रुद्राक्षको माला विद्वानले वक्षस्थलमा धारण गरून्। १३मुख भएका १६-१६ रुद्राक्ष दुबै भुजामा धारण गरून्। नौ मुखी रुद्राक्ष लाई १२-१२ को संख्यामा दुबै मणिबन्धमा धारण गरुन्। १४ मुखी १०८रुद्राक्षको माला शिवार्चकले सँधै जनैका रूपमा धारण गरिराख्नुपर्छ ।।५४-५८।।

**एवं रुद्राक्षधारी यः सर्वकाले तु वर्तते।**
**तस्य पापकथा नास्ति मूढस्यापि न संशयः।।५९।।**

**भावार्थ** : यसरी जसले सँधैं रुद्राक्ष धारण गर्दछ, त्यो व्यक्ति मूर्ख, शास्त्र न जान्ने जथाभावी आचरण गर्ने भएपनि त्यसलाई कुनै पाप लाग्दैन ।।५९।।

**ब्रह्महा मद्यपायी च स्वर्णहृद् गुरुतल्पगः।**
**मातृहा पितृहा चैव भ्रूणहा कृतघातकः।।**
**रुद्राक्षधारणादेव मुच्यते सर्वपातकैः।।६०।।**

**भावार्थ** : ब्रह्मघाती, मद्यपायी, स्वर्णचोर, गुरूपत्नीसँग समागम गर्ने, माता पिताको हत्यागर्ने, गर्भको हत्या गर्ने, कृतघ्न जन पनि रूद्राक्ष धारण गर्नाले सबै पापहरूबाट मुक्त हुन्छ ।।६०।।

**दर्शनात् स्पर्शनाच्चैव स्मरणादपि पूजनात्।**
**रुद्राक्षधारणाल्लोके मुच्यन्ते पातकैर्जनाः।।६१।।**

**भावार्थ** : रूद्राक्षको दर्शन, स्पर्शन, स्मरण, पूजन, धारण गर्नाले मनुष्यहरू सबैपापबाट मुक्त हुन्छन् ।।६१।।



**ब्राह्मणो वान्त्यजो वापि मूर्खो वा पण्डितोऽपि वा।**
**रुद्राक्षधारणादेव मुच्यते सर्वपातकैः।।६२।।**

**भावार्थ** : ब्राह्मण होस् या अन्त्यज, मूर्ख होस् अथवा पण्डित केवल रूद्राक्ष धारणले सबै पापबाट विमुक्त हुन्छन् अर्थात् समस्त मानव जातिलाई रुद्राक्ष धारण गर्ने अधिकार छ ।।६२।।

**गवां कोटिप्रदानस्य यत्फलं भुवि लभ्यते।**
**तत्फलं लभते मर्त्यो नित्यं रुद्राक्षधारणात्।।६३।।**

**भावार्थ** : पृथ्वीमा एक करोड़ गाई दान गर्दा जो फल उत्पन्न हुन्छ। त्यो फल नित्य रूद्राक्ष धारण गर्नाले मनुष्यलाई प्राप्त हुन्छ ।।६३।।

**मृत्युकाले च रुद्राक्षं निष्पीड्य सह वारिणा।**
**यः पिबेच्चिन्तयन् रुद्रं रुद्रलोकं स गच्छति।।६४।।**

**भावार्थ** : मृत्यु समयमा रूद्राक्षलाई पानीमा पिसेर रूद्रको ध्यान गर्दै जसले उसको पान गर्छ अर्थात् पिउँदछ, त्यो रूद्रलोकमा प्राप्त हुन्छ ।।६४।।

**भस्मोद्धूलितसर्वाङ्गा धृतरुद्राक्षमालिकाः।**
**ये भवन्ति महात्मानस्ते रुद्रा नात्र संशयः।।६५।।**

**भावार्थ** : जो मनुष्यहरू शरीरमा भस्मलेपन गरेर तथा रुद्राक्षको माला धारण गरेर विचरण गर्दछन् ती महात्माहरू वस्तुतः रुद्र नै हुन् यसमा कुनै संशय छैन ।।६५।।

**नित्यानि काम्यानि निमित्तजानि**
**कर्माणि सर्वाणि सदापि कुर्वन्।**
**योभस्मरुद्राक्षधरो यदि स्याद्**
**द्विजो न तस्यास्ति फलोपपत्तिः।।६६।।**

**भावार्थ** : नित्य, काम्य तथा नैमित्तिक समस्त कर्महरूको आचारण गर्दै पनि जो द्विज भस्म तथा रुद्राक्ष धारण गर्नेवाला हुन्छ, उसले आफ्नो कर्मको फल भोग्नु पर्दैन अर्थात् त्यो मुक्त हुन्छ ।।६६।।

CC-0. Jangamwadi Math Digital Collection.

**सर्वेषु　　वर्णाश्रमसंगतेषु**
**नित्यं　　सदाचारपरायणेषु।**
**श्रुतिस्मृतिभ्यामिह　चोद्यमानो**
**विभूतिरुद्राक्षधरः　समानः।।६७।।**

**भावार्थ** : समस्त वर्णाश्रम धर्म पालन गर्नेहरूका बीचमा तथा नित्य सदाचारमा संलग्न जनहरूका बीचमा भस्म एवं रुद्राक्ष धारण गर्नेवाला व्यक्ति श्रुति र स्मृतिद्वारा समानरूपले आदरणीय हुन्छ ।।६७।।

***ॐ तत्सत् इति श्रीशिवगीतेषु सिद्धान्तागमेषु शिवाद्वैतविद्यायां शिवयोगशास्त्रे श्रीरेणुकागस्त्य संवादे वीरशैवधर्मनिर्णये श्रीशिवयोगिशिवाचार्यविरचिते श्रीसिद्धान्तशिखामणौ भक्तस्थले भस्मरुद्राक्षधारणस्थलप्रसङ्गो नाम सप्तमः परिच्छेदः।***

**यस प्रकार श्रीसिद्धान्तशिखामणिको भस्मरूद्राक्षधारणस्थल नामक सप्तमपरिच्छेदको आचार्य हरिप्रसादअधिकारी कृत सुबोधिनी नामक नेपाली व्याख्या पूर्णभयो ।**

**।। सप्तमपरिच्छेद पूर्ण भयो ।।**

❍❍❍

CC-0. Jangamwadi Math Digital Collection.

# अष्टमः परिच्छेदः

पञ्चाक्षरीजपस्थल - (८)

**धृतश्रीभूतिरुद्राक्षः प्रयतो लिङ्गधारकः।**
**जपेत्पञ्चाक्षरीविद्यां शिवतत्त्वप्रबोधिनीम्।।१।।**

**भावार्थ** : **पञ्चाक्षरजप स्थलवर्णन**— विभूति र रूद्राक्षलाई धारण गरेर साथै लिङ्गलाई धारण गरेर मनुष्यले शिव तत्त्वको ज्ञान गराउने पञ्चाक्षरीविद्याको (ॐ नमः शिवाय) जप गर्नु पर्छ ।।१।।

**शिवतत्त्वात् परं नास्ति यथा तत्त्वान्तरं महत्।**
**तथा पञ्चाक्षरीमन्त्रान्नास्ति मन्त्रान्तरं महत्।।२।।**

**भावार्थ** : जस्ता प्रकारले शिवतत्त्वभन्दा ठूलो अर्को कुनै तत्त्व छैन, त्यस्तै प्रकारले पञ्चाक्षरमन्त्रभन्दा श्रेष्ठ अर्को मन्त्र छैन ।।२।।

**ज्ञाते पञ्चाक्षरीमन्त्रे किं वा मन्त्रान्तरैः फलम्।**
**ज्ञाते शिवे जगन्मूले किं फलं देवतान्तरैः।।३।।**

**भावार्थ** : पञ्चाक्षरमन्त्रको ज्ञान भएपछि अरूमन्त्रहरूबाट के फायदा? संसारका कारणभूत शिवतत्त्वको ज्ञान भएपछि, अन्य देवताहरूको ज्ञानबाट के फल प्राप्त गर्ने? अर्थात् कुनै फलको आशा रहँदैन ।।३।।

**सप्तकोटिषु मन्त्रेषु मन्त्रः पञ्चाक्षरो महान्।**
**ब्रह्मविष्ण्वादिदेवेषु यथा शम्भुर्महत्तरः।।४।।**

**भावार्थ** : सात करोड़ मन्त्रहरूमा यो पञ्चाक्षरमन्त्र त्यस्तैप्रकारले महान् छ, जस्तै ब्रह्मा, विष्णु आदि देवताहरूमा शिव महान् हुनुहुन्छ ।।४।।

**अशेषजगतां हेतुः परमात्मा महेश्वरः।**
**तस्य वाचकमन्त्रोऽयं सर्वमन्त्रैककारणम्।।५।।**

**भावार्थ** : सम्पूर्ण विश्वको कारण परमात्मा शिव हुनुहुन्छ, उनको वाचक यो मन्त्र समस्त मन्त्रहरूको एक मात्र कारण हो ।।५।।



**तस्याभिधानमन्त्रोऽयमभिधेयश्च स स्मृतः।**
**अभिधानाभिधेयत्वान्मन्त्रात् सिद्धः परः शिवः।।६।।**

**भावार्थ** : यो मन्त्र उनको वाचक हो तथा उनी यस मन्त्रका वाच्य कहिन्छन्। वाच्य वाचक सम्बन्ध सिद्ध हुनाले मन्त्रबाट परमसिद्धिको प्राप्ति हुन्छ ।।६।।

**विशेष**— परात्रिंशिका अनुसार पृथ्वी देखि लिएर पुरूष सम्म २५ तत्त्व क देखि म सम्मका २५ अक्षरबाट उत्पन्न भएका हुन् । यसै प्रकारले अकारदेखि लिएर क्षकार पर्यन्तका वर्ण सृष्टिका कारण हुन्। यसरि यो सृष्टि वर्णहरूबाट उत्पन्न भएको हो । आचार्यहरूको कथन छ कि- ''शिवाय'' मा शकार परब्रह्मको तथा वकार माया तत्त्वको वाचक हो । यस प्रकारले शिवाय शब्द सम्पूर्ण सृष्टिको वाचक हो ।

**नमःशब्दं वदेत्पूर्वं शिवायेति ततः परम्।**
**मन्त्रः पञ्चाक्षरो ह्येषः सर्वश्रुतिशिरोगतः।।७।।**

**भावार्थ** : पहिले नमः शब्दको उच्चारण गर्नुपर्दछ । त्यस पछाडि शिवाय शब्दको, यो पञ्चाक्षरमन्त्र समस्तवेदहरूको शिरोभाग हो अर्थात् सारतत्त्व हो ।।७।।

**आदितः परिशुद्धत्वान्मलत्रयवियोगतः।**
**शिव इत्युच्यते शम्भुश्चिदानन्दघनः प्रभुः।।८।।**

**भावार्थ** : चिदानन्दघन भगवान् शिव प्रारम्भ देखि नै शुद्ध तथा आणव, मायीय, तथा कार्म नामक तीन मलहरूबाट रहित हुनका कारण शिवशब्दका वाच्य हुनुहुन्छ अर्थात् शिवशब्दले जानिनु हुन्छ ।।८।।

**आस्पदत्वादशेषाणां मङ्गलानां विशेषतः।**
**शिवशब्दाभिधेयो हि देवदेवस्त्रियम्बकः।।९।।**

**भावार्थ** : विशेषरूपले सबै मंगलहरूको निवासस्थान हुनका कारण देवाधिदेव भगवान् ''त्र्यम्बक'' शिव शब्दका वाच्य हुनुहुन्छ ।।९।।

CC-0. Jangamwadi Math Digital Collection.

**शिव इत्यक्षरद्वन्द्वं परब्रह्मप्रकाशकम्।**
**मुख्यवृत्त्या तदन्येषां शब्दानां गुणवृत्तयः।।१०।।**

**भावार्थ** : शिव यो दुई अक्षरहरूको समूह मुख्यवृत्ति अर्थात् अभिधाद्वारा परब्रह्मको प्रकाशक हो । त्यसबाट अतिरिक्त शब्दहरूको उनी लक्षणाद्वारा वाच्य हुन्छन् ॥१०॥

**तस्मान्मुख्यतरं नाम शिव इत्यक्षरद्वयम्।**
**सच्चिदानन्दरूपस्य शम्भोरमिततेजसः।।११।।**

**भावार्थ** : यस कारण शिव यी दुई अक्षर सच्चिदानन्दरूप असीम तेजस्वी शम्भुको मुख्य नाम हो ॥११॥

**एतन्नामावलम्बेन मन्त्रः पञ्चाक्षरः स्मृतः।**
**यस्मादतः सदा जप्यो मोक्षकाङ्क्षिभिरादरात्।।१२।।**

**यथाऽनादिर्महादेवः सिद्धः संसारमोचकः।**
**तथा पञ्चाक्षरो मन्त्रः संसारक्षयकारकः।।१३।।**

**भावार्थ** : यस नामको अवलम्बन गरेको हुनाले उक्त मन्त्रलाई पञ्चाक्षर भनिएको हो । अतः मोक्ष चाहने जनहरूले आदरका साथमा यसको जप गर्नुपर्छ । जस्ता प्रकारले अनादिमहादेव संसारका मोचकका रूपमा सिद्ध अर्थात् प्रसिद्ध हुनुहुन्छ । त्यस्तै प्रकारले यो पञ्चाक्षरमन्त्र पनि संसारलाई नाशगर्ने वाला हो ॥१२-१३॥

**पञ्चभूतानि सर्वाणि पञ्चतन्मात्रकाणि च।**
**ज्ञानेन्द्रियाणि पञ्चापि पञ्चकर्मेन्द्रियाणि च।।१४।।**

**पञ्चब्रह्माणि पञ्चापि कृत्यानि सह कारणैः।**
**बोध्यानि पञ्चभिर्वर्णैः पञ्चाक्षरमहामनोः।।१५।।**

**भावार्थ** : यस पञ्चाक्षर महामन्त्रबाट पञ्चमहाभूत, पञ्चतन्मात्रा, पञ्चज्ञानेन्द्रिय, पञ्चकर्मेन्द्रिय, पञ्च ब्रह्म (ब्रह्मा, विष्णु, रूद्र, ईश्वर र सदाशिव अथवा सद्योजात, तत्पुरूष, वामदेव, अघोर र ईशान) तथा यी पाँच कारणहरूका साथ पाँच कृत्य



(कार्य) सृष्टि, स्थिति, संहार, निग्रह तथा अनुग्रह यी सबै उत्पन्न भएका हुन् । यो कुरा जान्नु पर्छ ॥१४-१५॥

**पञ्चधा पञ्चधा यानि प्रसिद्धानि विशेषतः।**
**तानि सर्वाणि वस्तूनि पञ्चाक्षरमयानि हि।।१६।।**

**भावार्थ** : विशेषरूपले पाँच-पाँच गरेर जो-जो वस्तुहरू प्रसिद्ध छन्, ती सबै पञ्चाक्षरमय हुन् ॥१६॥

**ओंकारपूर्वो मन्त्रोऽयं पञ्चाक्षरमयः परः।**
**शैवागमेषु वेदेषु षडक्षर इति स्मृतः।।१७।।**

**भावार्थ** : पाँच अक्षरवाला यो उत्कृष्ट मन्त्र पहिले ॐकार जोड्नाले अर्थात् जोडेपछि शैवागम तथा वेदहरूमा षडक्षर (छ अक्षरहरूले) युक्त भएको तथ्य वर्णित छ ॥१७॥

**मन्त्रस्यास्यादिभूतेन प्रणवेन महामनोः।**
**प्रबोध्यते महादेवः केवलश्चित्सुखात्मकः।।१८।।**

**भावार्थ** : यस महामन्त्र तथा यसको न्यास भन्दा पहिले प्रणव (ॐकार) जोड्नाले केवल चिदानन्दमहादेवको प्रबोधन (ज्ञान) हुन्छ ॥१८॥

**प्रणवेनैकवर्णेन परब्रह्म प्रकाश्यते।**
**अद्वितीयं परानन्दं शिवाख्यं निष्प्रपञ्चकम्।।१९।।**

**भावार्थ** : एक वर्ण युक्त प्रणवद्वारा अद्वितीय परानन्दस्वरूप प्रपञ्च रहित शिवनामक परब्रह्म प्रकाशित हुन्छ ॥१९॥

**परमात्ममनुर्ज्ञेयः सोऽहंरूपः सनातनः।**
**जायते हंसयोर्लोपादोमित्येकाक्षरो मनुः।।२०।।**

**भावार्थ** : ''सोऽहं'' लाई सनातन परमात्माको सनातन मन्त्र जान्नु पर्छ । सोऽहं बाट हकार र सकारको लोप गर्नाले ॐ शेष रहन्छ । यो एकाक्षर मन्त्र हो ॥२०॥

CC-0. Jangamwadi Math Digital Collection.

**विशेष :-** सोऽहंमा हकार सूर्य बीज हुनाले वेदक (ज्ञान गराउने वाला) तथा सकार चन्द्रबीज हुनाले वेद्य (जानिने योग्य) हो । सकार र हकार अर्थात् वेद्य र वेदक हटेपछि प्रकाशमात्र अवशिष्ट रहन्छ । यहि ॐ निष्प्रपञ्च ब्रह्मको प्रतीक हो ।

**प्रणवेनैव मन्त्रेण बोध्यते निष्कलः शिवः।**
**पञ्चाक्षरेण मन्त्रेण पञ्चब्रह्मतनुस्तथा।।२१।।**

**निष्कलः संविदाकारः सकलो विश्वमूर्तितः।**
**उभयात्मा शिवो मन्त्रे षडक्षरमये स्थितः।।२२।।**

**भावार्थ** : प्रणव मन्त्र बाट केवल निष्कल शिवको ज्ञान हुन्छ । षडक्षरमन्त्रबाट पञ्चब्रह्मात्मक शरीररूपी शिवको ज्ञान हुन्छ । षडक्षर मन्त्रमा संविदाकार, निष्कल तथा विश्वमूर्ति सकल दुवै प्रकारका शिवरूप स्थित हुन्छन् ॥२१-२२॥

**विशेष :-** प्रणवलाई उपनिषदहरूमा सप्रपञ्च ब्रह्म बताइएको छ । तर ध्यान दिनुपर्ने कुरा यो छ कि, यसको प्रपञ्च सूक्ष्मतम छ । अतः यसलाई निष्कल पनि भन्न सकिन्न । प्रणव बीज स्वरूप हो तथा पञ्चाक्षरी विद्या त्यसबाट उत्पन्न भएको वृक्ष हो ।

**मूलं विद्या शिवः शैवं सूत्रं पञ्चाक्षरस्तथा।**
**एतानि नामधेयानि कीर्तितानि महामनोः।।२३।।**

**भावार्थ** : यस महामन्त्रको मूल, विद्या, शिव, शैवसूत्र तथा पञ्चाक्षर यी पाँच नाम बताइएका छन् ॥२३॥

**पञ्चाक्षरीमिमां विद्यां प्रणवेन षडक्षरीम्।**
**जपेत् समाहितो भूत्वा शिवपूजापरायणः।।२४।।**

**भावार्थ** : शिवपूजामा संलग्न भएका मनुष्यले प्रणव (ॐकार) का साथमा छ अक्षर हुने यस पञ्चाक्षरीविद्याको समाहित चित्त भएर जप गर्नु पर्दछ ॥२४॥

**प्राणायामत्रयं कृत्वा प्राङ्मुखोदङ्मुखोऽपि वा।**
**चिन्तयन् हृदयाम्भोजे देवदेवं त्रियम्बकम्।।२५।।**



**सर्वालङ्कारसंयुक्तं साम्बं चन्द्रार्धशेखरम्।**
**जपेदेतां महाविद्यां शिवरूपामनन्यधीः।।२६।।**

**भावार्थ** : पूर्वाभिमुख अथवा उत्तराभिमुख आसनमा बसेर तीन प्राणायाम गरे पछि साधकले सर्वप्रथम आफ्ना हृदयरूपी कमलमा सर्वालंकारयुक्त पार्वती सहित त्रिनेत्रधारी भगवान् चन्द्रचूडको ध्यान गर्नु, तत् पश्चात् एकाग्रचित्त भएर यस शिवरूपा महाविद्याको जप गर्नु ॥२५-२६॥

**जपस्तु त्रिविधः प्रोक्तो वाचिकोपांशुमानसः।**
**श्रूयते यस्तु पार्श्वस्थैर्यथावर्णसमन्वयम्।।२७।।**
**वाचिकः स तु विज्ञेयः सर्वपापप्रभञ्जनः।**
**ईषत्स्पृष्ट्वाधरपुटं यो मन्दमभिधीयते।।२८।।**
**पार्श्वस्थैरश्रुतः सोऽयमुपांशुः परिकीर्तितः।**
**अस्पृष्ट्वाधरमस्पन्दि जिह्वाग्रं योऽन्तरात्मना।।**
**भाव्यते वर्णरूपेण स मानस इति स्मृतः।।२९।।**

**भावार्थ** : उक्त जप तीन प्रकारको बताइएको छ— वाचिक, उपांशु तथा मानस । जो जप छेउमा रहेका जनहरूद्वारा सुन्न सकिन्छ, त्यस सबैपाप नष्टगर्ने जपलाई वाचिक जप भनिएको छ। दुबै ओठ हल्लाएर छेउमा रहने जनले न सुन्ने गरि जो जप गरिन्छ त्यसलाई उपांशु भनिन्छ । जुन जपमा दुबै ओठको स्पर्श हुँदैन मुखभित्र जिब्रो पनि हल्लिदैन अर्थात् जसका वर्णहरूको भित्रभित्रै भावना गरिन्छ त्यसलाई मानस जप भनिन्छ ॥२७-२९॥

**विशेष**— वस्तुतः यी सबै जपहरू वाचिक नै हुन् । वास्तविक मानस जप मध्यमाराज्यमा प्रवेश नगरिकन संभव हुँदैन ।

**यावन्तः कर्मयज्ञाद्या व्रतदानतपांसि च।**
**सर्वे ते जपयज्ञस्य कलां नार्हन्ति षोडशीम्।।३०।।**

**भावार्थ** : जति पनि कर्मयज्ञ आदि छन्, जति पनि व्रत, दान, तथा तपः रूप छन् ती सबै जपयज्ञका सोह्र कलाको (अर्थात् सोर भागको) एककला पनि हुँदैनन् । अर्थात् जप नै सबैमा श्रेष्ठ हो ॥३०॥

CC-0. Jangamwadi Math Digital Collection.

**माहात्म्यं वाचिकस्यैतज्जपयज्ञस्य कीर्तितम्।**
**तस्माच्छतगुणोपांशुः साहस्रो मानसः स्मृतः।।३१।।**

**भावार्थ** : यो माहात्म्य जपयज्ञको हो । त्यस भन्दा पनि सय गुना बडी उत्कृष्ट उपांशु त्यस भन्दा हजार गुणा उत्कृष्ट मानस जप मानिएको छ ।।३१।।

**वाचिकात् तदुपांशोश्च जपादस्य महामनोः।**
**मानसो हि जपः श्रेष्ठो घोरसंसारनाशकः।।३२।।**

**भावार्थ** : यस महामन्त्रको वाचिक तथा उपांशु भेद भन्दा मानस जप श्रेष्ठ मानिएको छ । त्यो जप भयानकसंसारको नाशगर्नमा समर्थ छ ।।३२।।

**एतेष्वेतेन विधिना यथाभावं यथाक्रमम्।**
**जपेत् पञ्चाक्षरीमेतां विद्यां पाशविमुक्तये।।३३।।**

**भावार्थ** : भवपाश अर्थात् भवबन्धनबाट मुक्तिका लागि उक्त तीनप्रकारका जपहरूमध्ये कुनै पनि जप भक्तिभावनापूर्वक गर्नु पर्छ, अर्थात् पञ्चाक्षरीमन्त्रको अनुसन्धान गर्नु पर्छ ।।३३।।

**अनेन मूलमन्त्रेण शिवलिङ्गं प्रपूजयेत्।**
**नित्यं नियमसम्पन्नः प्रयतात्मा शिवात्मकः।।३४।।**

**भावार्थ** : शिवभक्तले विशुद्धचित्त भएर नियमानुसार यस मूलमन्त्रले शिवलिङ्गको पूजन गर्नु पर्दछ ।।३४।।

**भक्त्या पञ्चाक्षरेणैव यः शिवं सकृदर्चयेत्।**
**सोऽपि गच्छेच्छिवस्थानं मन्त्रस्यास्यैव गौरवात्।।३५।।**

**भावार्थ** : जो जन यस पञ्चाक्षरमन्त्रले भक्तिपूर्वक शिवको एकपटक पूजा गर्दछ, त्यो जन पनि यस मन्त्रका महिमाले शिवस्थानलाई प्राप्त गर्छ ।।३५।।

**अब्भक्षा वायुभक्षाश्च ये चान्ये व्रतकर्शिताः।**
**तेषामेतैर्व्रतैर्नास्ति शिवलोकसमागमः।।३६।।**

**भावार्थ** : जो जन मात्र जल पिएर या वायु सेवन गरेर व्रत गर्दछन्, अथवा अन्य प्रकारको व्रत गर्दछन् तिनलाई शिवलोकको प्राप्ति संभव हुँदैन ।।३६।।



**तस्मात्तपांसि यज्ञाश्च व्रतानि नियमास्तथा।**
**पञ्चाक्षरार्चनस्यैते कोट्यंशेनापि नो समाः।।३७।।**

**भावार्थ** : यसै गरि तपस्या, यज्ञ, नियम, तथा व्रत यी सबै पञ्चाक्षरमन्त्रद्वारा शिवपूजनका फलको करोडौं भागको बराबरी पनि गर्न सकिन्न ।।३७।।

**अशुद्धो वा विशुद्धो वा सकृत् पञ्चाक्षरेण यः।**
**पूजयेत् पतितो वापि मुच्यते नात्र संशयः।।३८।।**

**भावार्थ** : अशुद्ध होस् या विशुद्ध अर्थात् जन्मदेखि नै अशुद्ध होस् अथवा पछि अशुद्ध भएको होस्, अथवा पतित होस् एक पटक भए पनि जसले शिवपञ्चाक्षरी मन्त्रद्वारा शिवको अर्चना गर्दछ, त्यो अवश्य मुक्त हुन्छ, यसमा कुनै संशय छैन ।।३८।।

**सकृदुच्चारमात्रेण पञ्चाक्षरमहामनोः।**
**सर्वेषामपि जन्तूनां सर्वपापक्षयो भवेत्।।३९।।**

**भावार्थ** : पञ्चाक्षरमन्त्रको केवल एक पटक उच्चारण गर्नाले सबै जीवहरूको पाप नाश हुन्छ ।।३९।।

**अन्येऽपि बहवो मन्त्रा विद्यन्ते सकलागमे।**
**भूयो भूयः समभ्यासात् पुरुषार्थप्रदायिनः।।४०।।**

**एष मन्त्रो महाशक्तिरीश्वरप्रतिपादकः।**
**सकृदुच्चारणादेव सर्वसिद्धिप्रदायकः।।४१।।**

**भावार्थ** : समस्त आगमहरूमा अरु पनि धेरै मन्त्र छन्, किन्तु तिनले बार बार अभ्यास गरे मात्र फल दिन्छन् । यो मन्त्र महाशक्ति सम्पन्न तथा ईश्वरको वाचक हो । यसै कारण एक बार उच्चारण गर्नाले नै यसले समस्त सिद्धिहरू प्रदान गर्दछ ।।४०-४१।।

**पञ्चाक्षरीं समुच्चार्य पुष्पं लिङ्गे विनिक्षिपेत्।**
**यस्तस्य वाजपेयानां सहस्रफलमिष्यते।।४२।।**

CC-0. Jangamwadi Math Digital Collection.

**भावार्थ** : जो मनुष्य पञ्चाक्षरी मन्त्रको उच्चारण गर्दै शिवलिङ्गमाथि फूल चढाउँछ उसलाई हजार वाजपेय यज्ञगरेको फल प्राप्त हुन्छ ।।४२।।

**अग्निहोत्रं त्रयो वेदा यज्ञाश्च बहुदक्षिणाः।**
**पञ्चाक्षरजपस्यैते कोट्यंशेनापि नो समाः।।४३।।**

**भावार्थ** : अग्निहोत्र तीनै वेदको स्वाध्याय पर्याप्त दक्षिणा दिइने यज्ञ यी सबै पञ्चाक्षरी जपका करोड भागका बराबर पनि हुँदैनन् ।।४३।।

**पुरा सानन्दयोगीन्द्रः शिवज्ञानपरायणः।**
**पञ्चाक्षरं समुच्चार्य नारकानुदतारयत्।।४४।।**

**भावार्थ** : प्राचीनकालमा शिवज्ञानपरायण सानन्द योगीन्द्रले पञ्चाक्षर मन्त्रको उच्चारण गरेर २८करोड़ नरकवासिहरूको उद्धार गरेको थियो ।।४४।।

**सिद्ध्या पञ्चाक्षरस्यास्य शतानन्दः पुरा मुनिः।**
**नरकं स्वर्गमकरोत् सङ्गिरस्यापि पापिनः।।४५।।**

**भावार्थ** : यसै गरि प्राचीनकालमा शतानन्दनामक मुनिले यस पञ्चाक्षरी मन्त्रको सिद्धिद्वारा संगिर नामक पापीका नरकलाई स्वर्गमा परिणत गरेका थिये ।।४५।।

**उपमन्युः पुरा योगी मन्त्रेणानेन सिद्धिमान्।**
**लब्धवान् परमेशनाच्छैवशास्त्रप्रवक्तृताम्।।४६।।**

**भावार्थ** : यसै गरि प्राचीनकालमा उपमन्यु नामक योगीले यस मन्त्रद्वारा सिद्धि प्राप्त गरेर परमेश्वरबाट शैवशास्त्रको प्रवक्तृता अर्थात् उपदेश गर्ने सामर्थ्य प्राप्त गरेको थियो ।।४६।।

**वसिष्ठवामदेवाद्या मुनयो मुक्तकिल्बिषाः।**
**मन्त्रेणानेन संसिद्धा महातेजस्विनोऽभवन्।।४७।।**

**भावार्थ** : यस मन्त्रद्वारा वशिष्ठ, वामदेव आदि मुनिहरू पाप रहित भएर पूर्ण सिद्ध तथा महातेजस्वी भएका थिये ।।४७।।



**ब्रह्मादीनां च देवानां जगत्सृष्ट्यादिकर्मणि।**
**मन्त्रस्यास्यैव माहात्म्यात् सामर्थ्यमुपजायते।।४८।।**

**भावार्थ** : जगत्को सृष्टि, स्थिति तथा संहार कार्यहरूमा ब्रह्मा, विष्णु तथा रुद्रको सामर्थ्य यसै मन्त्रको महिमाबाट सम्पन्न हुन्छ ।।४८।।

**किमिह बहुभिरुक्तैर्मन्त्रमेवं महात्मा**
**प्रणवसहितमादौ यस्तु पञ्चाक्षराख्यम् ।**
**जपति परमभक्त्या पूजयन् देवदेवं**
**स गतदुरितबन्धो मोक्षलक्ष्मीं प्रयाति ।।४९।।**

**भावार्थ** : यस भन्दा धेरै के फाइदा? जो महात्मा प्रणवयुक्त यस पञ्चाक्षरनामक मन्त्रको भक्तिभावयुक्त भएर भगवान् शंकरको पूजनपूर्वक जप गर्दछ, उसले पापरूपी बन्धनलाई नाश गरेर मोक्षरूपी ऐश्वर्य लाई प्राप्त गर्दछ ।।४९।।

***ॐ तत्सत् इति श्रीशिवगीतेषु सिद्धान्तागमेषु शिवाद्वैतविद्यायां शिवयोगशास्त्रे श्रीरेणुकागस्त्य संवादे वीरशैवधर्मनिर्णये श्रीशिवयोगिशिवाचार्यविरचिते श्रीसिद्धान्तशिखामणौ भक्तस्थले पञ्चाक्षरजपस्थलप्रसङ्गो नाम अष्टमः परिच्छेदः।***

**यस प्रकार श्रीसिद्धान्तशिखामणिको पञ्चाक्षरीजपप्रसङ्ग नामक अष्टमपरिच्छेदको आचार्य हरिप्रसादअधिकारी कृत सुबोधिनी नामक नेपाली व्याख्या पूर्णभयो ।**
**।। अष्टमपरिच्छेद पूर्ण भयो ।।**

ooo

CC-0. Jangamwadi Math Digital Collection.

## नवमः परिच्छेदः

भक्तमार्गक्रियास्थल - (९)

**भूतिरुद्राक्षसंयुक्तो लिङ्गधारी सदाशिवः।**
**पञ्चाक्षरजपोद्योगी शिवभक्त इति स्मृतः।।१।।**

**भावार्थ** : भष्म र रूद्राक्षले युक्त भएका लिङ्गधारी सदा शिवमय पञ्चाक्षर मन्त्रको जपमा सर्वदा संलग्न रहन्छन् । त्यसै कारणले तिनीहरू शिवभक्त कहिन्छन् अथवा जो व्यक्ति सदा सर्वदा शिव पञ्चाक्षर जपको उद्यममा लागिरहन्छ त्यो शिवभक्त हो ॥१॥

**श्रवणं कीर्तनं शम्भोः स्मरणं पादसेवनम्।**
**अर्चनं वन्दनं दास्यं सख्यमात्मनिवेदनम्।।२।।**

**एवं नवविधा भक्तिः प्रोक्ता देवेन शम्भुना।**
**दुर्लभा पापिनां लोके सुलभा पुण्यकर्मणाम्।।३।।**

**भावार्थ** : भगवान् शंकरको कथाको श्रवण उनको स्मरण उनका चरणको पूजन, अर्चना, वन्दना, उनको सेवकको रूपमा आफूलाई सम्झनु, उनलाई आफ्नो मित्र मान्नु तथा आफूलाई पूर्णरूपले उनैमा समर्पित गर्नु। यसरी भगवान् शम्भुले नौ प्रकारका भक्तिको वर्णन गर्नुभएको छ । त्यो भक्ति संसारमा पापीहरूका लागि दुर्लभ तथा पुण्यात्माहरूका लागि अत्यन्त सुलभ हुन्छ ॥२-३॥

**अधमे चोत्तमे वापि यत्र कुत्रचिदूर्जिता।**
**वर्तते शाङ्करी भक्तिः स भक्त इति गीयते।।४।।**

**भावार्थ** : अधम अथवा उत्तम कुनै प्रकारका व्यक्तिमा पनि भगवान् शङ्करका तीव्र भक्ति प्रवाहित छ भने उसलाई भक्त भनिन्छ ॥४॥

**भक्तिः स्थिरीकृता यस्मिन् म्लेच्छे वा द्विजसत्तमे।**
**शम्भोः प्रियः स विप्रश्च न प्रियो भक्तिवर्जितः।।५।।**



**भावार्थ** : जुन म्लेच्छ अथवा उत्तम ब्राह्मणमा भक्ति स्थिर हुन्छ, ती दुबै अर्थात् म्लेच्छ र ब्राह्मण शिवका परमप्रिय हुन्छन् । जो भक्तिले रहित छ त्यो प्रिय हुँदैन ॥५॥

**सा भक्तिर्द्विविधा ज्ञेया बाह्याभ्यन्तरभेदतः।**
**बाह्या स्थूलान्तरा सूक्ष्मा वीरमाहेश्वरादृता।।६।।**

**भावार्थ** : त्यो भक्ति बाह्य र आभ्यन्तर भेदले दुई प्रकारको हुन्छ, स्थूल भक्तिलाई बाह्य भक्ति भनिन्छ तथा सूक्ष्म भक्तिलाई आभ्यन्तर भक्ति भनिन्छ । स्थूलभक्ति भन्दा आभ्यन्तर भक्ति धेरै आदरणीय हुन्छ अथवा वीरमाहेश्वरद्वारा समादृत भक्ति बाह्य र आभ्यन्तर भेदले दुई प्रकारको हुन्छ। बाह्य भक्ति स्थूल र आभ्यन्तर भक्ति सूक्ष्म हुन्छ ॥६॥

**सिंहासने शुद्धदेशे सुरम्ये रत्नचित्रिते।**
**शिवलिङ्गस्य पूजा या सा बाह्या भक्तिरुच्यते।।७।।**

**भावार्थ** : शुद्ध तथा रमणीय स्थानमा रत्नजड़ित सिंहासनमाथि शिवलिङ्गको जो पूजा अर्चना गरिन्छ, त्यसलाई बाह्यभक्ति भनिन्छ ॥७॥

**लिङ्गे प्राणं समाधाय प्राणे लिङ्गं तु शाम्भवम्।**
**स्वस्थं मनस्तथा कृत्वा न किञ्चिच्चिन्तयेद् यदि।।८।।**

**साऽऽभ्यन्तरा भक्तिरिति प्रोच्यते शिवयोगिभिः।**
**सा यस्मिन् वर्तते तस्य जीवनं भ्रष्टबीजवत्।।९।।**

**भावार्थ** : लिङ्गमा प्राणलाई तथा प्राणलाई लिङ्गमा समाहित गरेर मनलाई स्वस्थ गर्दै शिवातिरिक्त कसैको ध्यान न गरि जो साधक ध्यानमग्न हुन्छ, शिवयोगिजनहरू यस भक्तिलाई आभ्यन्तर भक्ति भन्दछन् । जो यस प्रकारको भक्त हुन्छ, उसको जीवन भुटिएको बीज समान हुन्छ अर्थात् जसरी भुटिएका बीजबाट अङ्कुर उत्पत्ति सम्भव हुँदैन त्यस्तै त्यस साधकको पनि पुनर्जन्म हुँदैन ॥८-९॥

**बहुनात्र किमुक्तेन गुह्यात् गुह्यतरा परा।**
**शिवभक्तिर्न सन्देहस्तया युक्तो विमुच्यते।।१०।।**

CC-0. Jangamwadi Math Digital Collection.

**भावार्थ** : यस विषयमा धेरै वर्णन गर्नाले के लाभ? शिवभक्ति गुह्यभन्दा पनि गुह्य हो अर्थात् यस भन्दा श्रेष्ठ तथा गुह्य अरू केहि छैन। अत: यस भक्तिले युक्त मनुष्य निश्चय मुक्त हुन्छ, यसमा कुनै प्रकारको सन्देह छैन ॥१०॥

**प्रसादादेव सा भक्तिः प्रसादो भक्तिसम्भवः।**
**यथैवाङ्कुरतो बीजं बीजतो वा यथाङ्कुरः॥११॥**

**भावार्थ** : यस प्रकारको भक्ति प्रसाद अर्थात् भगवानको कृपाबाट प्राप्त हुन्छ तथा प्रसाद (भगवत् प्रसन्नता) भक्तिबाट उत्पन्न हुन्छ । जस्ता प्रकारले बीजबाट अङ्कुर तथा अङ्कुरबाट बीज उत्पन्न हुन्छ त्यस्तै प्रकारको सम्बन्ध भक्ति र कृपामा छ अर्थात् दुबै बीजाङ्कुरवत् अनादि हुन् ॥११॥

**प्रसादपूर्विका येयं भक्तिर्मुक्तिविधायिनी।**
**नैव सा शक्यते प्राप्तुं नरैरेकेन जन्मना॥१२॥**

**भावार्थ** : जो भक्ति प्रसादबाट उपलब्ध हुन्छ उसले मुक्ति प्रदान गर्दछ, मनुष्यहरूले एक जन्ममा यस प्रकारको भक्ति प्राप्त गर्न सक्दैनन् ॥१२॥

**अनेकजन्मशुद्धानां श्रौतस्मार्तानुवर्तिनाम्।**
**विरक्तानां प्रबुद्धानां प्रसीदति महेश्वरः॥१३॥**

**भावार्थ** : जो मनुष्यहरू अनेक जन्ममा उत्तम कर्म गरेर शुद्ध हुन्छन् वेद, पुराण, स्मृति आदि शास्त्र द्वारा बताइएका मार्गमा चल्छन्, विराग युक्त तथा ज्ञानी हुन्छन्, तिनै माथि परमेश्वरको कृपा हुन्छ ॥१३॥

**प्रसन्ने सति मुक्तोऽभून्मुक्तः शिवसमो भवेत्।**
**अल्पभक्त्यापि यो मर्त्यस्तस्य जन्मत्रयात्परम्॥१४॥**

**भावार्थ** : भगवान्शिव प्रसन्न भएपछि मनुष्य मुक्त हुन्छ अर्थात् शिव समान हुन्छ । जो मनुष्य थोरै भक्तिले पनि युक्त हुन्छ । उसलाई तीन जन्मपछि मुक्ति प्राप्त हुन्छ ॥१४॥

**न योनियन्त्रपीडा वै भवेन्नैवात्र संशयः।**
**साङ्गा न्यूना च या सेवा सा भक्तिरिति कथ्यते॥१५॥**



**भावार्थ** : यस्ता शिवभक्तले गर्भवासको दु:ख सहनु पर्दैन यसमा कुनै सन्देह छैन । पूर्वोक्त नौ प्रकारको अङ्गोपाङ्ग सहित जो न्यून सेवा हो त्यसैलाई अल्प भक्ति पनि भनिन्छ ॥१५॥

**सा पुनर्भिद्यते त्रेधा मनोवाक्कायसाधनैः।**
**शिवरूपादिचिन्ता या सा सेवा मानसी स्मृता॥**
**जपादि वाचिकी सेवा कर्मपूजा च कायिकी॥१६॥**

**भावार्थ** : मन, वाणी र शरीररूपी तीन साधनहरूका आधारमा पुन: त्यो भक्ति मानसिक, वाचिक र दैहिक भेदले तीन प्रकारको हुन्छ । शिवका रूप, रङ्ग, स्थान, आभरण, वाहन, गुण, लीला आदिको चिन्तन, मनन, मानसी सेवा मानिन्छ । जप आदि वाचिकी सेवा तथा कर्मद्वारा पूजन कामिकी भक्ति हो ॥१६॥

**बाह्यमाभ्यन्तरं चैव बाह्याभ्यन्तरमेव च।**
**मनोवाक्कायभेदैश्च त्रिधा तद्भजनं विदुः॥१७॥**

**भावार्थ** : विद्वान्हरूले मन, वाणी र शरीरका भेदले भक्तिको तीन प्रकार भनेका छन् त्यो भक्ति बाह्य, आभ्यन्तर तथा बाह्याभ्यन्तर भेदले तीन प्रकारको मानिएको छ ॥१७॥

**मनो महेशध्यानाढ्यं नान्यध्यानरतं मनः।**
**शिवनामरता वाणी वाङ्मता चैव नेतरा ॥१८॥**

**लिङ्गैः शिवस्य चोद्दिष्टैस्त्रिपुण्ड्रादिभिरङ्कितः।**
**शिवोपचारनिरतः कायः कायो न चेतरः॥१९॥**

**भावार्थ** : मन महेश्वरका ध्यानले पूर्ण रहोस् न कि अन्य कुनै ध्यानले, वाणी शिवकै मात्र नामको जप कीर्तन गरोस् न कि अन्य कुनै नामको, शास्त्रमा वर्णित त्रिपुण्ड्र आदि शिवलिङ्गले युक्त भएर शिवको पूजामा लागेको शरीर होस् न कि अन्य सांसारिक व्यापारमा आसक्त शरीर यस प्रकारले भक्तिको मानसिक, वाचिक र शरीरिक तीन भेद मानिएको छ ॥१८-१९॥

CC-0. Jangamwadi Math Digital Collection.

**अन्यात्मविदितं बाह्यं शम्भोरभ्यर्चनादिकम्।**
**तदेव तु स्वसंवेद्यमाभ्यन्तरमुदाहृतम्।।**
**मनो महेशप्रवणं बाह्याभ्यन्तरमुच्यते।।२०।।**

**भावार्थ** : शिवका जुन अर्चना पूजालाई अरूले पनि देख्न जान्न सक्दछन्। त्यो बाह्य पूजा मानिन्छ। आफ्ना मनमा आफूद्वारा गरिएको पूजा जसलाई पूजकले मात्र जान्दछ, आभ्यन्तर पूजा कहलाउँछ। आफ्नो मनलाई शिव तत्त्वमा पूर्णरूपले आसक्त गर्नु अर्थात् डुबाउनु लाई बाह्याभ्यन्तर पूजा भनिन्छ ॥२०॥

**पञ्चधा कथ्यते सद्भिस्तदेव भजनं पुनः।**
**तपः कर्म जपो ध्यानं ज्ञानं चेत्यनुपूर्वकम्।।२१।।**

**भावार्थ** : सन्तहरूले यस भक्तिलाई पनि पाँच प्रकारले बताएका छन्, ती प्रकार क्रमशः तपस्या, कर्म, जप, ध्यान तथा ज्ञान हुन् ॥२१॥

**शिवार्थे देहसंशोषस्तपः कृच्छ्रादि नो मतम्।**
**शिवार्चा कर्म विज्ञेयं बाह्यं यागादि नोच्यते।।२२।।**

**जपः पञ्चाक्षराभ्यासः प्रणवाभ्यास एव वा।**
**रुद्राध्यायादिकाभ्यासो न वेदाध्ययनादिकम्।।२३।।**

**ध्यानं शिवस्य रूपादिचिन्ता नात्मादिचिन्तनम्।**
**शिवागमार्थविज्ञानं ज्ञानं नान्यार्थवेदनम्।।२४।।**

**इति पञ्चप्रकारोऽयं शिवयज्ञः प्रकीर्तितः।**

**भावार्थ** : शिवका लागि शरीरलाई सुकाउनु तप हो न कि कृच्छ चन्दायण आदि शिवलिङ्गको पूजा नै कर्म हो बाह्य याग आदि कर्म होइनन् पञ्चाक्षर मन्त्र अथवा प्रणवको अभ्यास नै जप हो। अथवा रूद्राष्टाध्यायीको पाठ पनि जप तुल्य हो समस्त वेदको पाठ जप कोटिमा आउँदैन। शिवका रूपादिको चिन्तन नै ध्यान हो न कि आफ्ना आत्मा आदिको ध्यान शैवागमका तात्पर्यलाई जान्नु नै विज्ञान हो न कि सांख्य आदि विषयहरूको ज्ञान यस प्रकारले यो शिव यज्ञ पाँच प्रकारको बताइएको छ ॥२२-२४॥



**अनेन पञ्चयज्ञेन यः पूजयति शङ्करम्।**
**भक्त्या परमया युक्तः स वै भक्त इतीरितः।।२५।।**

**भावार्थ** : यस पञ्चयज्ञका माध्यमले जसले शिवको पूजा अराधना गर्दछ परमभक्ति सम्पन्न त्यहि जन भक्त कहलाउँछ ॥२५॥

**पूजनाच्छिवभक्तस्य पुण्या गतिरवाप्यते।**
**अवमानान्महाघोरो नरको नात्र संशयः।।२६।।**

**भावार्थ** : शिवभक्तको पूजन गर्नाले उत्तम गति प्राप्त हुन्छ तथा शिवभक्तको अपमान गर्नाले महाभयानक नरक प्राप्त हुन्छ। यसमा कुनै संशय छैन ॥२६॥

**शिवभक्तो महातेजाः शिवभक्तिपराङ्मुखान्।**
**न स्पृशेन्नैव वीक्षेत न तैः सह वसेत् क्वचित्।।२७।।**

**भावार्थ** : महातेजस्वी शिवभक्तले शिवभक्तिपराङ्मुख जनहरूको स्पर्श गर्नु हुँदैन साथै त्यस्ता व्यक्तिलाई शिव भक्तले न हेरोस् न त साथमा निवास गरोस् किनकि शिवभक्तिपराङ्मुख व्यक्तिका स्पर्श आदिले शिवभक्तको तेज नष्ट हुन्छ ॥२७॥

**यदा दीक्षाप्रवेशः स्याल्लिङ्गधारणपूर्वकः।**
**तदाप्रभृति भक्तोऽसौ पूजयेत् स्वागमस्थितान्।।२८।।**

**भावार्थ** : व्यक्ति जहिले लिङ्गधारणपूर्वक दीक्षित हुन्छ, तहिले देखि नै त्यो भक्त पूजाको पात्र हुन्छ अर्थात् शैव आगममा श्रद्धा, विश्वास राख्नेहरूको मात्र पूजा सम्मानादि गनुपर्दछ ॥२८॥

**स्वमार्गाचारनिरताः सजातीया द्विजास्तु ये।**
**तेषां गृहेषु भुञ्जीत नेतरेषां कदाचन।।२९।।**

**भावार्थ** : जो ब्राह्मण आफ्नु मार्ग तथा आफ्नु आचरणमा निरत हुनाले सजातीय भएका छन्। भक्तले तिनका घरमा मात्र भोजनादि गर्नु पर्दछ। कहिले पनि शैवेतरका घरमा भोजन गर्नु हुँदैन ॥२९॥

CC-0. Jangamwadi Math Digital Collection.

**स्वमार्गाचारविमुखैर्भविभिः प्राकृतात्मभिः।**
**प्रेषितं सकलं द्रव्यमात्मलीनमपि त्यजेत्।।३०।।**

**भावार्थ** : आफ्नो मार्ग एवं आचारबाट विमुख संसारीजनहरू द्वारा दिएको अन्न आदि आफ्ना अधिकारमा भएपनि त्यसको त्याग गर्नु पर्दछ ॥३०॥

**नार्चयदेन्यदेवांस्तु न स्मरेन्न च कीर्तयेत्।**
**न तन्निवेद्यमश्नीयाच्छिवभक्तो दृढव्रतः।।३१।।**

**भावार्थ** : दृढव्रती शिवभक्तले अन्य देवताहरूको पूजन, स्मरण, कीर्तन गर्नु हुँदैन। अन्य देवताहरूलाई निवेदित (चढाइएको) नैवेद्य पनि खानु हुँदैन॥३१॥

**यद्गृहेष्वन्यदेवोऽस्ति तद्गृहाणि परित्यजेत्।**
**नान्यदेवार्चकान् मर्त्यान् पूजाकाले निरीक्षयेत्।।३२।।**

**भावार्थ** : जुनघरमा अन्य देवताहरूको स्थापना गरिएको छ शिवभक्तले त्यस घरलाई त्याग्नुपर्छ तथा शिवपूजाका समयमा अन्य देवतापूज्ने मनुष्यलाई हेर्नु हुँदैन ॥३२॥

**सदा शिवैकनिष्ठानां वीरशैवाध्ववर्तिनाम्।**
**नहि स्थावरलिङ्गानां निर्माल्याद्युपयुज्यते।।३३।।**

**भावार्थ** : जो सदाशिव प्रति श्रद्धा विश्वास युक्त छन् वीर शैव मार्गमा हिड्दछन् तिनै भक्तहरूलाई मात्र माला आदि पहिराउनु उचित छ। स्थावर लिङ्ग अथवा पत्थर आदि द्वारा निर्मित लिङ्गमा माला आदि चढाउनु उचित हुँदैन ॥३३॥

**यत्र स्थावरलिङ्गानामपायः परिवर्तते।**
**अथवा शिवभक्तानां शिवलाञ्छनधारिणाम्।।३४।।**

**तत्र प्राणान् विहायापि परिहारं समाचरेत्।**
**शिवार्थं मुक्तजीवश्चेच्छिवसायुज्यमाप्नुयात्।।३५।।**

**भावार्थ** : जुन स्थानमा स्थावर लिङ्गहरूको अथवा शिवचिह्न भष्म आदि धारण गर्नेहरूको विनाश भएको देखिन्छ। त्यस अवस्थामा प्राणको चिन्ता नगरी



तिनिहरूको रक्षामा तत्पर हुनुपर्छ। जसले शिवका लागि प्राण त्याग गर्दछ। त्यसले शिवसायुज्य प्राप्त गर्छ ॥३४-३५॥

**शिवनिन्दाकरं दृष्ट्वा घातयेदथवा शपेत्।**
**स्थानं वा तत्परित्यज्य गच्छेद्यद्यक्षमो भवेत्।।३६।।**

**भावार्थ** : शिवको निन्दा गर्ने व्यक्तिलाई देखेर सामर्थ्य भए तत्काल उसलाई मारिदिनु अथवा हप्काउनु यदि यी दुवै कार्य गर्न समर्थ नभए कान बन्द गरेर त्यस स्थानबाट तत्काल प्रस्थान गर्नु ॥३६॥

**यत्र चाचारनिन्दाऽस्ति कदाचित्तत्र न व्रजेत्।**
**यद्गृहे शिवनिन्दाऽस्ति तद्गृहं तु परित्यजेत्।।३७।।**

**भावार्थ** : जहाँ शैवाचारको निन्दा हुन्छ त्यहाँ कहिले पनि न जानु तथा जुन जुन घरमा शिव निन्दा हुन्छ ती घरलाई तत्काल छोडिदिनु ॥३७॥

**यः सर्वभूताधिपतिं विश्वेशानं विनिन्दति।**
**न तस्य निष्कृतिः शक्या कर्तुं वर्षशतैरपि।।३८।।**

**भावार्थ** : जसले समस्त प्राणीहरूका स्वामी विश्वका ईश्वर विश्वेश्वरको निन्दा गर्दछ। त्यसको प्रायश्चित्त सैकड़ों वर्षमा पनि हुन सक्दैन ॥३८॥

**शिवपूजापरो भूत्वा पूर्वकर्म विसर्जयेत्।**
**अथवा पूर्वकर्म स्यात् सा पूजा निष्फला भवेत्।।३९।।**

**भावार्थ** : शिव पूजामा तत्पर भएर अरू पूर्वकर्म अर्थात् अन्य प्रकारका उपासना आदिको त्याग गर्नु पर्छ। यदि शिवपूजाका साथ साथ पहिले गरिने उपासना आदिको पनि अभ्यास गरियो भने त्यो शिवपूजा निष्फल हुन्छ ॥३९॥

**उत्तमां गतिमाश्रित्य नीचां वृत्तिं समाश्रितः।**
**आरूढपतितो ज्ञेयः सर्वकर्मबहिष्कृतः।।४०।।**

**भावार्थ** : शिव पूजारूपी उत्तम गतिलाई प्राप्त गरेर पनि जो व्यक्ति नीचवृत्ति अर्थात् निम्न कोटिको अर्चन पूजनलाई अपनाउँछ त्यसलाई आरूढ

CC-0. Jangamwadi Math Digital Collection.

पतित (माथि चढेर तल खसेको) मानिन्छ । त्यसलाई सर्वकर्मबहिष्कृत मान्नुपर्छ ।।४०।।

**पञ्चाक्षरोपदेशी च नरस्तुतिकरो यदि।**
**सोऽलिङ्गी स दुराचारी कुकविः स तु विश्रुतः।।४१।।**

**भावार्थ** : पञ्चाक्षरको उपदेश प्राप्त गर्ने साधक यदि मनुष्यहरूको स्तुति गर्छ भने त्यो अलिङ्गी, दुराचारी तथा कुकविका रूपमा विख्यात हुन्छ ।।४१।।

**चर्मपात्रे जलं तैलं न ग्राह्यं भक्तितत्परैः।**
**गृह्यते यदि भक्तेन रौरवं नरकं व्रजेत् ।।४२।।**

**भावार्थ** : शिवभक्तिमा लागेका व्यक्तिहरूले छालाका बर्तनमा या थैलामा जल अथवा तेलको ग्रहण स्थापन नगरून् यदि शिवभक्तले यसो गर्छ भने त्यो रौरव नरकमा जान्छ ।।४२।।

**न तस्य सूतकं किञ्चिन्प्राणलिङ्गाङ्गसङ्गिनः।**
**जन्मनोऽत्थं मृतोत्थं च विद्यते परमार्थतः।।४३।।**

**भावार्थ** : जो प्राणलिङ्गधारी छ उसलाई वास्तविक रूपमा जननाशौच अथवा मरणाशौच किञ्चित् मात्र पनि लाग्दैन अर्थात् पुत्रजन्म आदिको सूतक तथा मृत्युबाट हुने जुठो प्राणलिङ्गधारीलाई लाग्दैन ।।४३।।

**लिङ्गार्चनरतायाश्च ऋतौ नार्या न सूतकम्।**
**तथा प्रसूतिकायाश्च सूतकं नैव विद्यते।।४४।।**

**भावार्थ** : सदा लिङ्गार्चन गर्ने स्त्री रजस्वला भएपनि अशुद्ध हुन्न । बच्चा पैदा भएपनि अर्थात् नानी जन्मे पनि उसलाई जननसूतक लाग्दैन ।।४४।।

**गृहे यस्मिन् प्रसूता स्त्री सूतकं नात्र विद्यते।**
**शिवपादाम्बुसंस्पर्शात् सर्वपापं प्रणश्यति।।४५।।**

**भावार्थ** : यस प्रकारकी स्त्रीले जुन घरमा बालक उत्पन्न गर्दछे त्यस घरमा पनि सूतक लाग्दैन शिवपादका जलस्पर्शले समस्त पाप नष्ट हुन्छन् अथवा जुन घरमा शिव भक्ता स्त्री सर्वदा शिवपूजामा संलग्न रहन्छे त्यो घर कुनै पनि प्रसूताका प्रसवले अशुद्ध हुँदैन ।।४५।।



**शिवस्थानानि तीर्थानि विशिष्टानि शिवार्चकः।।४६।।**
**शिवयात्रोत्सवं नित्यं सेवेत परया मुदा।।४६।।**

**भावार्थ** : शिवको पूजा गर्ने भक्तले शिवस्थान युक्त विशिष्ट तीर्थहरूको भ्रमण शिवयात्रा एवं शिवका उत्सवको परमानन्दका साथमा नित्य सेवन गरून् ।।४६।।

**शिवक्षेत्रोत्सवमहायात्रादर्शनकाङ्क्षिणाम्।**
**मार्गेऽन्नपानदानं च कुर्यान्माहेश्वरो जनः।।४७।।**

**भावार्थ** : शिवभक्तहरूले शिव क्षेत्रमा सम्पन्न हुने उत्सव अथवा शिवक्षेत्रमा यात्रा गर्ने भक्तहरूका लागि बाटा-बाटामा अन्न जल आदिको समुचित व्यवस्था गर्नुपर्छ ।।४७।।

**नान्नतोयसमं दानं न चाहिंसापरं तपः।**
**तस्मान्माहेश्वरो नित्यमन्नतोयप्रदो भवेत्।।४८।।**

**भावार्थ** : संसारमा अन्न र जल दानभन्दा ठूलो कुनै दान छैन अहिंसा भन्दा ठूलो कुनै तप छैन, यस कारण शिवभक्तले नित्य अन्नजलको दान गर्नुपर्छ ।।४८।।

**स्वमार्गाचारवर्तिभ्यः स्वजातिभ्यः सदाव्रती।**
**दद्यात्तेभ्यः समादद्यात् कन्यां कुलसमुद्भवाम्।।४९।।**

**भावार्थ** : सदैव शिवको व्रतगर्ने आफ्नो जाति तथा सम्प्रदायको आचरण पालन गर्ने हरूलाई आफ्नी कन्याको दान गर्नुपर्छ तथा त्यस्तै व्यक्तिहरूका कुलमा उत्पन्न भएकी कन्यासँग विवाह गर्नुपर्छ ।।४९।।

**एवमाचारसंयुक्तो वीरशैवो महाव्रती।**
**पूजयेत्परया भक्त्या गुरुं लिङ्गं च सन्ततम्।।५०।।**

CC-0. Jangamwadi Math Digital Collection.

**भावार्थ** : यस प्रकारका आचारले युक्त महाव्रती वीर शैवले अत्यन्त भक्तिका साथ गुरु तथा शिवलिङ्गको पूजा गरोस् ॥५०॥

**उभयस्थलम् - (१०)**

**गुरोरभ्यर्चनेनापि साक्षादभ्यर्चितः शिवः।**
**तयोर्नास्ति भिदा किञ्चिदेकत्वात्तत्त्वरूपतः॥५१॥**

**भावार्थ** : गुरुको पूर्जा गर्नाले पनि भगवान् शिव साक्षात् पूजित हुनुहुन्छ। किनकि गुरु र शिवमा किञ्चित् मात्र पनि फरक छैन। तात्त्विकरूपले ती दुवै एक हुन् ॥५१॥

**यथा देवे जगन्नाथे सर्वानुग्रहकारके।**
**तथा गुरुवरे कुर्यादुपचारान् दिने दिने॥५२॥**

**भावार्थ** : भक्तले जस्ता प्रकारले सबै माथि कृपा गर्ने विश्वका स्वामी शिवको पूजा गर्दछ। त्यस्तै प्रकारले उसले प्रतिदिन श्रेष्ठ गुरुको पनि पूजा गर्नुपर्दछ ॥५२॥

**अप्रत्यक्षो महादेवः सर्वेषामात्ममायया।**
**प्रत्यक्षो गुरुरूपेण वर्तते भक्तिसिद्धये॥५३॥**

**भावार्थ** : जो महादेव आफ्नो मायाले सबैका लागि अप्रत्यक्ष हुनुहुन्छ। उनै भक्तिसिद्धिका लागि गुरुरूपमा प्रत्यक्ष हुनुहुन्छ ॥५३॥

**शिवज्ञानं महाघोरसंसारार्णवतारकम्।**
**दीयते येन स गुरुः कस्य वन्द्यो न जायते॥५४॥**

**भावार्थ** : जसद्वारा महाभयङ्कर संसाररूपी समुद्रबाट पार गराउने शिव ज्ञान दिइन्छ। त्यस्ता गुरु कसका लागि वन्दनीय हुँदैनन्? अर्थात् सबैका लागि पूज्य हुन्छन् ॥५४॥

**यत्कटाक्षकलामात्रात् परमानन्दलक्षणम्।**
**लभ्यते शिवरूपत्वं स गुरुः केन नार्चितः॥५५॥**



**भावार्थ** : जसका कृपा कटाक्षको एक कलाले परम आनन्द स्वरूप शिव भावको प्राप्ति हुन्छ त्यस्ता गुरूको कसले पूजा नगर्ला? अर्थात् सबैले पूजा गर्नेछन् ॥५५॥

**हितमेव चरेन्नित्यं शरीरेण धनेन च।**
**आचार्यस्योपशान्तस्य शिवज्ञानमहानिधेः॥५६॥**

**भावार्थ** : भक्तले शरीरद्वारा तथा धन द्वारा उपशान्त अर्थात् रागद्वेष आदि बाट रहित शिवज्ञानका महानिधि स्वरूप गुरूको नित्य सेवा गरोस् ॥५६॥

**गुरोराज्ञां न लङ्घेत सिद्धिकामी महामतिः।**
**तदाज्ञालङ्घनेनापि शिवाज्ञाच्छेदको भवेत्॥५७॥**

**भावार्थ** : सिद्धि चाहने महामतिमान् शिष्यले कदापि गुरू आज्ञाको उल्लङ्घन गर्नु हुँदैन। गुरूको आज्ञाको उल्लङ्घन शिवकै आज्ञाको उल्लङ्घन मानिन्छ ॥५७॥

**त्रिविधसम्पत्तिस्थल - (११)**

**यथा गुरौ यथा लिङ्गे भक्तिमान् परिवर्तते।**
**जङ्गमे च तथा नित्यं भक्तिं कुर्याद्विचक्षणः॥५८॥**

**भावार्थ** : **त्रिविध सम्पत्तिस्थल वर्णन**— भक्तिमान् एवं बुद्धिमान् साधकले जस्ता प्रकारले गुरू र लिङ्गप्रति भक्तिपूर्ण आचरण गर्छ। यस्तै आचरण जङ्गम शिवयोगी प्रति पनि गर्नुपर्छ ॥५८॥

**एक एव शिवः साक्षात् सर्वानुग्रहकारकः।**
**गुरुजङ्गमलिङ्गात्मा वर्तते भुक्तिमुक्तिदः॥५९॥**

**भावार्थ** : सबै प्रति अनुग्रह गर्ने, तथा भोग र मोक्ष प्रदान गर्ने, एउटै शिवगुरू जङ्गम र लिङ्गका रूपमा व्यवहार गर्दै हुनुहुन्छ। यस्तो भावना गर्नुपर्दछ ॥५९॥

**लिङ्गं च द्विविधं प्रोक्तं जङ्गमाजङ्गमात्मना।**
**अजङ्गमे यथा भक्तिर्जङ्गमे च तथा स्मृता॥६०॥**

CC-0. Jangamwadi Math Digital Collection.

**भावार्थ** : जङ्गम र अजङ्गम (चल र स्थिर) का रूपमा लिङ्गको दुई भेद बताइएको छ । अजङ्गम प्रति जस्तो भक्ति हुन्छ । जङ्गम प्रति पनि त्यस्तै भक्ति हुनुपर्दछ ।।६०।।

**अजङ्गमं तु यल्लिङ्गं मृच्छिलादिविनिर्मितम्।**
**तद्वरं जङ्गमं लिङ्गं शिवयोगीति विश्रुतम्।।६१।।**

**भावार्थ** : जो अजङ्गम अर्थात् स्थावर लिङ्ग हो त्यो माटो तथा ढुङ्गा आदिबाट बनेको हुन्छ । जङ्गम लिङ्ग त्यस भन्दा श्रेष्ठ मानिन्छ । त्यो शिवयोगीका नामले प्रसिद्ध छ ।।६१।।

**अचरे मन्त्रसंस्काराल्लिङ्गे वसति शङ्करः।**
**सदाकालं वसत्येव चरलिङ्गे महेश्वरः।।६२।।**

**भावार्थ** : त्यस्काश्रेष्ठताको कारण बताइन्छ— स्थावर लिङ्गमा शिवको निवास मन्त्रद्वारा त्यस्को संस्कार गर्नाले हुन्छ तर चरलिङ्ग (शिवयोगी) मा महेश्वर मन्त्र संस्कार बिना नै सर्वदा निवास गर्नुहुन्छ ।।६२।।

**शिवयोगिनि यद्दत्तं तदक्षयफलं भवेत्।**
**तस्मात् सर्वप्रयत्नेन तस्मै देयं महात्मने।।६३।।**

**यत्फलं लभते जन्तुः पूजया शिवयोगिनः।**
**तदक्षयमिति प्रोक्तं सकलागमपारगैः।।६४।।**

**भावार्थ** : शिवयोगीलाई जे जति पनि दिइन्छ । त्यो अक्षय फल दिने वाला हुन्छ । त्यस कारण प्रयत्नपूर्वक शिवयोगीलाई धेरै भन्दा धेरै दानादि दिनुपर्छ । किनकि आगमशास्त्रका विद्वानहरूले जीवद्वारा शिवयोगीको पूजा गरिएको फल अक्षय (कहिले पनि नाश नहुने) बताइएको छ ।।६३-६४।।

**नावमन्येत कुत्रापि शिवयोगिनमागतम्।**
**अवमानाद्भवेत्तस्य दुर्गतिश्च न संशयः।।६५।।**



**भावार्थ** : अगाडी आँउदै गरेका शिवयोगीको कुनै अवस्थामा पनि अपमान गर्नु हुँदैन । किनकि शिवयोगीको अपमान गर्नेको निश्चितरूपमा दुर्गति हुने कुरा शास्त्रले बताएको छ ।।६५।।

**शिवयोगी शिवः साक्षादिति कैङ्कर्यभक्तितः।**
**पूजयेदादरेणैव यथा लिङ्गं यथा गुरुः।।६६।।**

**भावार्थ** : शिवयोगी साक्षात् शिव हुन्— यस्तो मानेर सेवक भावले लिङ्ग र गुरूका समान आदरपूर्वक शिवयोगीको पूजन गर्नुपर्छ ।।६६।।

चतुर्विधसारायस्थल (प्रसादस्वीकारस्थल) - (१२)

**पादोदकं यथा भक्त्या स्वीकरोति महेशितुः।**
**तथा शिवात्मनोर्नित्यं गुरुजङ्गमयोरपि।।६७।।**

**भावार्थ** : **चतुर्विधसारायस्थल वर्णन**— साधकले जसरी भगवान् शङ्करको चरणोदक भक्तिकासाथ ग्रहण गर्दछ । त्यसरी नै नित्य गुरु र जङ्गम अर्थात् शिवयोगीको पनि चरणोदक लिनुपर्दछ ।।६७।।

**सर्वमङ्गलमाङ्गल्यं सर्वपावनपावनम्।**
**सर्वसिद्धिकरं पुंसां शम्भोः पादाम्बुधारणम्।।६८।।**

**भावार्थ** : किनकि शङ्करको चरणोदक समस्त मङ्गलहरूको पनि मङ्गल, सबै पवित्रवस्तुहरू भन्दा पनि पवित्र तथा समस्त सिद्धि दिने हुन्छ । यसै कारण प्रतिदिन चरणोदक लिनुपर्दछ ।।६८।।

**शिरसा धारयेद्यस्तु पत्रं पुष्पं शिवार्पितम्।**
**प्रतिक्षणं भवेत्तस्य पौण्डरीकक्रियाफलम्।।६९।।**

**भावार्थ** : जो भक्त शिवमा चढाइएको पत्र, पुष्प, शिरमा धारण गर्दछ। उसलाई प्रतिक्षण पौण्डरीक क्रिया अर्थात् पौण्डरीकभागको फल प्राप्त हुन्छ ।।६९।।

**भुञ्जीयाद् रुद्रभुक्तान्नं रुद्रपीतं जलं पिबेत्।**
**रुद्राघ्रातं सदा जिघ्रेदिति जाबालिकी श्रुतिः।।७०।।**

CC-0. Jangamwadi Math Digital Collection.

**भावार्थ** : रूद्रलाई समर्पित अन्नको भोजन गर्नुपर्छ, रूद्रलाई समर्पित जलको पान गर्नुपर्छ, रूद्रद्वारा सुँघिएको अर्थात् रूद्रलाई चढाइएका पुष्पलाई सुघ्नु पर्छ । यस्तो कथन जाबालोपनिषद्मा वर्णित छ ॥७०॥

**अर्पयित्वा निजे लिङ्गे पत्रं पुष्पं फलं जलम्।**
**अन्नाद्यं सर्वभोज्यं च स्वीकुर्याद् भक्तिमान्नरः।।७१।।**

**भावार्थ** : भक्तिमान् मनुष्यले पत्र, पुष्प, फल, जल, अन्नादि सम्पूर्ण भोज्य पदार्थ आफ्ना इष्टलिङ्गलाई अर्पित गरेर ग्रहण गर्नुपर्छ ॥७१॥

**गुरुत्वात् सर्वभूतानां शम्भोरमिततेजसः।**
**तस्मै निवेदितं सर्वं स्वीकार्यं तत्परायणैः।।७२।।**

**भावार्थ** : समस्त प्राणीहरूभन्दा अमित तेजस्वी शिव श्रेष्ठ हुनाले उनलाई निवेदित गरिएको अर्थात् चढाइएको सबै कुरा भक्तहरूले स्वीकार गर्नु पर्छ ॥७२॥

**ये लिङ्गधारिणो लोके ये शिवैकपरायणाः।**
**तेषां तु शिवनिर्माल्यमुचितं नान्यजन्तुषु।।७३।।**

**भावार्थ** : यस संसारमा जो जो शिवलिङ्ग धारणगर्नेहरू छन् । तथा जो एकमात्र शिवका भक्त छन् उनका लागि शिवको प्रसाद ग्रहण गर्नु उचित छ अन्य जीवहरूका लागि उचित छैन ॥७३॥

**अन्नजाते तु भक्तेन भुज्यमाने शिवार्पिते।**
**सिक्थे सिक्थेऽश्वमेधस्य यत्फलं तदवाप्यते।।७४।।**

**भावार्थ** : भक्तद्वारा शिवलाई समर्पित गरिएका अन्नका एक एक दानामा अश्वमेघ यज्ञद्वारा प्राप्तहुने फल अथवा पुण्य रहेको हुन्छ ॥७४॥

**निर्माल्यं निर्मलं शुद्धं शिवेन स्वीकृतं यतः।**
**निर्मलैस्तत्परैर्धार्यं नान्यैः प्राकृतजन्तुभिः।।७५।।**



**भावार्थ** : शिवद्वारा स्वीकृत हुनाका कारणले वहाँलाई चढाइएको नैवेद्य प्रसाद निर्माल्य अर्थात् अत्यन्त निर्मल (शुद्ध) हुन्छ । त्यो शुद्धप्रसाद अत्यन्त शुद्ध जनहरूबाट मात्र लिन योग्य छ, सामान्य अशुद्धजनहरूद्वारा लिन योग्य छैन ॥७५॥

**शिवभक्तिविहीनानां जन्तूनां पापकर्मणाम्।**
**विशुद्धे शिवनिर्माल्ये नाऽधिकारोऽस्ति कुत्रचित्।।७६।।**

**भावार्थ** : शिवभक्तिले रहित पापकर्म गर्ने जीवहरूको शिव नैवेद्यमा कुनै अधिकार छैन ॥७६॥

**शिवलिङ्गप्रसादस्य स्वीकाराद् यत्फलं भवेत्।**
**तथा प्रसादस्वीकाराद् गुरुजङ्गमयोरपि।।७७।।**

**तस्माद् गुरुं महादेवं शिवयोगिनमेव च।**
**पूजयेत् प्रसादान्नं भुञ्जीयात् प्रतिवासरम्।।७८।।**

**भावार्थ** : शिवलिङ्गको प्रसाद ग्रहण गर्नाले जो फल मिल्छ त्यही फल गुरुप्रसाद तथा जङ्गम अर्थात् शिवयोगीको प्रसादबाट पनि प्राप्त हुन्छ । यस कारण गुरु लिङ्ग तथा शिवयोगीको प्रतिदिन पूजा गर्नु पर्छ, तथा उनको प्रसाद स्वरूप अन्न प्रतिदिन ग्रहण गर्नु पर्छ ॥७७-७८॥

### सोपाधिदानस्थल - (१३)

**शिवलिङ्गे शिवाचार्ये शिवयोगिनि भक्तिमान्।**
**दानं कुर्याद्यथाशक्ति तत्प्रसादयुतः सदा।।७९।।**

**भावार्थ** : **सोपाधि निरुपाधि सहज दान स्थल वर्णन**— भक्तिमान् साधकले शिवलिङ्ग शिवाचार्य तथा शिवयोगीलाई उनका कृपाले युक्त हुँदै अर्थात् उनको कृपा प्राप्तगर्दै आफ्ना शक्ति अनुसार दानदिनु पर्छ ॥७९॥

**दानं च त्रिविधं प्रोक्तं सोपाधिनिरुपाधिकम्।**
**सहजं चेति सर्वेषां सर्वतन्त्रविशारदैः।।८०।।**

CC-0. Jangamwadi Math Digital Collection.

**भावार्थ** : शास्त्रमा निष्णात/पारंगत विद्वान्हरूले सबैका लागि सोपाधि निरुपाधि तथा सहज भेदले तीन प्रकारको दान बताएका छन् ॥८०॥

**फलाभिसन्धिसंयुक्तं दानं यद्विहितं भवेत्।**
**तत् सोपाधिकमाख्यातं मुमुक्षुभिरनादृतम्।।८१।।**

**भावार्थ** : जो दान फलको आशाले युक्त भएर गरिन्छ त्यो सोपाधिक दान कहलाउँछ । मोक्षार्थी जनहरूले त्यसप्रकारका दानको समादर गर्दैनन् ॥८१॥

निरुपाधिदानस्थल - (१४)

**फलाभिसन्धिनिर्मुक्तमीश्वरार्पितकाङ्क्षितम्।**
**निरुपाधिकमाख्यातं दानं दानविशारदैः।।८२।।**

**भावार्थ** : **निरुपाधिदानस्थल**— दानमा विशारद अर्थात् पारङ्गत भएका जनहरूद्वारा फलको इच्छाले रहित भएर ईश्वरार्पणबुद्धि युक्त भएर गरिने दानलाई निरुपाधिक दान भन्दछन् ॥८२॥

सहजदानस्थल - (१५)

**आदातृदातृदेयानां शिवभावं विचिन्तयन्।**
**आत्मनोऽकर्तृभावं च यद्दत्तं सहजं भवेत्।।८३।।**

**भावार्थ** : **सहजदानस्थल**— परिगृहीत दाता एवं देयलाई शिवरूपमा शोच्ने/विचारगर्ने अर्थात् दानका विषयमा आफुलाई कर्ता न मानी दिइने दान सहजदान मानिन्छ ॥८३॥

**सहजं दानमुत्कृष्टं सर्वदानोत्तमोत्तमम्।**
**शिवज्ञानप्रदं पुंसां जन्मरोगनिवर्तकम्।।८४।।**

**भावार्थ** : तीनै प्रकारका दानहरूमा सहजदान उत्कृष्ट र सबै प्रकारका दानहरूमा उत्तमदान हुन्छ । त्यसप्रकारको दान मनुष्यलाई शिवज्ञानप्रदान गर्ने तथा जन्मरूपी रोगलाई मिटाउने वाला हुन्छ ॥८४॥

**शिवाय शिवभक्ताय दीयते यदि किञ्चन।**
**भक्त्या तदपि विख्यातं सहजं दानमुत्तमम्।।८५।।**



**भावार्थ** : शिवलाई अथवा शिवभक्तलाई जो कुछ अर्थात् जे पनि जति पनि दान दिइन्छ त्यसलाई पनि उत्तम अर्थात् सहजदान कहिएको छ ॥८५॥

**दानात् स्वर्णसहस्रस्य सत्पात्रे यत्फलं भवेत्।**
**एकपुष्पप्रदानेन शिवे तत्फलमिष्यते।।८६।।**

**भावार्थ** : उत्तम एवं योग्य व्यक्तिलाई एक सहस्र स्वर्णमुद्रा (एक हजार सुनका गिन्नी को दान) गर्नाले जो फल प्राप्त हुन्छ, त्यही फल श्रद्धाभक्ति युक्त भएर शिवलाई एक पुष्प (फूल) अर्पित गर्नाले प्राप्त हुन्छ ॥८६॥

**शिव एव परं पात्रं सर्वविद्यानिधिर्गुरुः।**
**तस्मै दत्तं तु यत्किञ्चित्तदनन्तफलं भवेत्।।८७।।**

**भावार्थ** : समस्त विद्याहरूका आकर (खजाना/खानी) गुरुरूप शिव नै दानका सर्वोत्कृष्ट पात्र हुनुहुन्छ, अथवा शिव एवं सर्वविद्यानिधि गुरु यी दुवै दानका उत्तमोत्तम पात्र हुन् । यिनलाई जे पनि दिइन्छ त्यसले अनन्त फल प्रदान गर्दछ ॥८७॥

**शिवयोगी शिवः साक्षाच्छिवज्ञानमहोदधिः।**
**यत्किञ्चिद्दीयते तस्मै तद्दानं पारमार्थिकम्।।८८।।**

**भावार्थ** : शिवज्ञानका समुद्रस्वरूप शिवयोगी साक्षात् शिवस्वरूप हुन्छन् उनलाई जे जति दान दिइन्छ त्यो दान परमदान अर्थात् शिवसायुज्य प्रदान गर्ने वाला हुन्छ ॥८८॥

**शिवयोगी महत्पात्रं सर्वेषां दानकर्मणि।**
**तस्मान्नास्ति परं किञ्चित्पात्रं शास्त्रविचारतः।।८९।।**

**भावार्थ** :सबै दानकर्महरूमा सबैका लागि शिवयोगी उत्तम पात्र हुन् । शास्त्रका दृष्टिले तिनीभन्दा श्रेष्ठ या उत्तम कुनै सत्पात्र हुँदैनन् ॥८९॥

**भिक्षामात्रप्रदानेन शान्ताय शिवयोगिने।**
**यत्फलं लभ्यते नैतद् यज्ञकोटिशतैरपि।।९०।।**

CC-0. Jangamwadi Math Digital Collection.

**भावार्थ** : शान्तशिवयोगीलाई मात्र भिक्षा अर्थात् एक गाँस दान गर्नाले जो फल प्राप्त हुन्छ त्यो फल करोडौं यज्ञ गर्नाले पनि मिल्न सक्दैन ॥९०॥

**शिवयोगिनि संतृप्ते तृप्तो भवति शङ्करः।**
**तत्तृप्त्या तन्मयं विश्वं तृप्तिमेति चराचरम्।।९१।।**

**भावार्थ** : किनकि शिवयोगी तृप्त हुनाले स्वयं शिव तृप्त हुनुहुन्छ। शिवका तृप्तिले उनीद्वारा व्याप्त चराचर समस्त विश्व तृप्त हुन्छ ॥९१॥

**तस्मात् सर्वप्रयत्नेन येन केनापि कर्मणा।**
**तृप्तिं कुर्यात् सदाकालमन्नाद्यैः शिवयोगिनः।।९२।।**

**भावार्थ** : यस कारण सबै प्रयत्न गरेर जुन सुकै कर्मद्वारा सधैं अन्नादिद्वारा शिवयोगीलाई तृप्त गर्नु पर्दछ ॥९२॥

**निरुपाधिकचिद्रूपपरानन्दात्मवस्तुनि ।**
**समाप्तं सकलं यस्य स दानी शङ्करः स्वयम्।।९३।।**

**भावार्थ** : निष्कामभावले चिद्रूप परानन्द तत्त्वका विषयमा अर्थात् उनका नाममा जसले आफुलाई पूर्णरूपले समर्पित गर्दछ त्यो दानी स्वयं शङ्करस्वरूप हुन जान्छ ॥९३॥

**उक्ताखिलाचारपरायणोऽसौ**
**सदा वितन्वन् सहजं तु दानम्।**
**ब्रह्मादिसम्पत्सु विरक्तचित्तो**
**भक्तो हि माहेश्वरतामुपैति।।९४।।**

**भावार्थ** : पूर्वोक्त सबै आचरणहरूको पालन गर्ने, सदा सहजदान दिदै ब्रह्मा आदिका सम्पत्ति (समृद्धि) प्रति पनि राग न राख्ने भक्त स्वयं माहेश्वर हुन जान्छ ॥९४॥

***ॐ तत्सत् इति श्रीशिवगीतेषु सिद्धान्तागमेषु शिवाद्वैतविद्यायां शिवयोगशास्त्रे श्रीरेणुकागस्त्यसंवादे वीरशैवधर्मनिर्णये***



***श्रीशिवयोगिशिवाचार्यविरचिते श्रीसिद्धान्तशिखामणौ भक्तस्थले भक्तमार्गक्रियास्थलादिसप्तविध-स्थलप्रसङ्गो नाम नवमः परिच्छेदः।***

**यस प्रकार श्रीसिद्धान्तशिखामणिको भक्तिमार्ग क्रिया स्थलवर्णन नामक नवमपरिच्छेदको आचार्य हरिप्रसादअधिकारी कृत सुबोधिनी नामक नेपाली व्याख्या पूर्णभयो।**

**।। नवमपरिच्छेद पूर्ण भयो ।।**

❍❍❍

CC-0. Jangamwadi Math Digital Collection.

# दशमः परिच्छेदः

## अंगस्थलान्तर्गत
## माहेश्वरस्थल

**अगस्त्य उवाच-**

**भक्तस्थलं समाख्यातं भवता गणनायक।**
**केन वा धर्मभेदेन भक्तो माहेश्वरो भवेत्।।१।।**

**भावार्थ** : **(माहेश्वरस्थल वर्णन)**— अगस्त्यले भन्नु भयो— हे गणनायक! तपाँईले भक्तस्थलको वर्णन गर्नु भयो । अब यो कुरा बताउने होस् कि कुन धर्मभेदले भक्त माहेश्वर बन्द छ ॥१॥

**रेणुक उवाच-**

**केवले सहजे दाने निष्णातः शिवतत्परः।**
**ब्रह्मादिस्थानाविमुखो भक्तो माहेश्वरः स्मृतः।।२।।**

**भावार्थ** : रेणुकाचार्यले भन्नु भयो— जो व्यक्ति केवल सहजदानमा निष्णात अर्थात् पारंगत एवं शिवभक्तिमा निरत हुन्छ तथा ब्रह्मा आदि देव पदको पनि अभिलाषी (इच्छुक) हुँदैन यस्ता भक्तलाई माहेश्वर भनिन्छ ॥२॥

**भक्तेर्यदा समुत्कर्षो भवेद्वैराग्यगौरवात्।**
**तदा माहेश्वरः प्रोक्तो भक्तः स्थिरविवेकवान्।।३।।**

**भावार्थ** : जब वैराग्यको आधिक्यले मनुष्य भित्र भक्तिको उत्कर्ष हुन्छ अर्थात् भक्ति पराकाष्ठामा पुग्छ तब त्यो स्थिरविवेकयुक्तभक्त माहेश्वर कहलाउँछ ॥३॥

**माहेश्वरस्थलं वक्ष्ये यथोक्तं शम्भुना पुरा।**
**माहेश्वरप्रशंसादौ लिङ्गनिष्ठा ततः परम्।।४।।**



**पूर्वाश्रयनिरासश्च तथाद्वैतनिराकृतिः।**
**आह्वानवर्जनं पश्चादष्टमूर्तिनिराकृतिः।।५।।**

**सर्वगत्वनिरासश्च शिवत्वं शिवभक्तयोः।**
**एवं नवविधं प्रोक्तं माहेश्वरमहास्थलम्।।६।।**

**भावार्थ** : अब म माहेश्वर स्थलका विषयमा बताउँने छु - जस्तो भगवान् शिवले पहिले बताउनु भएको थियो । पहिले माहेश्वरको प्रशंसा त्यस पछि, लिङ्गार्चनमा निष्ठा तथा पूर्व आश्रयको त्याग, त्यस्तै प्रकारले अद्वैतको निराकरण, आह्वानवर्जन, अष्टमूर्तिको निराकरण तथा सर्वगत्वको निरास, शिवजगन्मयस्थल तथा अन्त्यमा भक्तदेहिक लिङ्गस्थल, यस प्रकारले माहेश्वर महास्थल नौ प्रकारको बताइएको छ ॥४-६॥

**आदितः क्रमशो वक्ष्ये स्थलभेदस्य लक्षणम्।**
**समाहितेन मनसा श्रूयतां भवता मुने।।७।।**

**भावार्थ** : हे मुने! म स्थलभेदको लक्षण प्रारंभ देखि नै बताउने छु । तपाँई समाहितचित्त भएर सुन्नुहोस् ॥७॥

**माहेश्वरप्रशंसास्थल - (१६)**

**विश्वस्मादधिको रुद्रो विश्वानुग्रहकारकः।**
**इति यस्य स्थिरा बुद्धिः स वै माहेश्वरः स्मृतः।।८।।**

**भावार्थ** : माहेश्वरप्रशंसास्थल— भगवान् शिव विश्वभन्दा माथि हुनुहुन्छ। वहाँ नै विश्वलाई अनुग्रह गर्नेवाला हुनुहुन्छ। यस प्रकारको धारणा (विचार) जसको दृढ हुन्छ, त्यसलाई माहेश्वर मानिएको छ ॥८॥

**ब्रह्माद्यैर्मलिनप्रायैर्निर्मले परमेश्वरे।**
**साम्योक्तिं यो न सहते स वै माहेश्वराभिधः।।९।।**

**भावार्थ** : जो भक्त मलिनप्राय ब्रह्मादि देवताहरू सँग परमेश्वरको तुलना गर्दैन उसको नाम माहेश्वर हो ॥९॥

CC-0. Jangamwadi Math Digital Collection.

**ईश्वरः सर्वभूतानां ब्रह्मादीनां महानिति।**
**बुद्धियोगात्तदासक्तो भक्तो माहेश्वरः स्मृतः।।१०।।**

**भावार्थ** : ब्रह्मा आदि समस्त प्राणिहरूमा अर्थात् सबै भन्दा परमेश्वर महान् हुनुहुन्छ— यस प्रकारले जो भक्त सधैं परमेश्वरमा आसक्त रहन्छ त्यसलाई माहेश्वर भनिएको छ ।।१०।।

**ब्रह्मादिदेवताजालं मोहितं मायया सदा।**
**अशक्तं मुक्तिदाने तु क्षयातिशयसंयुतम्।।११।।**

**अनादिमुक्तो भगवानेक एव महेश्वरः।**
**मुक्तिदश्चेति यो वेद स वै माहेश्वरः स्मृतः।।१२।।**

**भावार्थ** : ब्रह्मा आदि देवताहरूको समूह सर्वदा मायाग्रस्त छ । क्षय (नाश) तथा अतिशय (सानु-ठूलो) आदि दोषले युक्त यो समूह मुक्ति दिलाउनमा असमर्थ छ । मात्र भगवान् शिव अनादि मुक्त हुनुहुन्छ, वहाँ नै मुक्तिप्रदाता हुनुहुन्छ, जो यस्ता विचारले युक्त हुन्छ उसलाई माहेश्वर भनिन्छ ।।११-१२।।

**क्षयातिशयसंयुक्ता ब्रह्मविष्ण्वादिसम्पदः।**
**तृणवन्मन्यते युक्त्या वीरमाहेश्वरः सदा।।१३।।**

**शब्दस्पर्शादिसम्पन्ने सुखलेशे तु नःस्पृहः।**
**शिवानन्दे समुत्कण्ठो वीरमाहेश्वरो भवेत्।।१४।।**

**भावार्थ** : ब्रह्मा विष्णु आदिको ऐश्वर्य क्षयशील तथा अतिशययुक्त छ। वीरमाहेश्वरले त्यसलाई सदा तृणका समान तुच्छ मान्दछ। उसले शब्दस्पर्श आदिले युक्त क्षणिकसुखको इच्छा राख्दैन तथा शिवानन्दको प्राप्तिका लागि उत्कण्ठित रहन्छ यस्तो व्यक्ति वीरमाहेश्वर हुन्छ ।।१३-१४।।

**परस्त्रीसङ्गनिर्मुक्तः परद्रव्यपराङ्मुखः।**
**शिवार्थकार्यसम्पन्नः शिवागमपरायणः।।१५।।**

**शिवस्तुतिरसास्वादमोदमानमनाः शुचिः।**
**शिवोत्कर्षप्रमाणानां सम्पादनसमुद्यतः।।१६।।**



**निर्ममो निरहङ्कारो निरस्तक्लेशपञ्जरः।**
**अस्पृष्टमदसम्बन्धो मात्सर्यावेशवर्जितः।।१७।।**

**निरस्तमदनोन्मेषो निर्धूतक्रोधविप्लवः।**
**सदा सन्तुष्टहृदयः सर्वप्राणिहिते रतः।।१८।।**

**निवारणसमुद्योगी शिवकार्यविरोधिनाम्।**
**सहचारी सदाकालं शिवोत्कर्षाभिधायिभिः।।१९।।**

**शिवापकर्षसम्प्राप्तौ प्राणत्यागेऽप्यशङ्कितः।**
**शिवैकनिष्ठः सर्वात्मा वीरमाहेश्वरो भवेत्।।२०।।**

**भावार्थ** : परस्त्री समागम न गर्ने, अर्काको धन न चाहने, शिवका लागि कार्य गर्ने शैवागमको अध्ययन गर्ने, शिवस्तुतिका रसलाई पान गरि प्रसन्न मन भएको पवित्र, शिव महत्ता सूचक प्रमाणहरूलाई एकत्रित गर्ने, संसार प्रति ममतारहित, अहंकारशून्य, अविद्या अस्मिता आदि क्लेशका जालहरूलाई नाशगर्नमा समर्थ, मदरहित, मात्सर्यका आवेशले रहित, कामभावनाले शून्य, क्रोधका वेगले शून्य, सदा सन्तोष युक्त, सबै प्राणीहरूको हितमा निरत, शिवकार्यका विरोधी हरूलाई नाश गर्न तत्पर, शिवोत्कर्षका प्रचारकहरूको सहचर (साथी) शिवको अपकर्ष (अपमान) भएमा प्राण त्याग्न तत्पर, केवल शिवमा निष्ठा राख्ने सर्वात्मा व्यक्ति वीरमाहेश्वर हुन्छ ।।१५-२०।।

### लिङ्गनिष्ठास्थल (१७)

**अस्य माहेश्वरस्योक्तं लिङ्गनिष्ठामहास्थलम्।**
**प्राणात्ययेऽपि सम्पन्ने यदत्याज्यं विधीयते।।२१।।**

**भावार्थ** : **लिङ्गनिष्ठास्थल वर्णन**— प्राणसङ्कटको स्थितिमा पनि जुन लिङ्गका त्यागको विधान छैन यस स्थितिलाई माहेश्वर लिङ्गनिष्ठस्थल मानिएको छ ।।२१।।

**अपगच्छतु सर्वस्वं शिरश्छेदनमस्तु वा।**
**माहेश्वरो न मुञ्चेत लिङ्गपूजामहाव्रतम् ।।२२।।**

CC-0. Jangamwadi Math Digital Collection.

**भावार्थ** : समस्त धन सम्पत्तिको नाश भए पनि शिर काटिए पनि माहेश्वरले लिङ्गपूजारूपीमहाव्रतको त्याग गर्नु हुँदैन ॥२२॥

**लिङ्गपूजामकृत्वा तु ये न भुञ्जन्ति मानवाः।**
**तेषां महात्मनां हस्ते मोक्षलक्ष्मीरुपस्थिता।।२३।।**

**भावार्थ** : जो मनुष्य लिङ्ग पूजा नगरी भोजन गर्दैनन् त्यस्ता महात्माहरूका हातमा मोक्षरूपी लक्ष्मी सदैव उपस्थित रहन्छिन् ॥२३॥

**किमन्यैर्धर्मकलिलैः कीकषार्थप्रदायिभिः।**
**साक्षान्मोक्षप्रदः शम्भोर्धर्मो लिङ्गार्चनात्मकः।।२४।।**

**भावार्थ** : क्षुद्र तथा घृणास्पद परिणाम दिने अन्य मलिन धर्महरूबाट के लाभ? शम्भुको लिङ्गार्चनात्मक धर्म नै साक्षात् मोक्ष प्रदान गर्ने वाला हुन्छ ॥२४॥

**अर्पितेनान्नपानेन लिङ्गे नियमपूजिते।**
**ये देहवृत्तिं कुर्वन्ति महामाहेश्वरा हि ते।।२५।।**

**भावार्थ** : समर्पित अन्न पानद्वारा जो जन नियमपूर्वक लिङ्गको पूजा अर्चना गर्दछन् तथा त्यसै समर्पित अन्नपानद्वारा शरीरलाई जीवित राख्दछन् ती महामाहेश्वर हुन् ॥२५॥

**चिन्मये शाङ्करे लिङ्गे स्थिरं येषां मनः सदा।**
**विमुक्तेतरसर्वार्थं ते शिवा नात्र संशयः।।२६।।**

**भावार्थ** : जसको मन चिन्मय शाङ्कर लिङ्गमा सदा स्थित रहन्छ तथा मुक्तिलाई छोडेर जसले सबै विषयहरूको त्याग गरेको हुन्छ ती शिव हुन् यसमा कुनै सन्देह छैन ॥२६॥

**लिङ्गे यस्य मनो लीनं लिङ्गस्तुतिपरा च वाक्।**
**लिङ्गार्चनपरौ हस्तौ स रुद्रो नात्र संशयः।।२७।।**



**भावार्थ** : जसको मन लिङ्गमा लीन रहन्छ तथा जसको वाणी लिङ्गको स्तुतिमा लागिरहन्छ तथा जसका दुबै हाथ लिङ्गार्चनमा निरत रहन्छन् त्यो रूद्र हो यसमा कुनै सन्देह छैन ॥२७॥

**लिङ्गनिष्ठस्य किं तस्य कर्मणा स्वर्गहेतुना।**
**नित्यानन्दशिवप्राप्तिर्यस्य शास्त्रेषु निश्चिता।।२८।।**

**भावार्थ** : जुन भक्तलाई शिवानन्दप्राप्ति शास्त्र अनुसार निश्चित छ । लिङ्गार्चनमा लागेका त्यस्ता भक्तलाई स्वर्गहेतुक कर्महरूबाट के लाभ? अथवा के प्रयोजन? ॥२८॥

**लिङ्गनिष्ठापरं शान्तं भूतिरुद्राक्षसंयुतम्।**
**प्रशंसन्ति सदाकालं ब्रह्माद्या देवता मुदा।।२९।।**

**भावार्थ** : ब्रह्मा आदि देवताहरू लिङ्गमा निष्ठा राख्ने शान्त, भस्म तथा रुद्राक्षधारण गर्ने भक्तको आनन्दपूर्वक प्रशंसा गर्दछन् ॥२९॥

पूर्वाश्रयनिरसनस्थल - (१८)

**लिङ्गैकनिष्ठहृदयः सदा माहेश्वरो जनः।**
**पूर्वाश्रयगतान् धर्मांस्त्यजेत्स्वाचाररोधकान्।।३०।।**

**भावार्थ** : **पूर्वाश्रयनिरसन स्थल वर्णन**— एकमात्र लिङ्गार्चनमा निष्ठा राख्ने माहेश्वरले आफ्नो आचार अर्थात् शैवाचारविरोधी पूर्वस्वीकृत् धर्महरूको त्याग गर्नु पर्छ ॥३०॥

**स्वजातिकुलजान् धर्मान् लिङ्गनिष्ठाविरोधिनः।**
**त्यजन् माहेश्वरो ज्ञेयः पूर्वाश्रयनिरासकः।।३१।।**

**भावार्थ** : आफ्ना जाति तथा कुलका धर्म अर्थात् जननाशौच मरणाशौच आदि पनि लिङ्गनिष्ठाका विरोधी छन् भने तिनको त्याग गर्नु पर्छ । इनको त्याग गर्ने पूर्वाश्रय निरासक भक्त माहेश्वर मानिन्छ ॥३१॥

CC-0. Jangamwadi Math Digital Collection.

**शिवसंस्कारयोगेन विशुद्धानां महात्मनाम्।**
**किं पूर्वकालिकैर्धर्मैः प्राकृतानां हि ते मताः।।३२।।**

**भावार्थ** : शिवसंस्कार योगका कारणले शुद्धभएका महात्माहरूका लागि पहिले या वर्तमानमा अनुष्ठित धर्महरूसँग के प्रयोजन? ती धर्महरू प्राकृत अर्थात् साधारण श्रेणीका मनुष्यहरूका लागि बताइएका छन् ।।३२।।

**विशेष**— जसरी सन्यासी सन्यास भन्दा पहिलेका आश्रम धर्महरूलाई छोड्नाले दोषी हुँदैन त्यस्तैं प्रकारले शैव धर्म स्वीकार्ने व्यक्तिले यदि अन्य धर्महरूका त्याग गर्छ, भने त्यो प्रायश्चित्ती हुँदैन यसविषयमा यस ग्रन्थको संस्कृतटीकाकारले नेहाभिक्रमनाशोऽस्ति यस गीताको श्लोकलाई उद्धृत गरी सम्यक् व्याख्या गर्नु भएको छ ।

**शिवसंस्कारयोगेन शिवधर्मानुषङ्गिणाम्।**
**प्राकृतानां न धर्मेषु प्रवृत्तिरुपपद्यते।।३३।।**

**भावार्थ** : शिवसंस्कारका योगले शिवधर्मको पालन गर्ने व्यक्तिहरूको प्राकृतजनका धर्ममा प्रवृत्ति हुँदैन ।।३३।।

**विशुद्धाः प्राकृताश्चेति द्विविधा मानुषा स्मृताः।**
**शिवसंस्कारिणः शुद्धाः प्राकृता इतरे मताः।।३४।।**

**भावार्थ** : मनुष्य दुईप्रकारका बताइएका हुन्छन्— विशुद्ध र प्राकृत । शिवका संस्कारले युक्त मनुष्य शुद्ध हुन्छन् तथा अन्य जनहरू प्राकृत मानिएका छन् ।।३४।।

**वर्णाश्रमधर्माणां व्यवस्था हि द्विधा मता।**
**एका शिवेन निर्दिष्टा ब्रह्मणा कथिताऽपरा।।३५।।**

**भावार्थ** : वर्णाश्रम आदि धर्मको व्यवस्था पनि दुईप्रकारको मानिएको छ- एक शिवद्वारा निर्दिष्ट (बताइएको) अर्को ब्रह्माद्वारा बताइएको ।।३५।।

**शिवोक्तधर्मनिष्ठा तु शिवाश्रमनिषेविणाम्।**
**शिवसंस्कारहीनानां धर्मः पैतामहः स्मृतः।।३६।।**



**भावार्थ** : शैवाश्रममा रहनेहरूको शिवोक्त धर्ममा निष्ठा हुन्छ । जो जनहरू शिवसंस्कारबाट हीन (रहित) छन् तिनका लागि ब्रह्माद्वारा निर्दिष्ट धर्म बताइएको छ ।।३६।।

**शिवसंस्कारयुक्तेषु जातिभेदो न विद्यते।**
**काष्ठेषु वह्निदग्धेषु यथा रूपं न विद्यते।।३७।।**

**तस्मात्सर्वप्रयत्नेन शिवसंस्कारसंयुतः।**
**जातिभेदं न कुर्वीत शिवभक्ते कदाचन।।३८।।**

**भावार्थ** : जस्ता प्रकारले आगामा डडीसकेका काठमा रूप हुँदैन त्यस्तै प्रकारले शिवसंस्कारले युक्त भएका जनहरूमा जातिभेद हुँदैन । त्यसकारण शिवसंस्कार युक्त व्यक्तिले शिवभक्तमा जातिभेद नगर्नु ।।३७-३८।।

### सर्वाद्वैतनिरसनस्थल - (१९)

**पूज्यपूजकयोर्लिङ्गजीवयोर्भेदवर्जने ।**
**पूजाकर्माद्यसम्पत्तेर्लिङ्गनिष्ठाविरोधतः।।३९।।**

**सर्वाद्वैतविचारस्य ज्ञानाभावे व्यवस्थितेः।**
**भवेन्माहेश्वरः कर्मी सर्वाद्वैतनिरासकः।।४०।।**

**भावार्थ** : पूज्य-पूजक अर्थात् लिङ्ग र शिवका भेदलाई हटाउने, पूजा कर्म आदिको अप्राप्ति, लिङ्गनिष्ठाको विरोध, समस्त अद्वैत विचारात्मक ज्ञानको अभाव, यति कुरा भए छँदामा धर्मीजन सर्वाद्वैतनिरासक माहेश्वर हुन्छ ।।३९-४०।।

**प्रेरकं शङ्करं बुद्ध्वा प्रेर्यमात्मानमेव च।**
**भेदात् तं पूजयेन्नित्यं न चाद्वैतपरो भवेत्।।४१।।**

**भावार्थ** : शङ्करलाई प्रेरक र आफुलाई प्रेर्य (प्रेरित गरिने) मानेर भेद ज्ञान पूर्वक उनको नित्य पूजन गर्नु पर्दछ । अद्वैतपरक बन्नु हुँदैन ।।४१।।

**पतिः साक्षान्महादेवः पशुरेष तदाश्रयः।**
**अनयोः स्वामिभृत्यत्वमभेदे कथमिष्यते।।४२।।**

CC-0. Jangamwadi Math Digital Collection.

**भावार्थ** : महादेव साक्षात् पति हुनुहुन्छ । उनका अधीनमा रहने यो जीव पशु हो यी दुबैमा स्वस्वामिभावसम्बन्ध (स्वामी र सेवकको सम्बन्ध) छ । अभेद मान्दा यो सम्बन्ध कसरी रहन सक्ला? ॥४२॥

**साक्षात्कृतं परं तत्त्वं यदा भवति बोधतः।**
**तदाद्वैतसमापत्तिर्ज्ञानहीनस्य न क्वचित्।।४३।।**

**भावार्थ** : ज्ञानका कारणले जब तत्त्वको साक्षात्कार हुन्छ तब अद्वैतको प्राप्ति हुन्छ । ज्ञानरहित मनुष्यलाई यसप्रकारको तत्त्वप्राप्ति कहिल्यै हुँन सक्दैन ॥४३॥

**भेदस्य कर्महेतुत्वाद् व्यवहारः प्रवर्तते।**
**लिङ्गपूजादिकर्मस्थो न चाद्वैतं समाचरेत्।।४४।।**

**भावार्थ** : कर्मका कारणहरूले भेदको व्यवहार हुन्छ । त्यस कारण लिङ्गपूजा आदि गर्ने व्यक्तिले अद्वैतको आचरण गर्नु हुँदैन ॥४४॥

**पूजादिव्यवहारः स्याद्भेदाश्रयतया सदा।**
**लिङ्गपूजापरस्तस्मान्नाद्वैते निरतो भवेत्।।४५।।**

**भावार्थ** : पूजा आदिको व्यवहार सधैं भेदकै आधारमा हुन्छ, त्यस कारण लिङ्गपूजामा लागेका भक्तले अद्वैतमा निरत हुनुहुँदैन ॥४५॥

### आह्वाननिरसनस्थल - (२०)

**लिङ्गार्चनपरः शुद्धः सर्वाद्वैतनिरासकः।**
**स्वेष्टलिङ्गे शिवाकारे न तमाह्वयेच्छिवम्।।४६।।**

**भावार्थ** : लिङ्गार्चनमा लागेका सर्वाद्वैतको निषेध गर्ने भक्तले परिशुद्ध वीर माहेश्वर शिवरूपी आफ्ना इष्टलिङ्गमा उस शिव अर्थात् अद्वैतात्मकशिवको आह्वान न गर्नु ॥४६॥

**यदा शिवकलायुक्तं लिङ्गं दद्यान्महागुरुः।**
**तदारभ्य शिवस्तत्र तिष्ठत्याह्वानमत्र किम्।।४७।।**



**भावार्थ** : यसको कारण यो हो कि महागुरुले जुन दिन देखि शिवकलायुक्त लिङ्ग प्रदान गर्छन् त्यसै दिन देखि शिवले त्यसमा निवास गर्दछन् फेरि त्यसमा उनका आवाहनको के आवश्यकता? ॥४७॥

**ससंस्कारेषु लिङ्गेषु सदा सन्निहितः शिवः।**
**तत्राह्वानं न कर्तव्यं प्रतिपत्तिविरोधकम्।।४८।।**

**भावार्थ** : संस्कारयुक्त लिङ्गहरूमा शिव सर्वदा रहनुहुन्छ । त्यसमा भक्ति अथवा ज्ञानको विरोधी आवाहन गर्नु हुँदैन ॥४८॥

**नाह्वानं न विसर्गं च स्वेष्टलिङ्गे तु कारयेत्।**
**लिङ्गनिष्ठापरो नित्यमिति शास्त्रस्य निश्चयः।।४९।।**

**भावार्थ** : लिङ्गपूजामा निष्ठा राख्ने भक्तले आफ्ना इष्टलिङ्गमा न ता शिवको आवाहन गरोस् न ता विसर्जन । यस्तो शास्त्रको निश्चय छ ॥४९॥

### अष्टमूर्तिनिरसनस्थल - (२१)

**यथात्मशिवयोरैक्यं न मतं कर्मसङ्गिनः।**
**तथा शिवात्पृथिव्यादेरद्वैतमपि नेष्यते।।५०।।**

**भावार्थ** : **अष्टमूर्त्तिनिरसनस्थलवर्णन**— जस्ता प्रकारले शिवपूजा लिङ्गधारण आदि कर्ममा आसक्ति राख्ने भक्तले आत्मा र शिवमा एकता मान्दैन, त्यस्तैप्रकारले, पृथिवी आदिको पनि शिवका साथमा ऐक्य इष्ट छैन अर्थात् इष्ट हुँदैन ॥५०॥

**पृथिव्याद्यष्टमूर्तित्वमीश्वरस्य प्रकीर्तितम्।**
**तदधिष्ठातृभावेन न साक्षादेकभावतः।।५१।।**

**भावार्थ** : ईश्वर पृथिवी आदि अष्टमूर्तिको रूप हो यसको तात्पर्य यो हो कि ईश्वर ती आठ मूर्तिहरूका अधिष्ठाता हुन् न कि ती भन्दा अभिन्न ॥५१॥

**विशेष**— जस्तै स्तन र दूधमा एक अर्कामा भेद भए पनि बालकले स्तनपान गरीरहेको छ- यस्तो लाक्षणिक व्यवहार हुन्छ, त्यस्तै प्रकारले पृथिवी

CC-0. Jangamwadi Math Digital Collection.

आदिको मूर्तिका रूपमा कथन (वर्णन) लाक्षणिक हो। यसको पुष्टि ''यस्य पृथिवी शरीरम्'' आदि श्रुतिवाक्यले गरेका छन् ।

**पृथ्व्यादिकमिदं सर्वं कार्यं कर्ता महेश्वरः।**
**नैतत्साक्षान्महेशोऽयं कुलालो मृत्तिका यथा।।५२।।**

**भावार्थ** : यो पृथिवी आदि सबै कार्य हो । महेश्वर यसका कर्ता हुनुहुन्छ । यो पृथिवी आदि साक्षात् महेश्वर होइनन्, जसरी माटो र कुम्हाले एक होइनन् ॥५२॥

**पृथिव्याद्यात्मपर्यन्तप्रपञ्चो ह्यष्टधा स्थितः।**
**तनुरीशस्य चात्मायं सर्वतत्त्वनियामकः।।५३।।**

**भावार्थ** : पृथिवी देखि लिएर आत्मा सम्म अर्थात् पृथिवी जल तेज वायु आकाश चन्द्रमा सूर्य र अग्नि अर्थात् आत्मा यो प्रपञ्च आठ प्रकारको छ। यो सबै परमेश्वरको शरीर हो तथा यो आत्मा सबै तत्त्वहरूको नियामक हो ॥५३॥

**शरीरभूतादेतस्मात् प्रपञ्चात्परमेष्ठिनः।**
**आत्मभूतस्य देवस्य नाभेदो न पृथक्स्थितिः।।५४।।**

**भावार्थ** : परमेष्ठी (ब्रह्मा) का शरीरभूत यस प्रपञ्चबाट आत्मभूत परमेश्वरको न अभेद छ न त घटपटका समान उनको सर्वदा पृथक् अस्तित्व छ ॥५४॥

**अचेतनात्वात् पृथ्व्यादेरज्ञत्वाद् आत्मनस्तथा।**
**सर्वज्ञस्य महेशस्य नैकरूपत्वमिष्यते।।५५।।**

**भावार्थ** : पृथिवी आदि अचेतन अर्थात् जड हुन् । जीवात्मा अज्ञ अर्थात् अल्पज्ञ हुन्छ । परमेश्वर सर्वज्ञ हुन् । यी तीनैको एकरूपता हुन सक्दैन ॥५५॥

**इति यश्चिन्तयेन्नित्यं पृथिव्यादेरष्टमूर्तितः।**
**विलक्षणं महादेवं सोऽष्टमूर्तिनिरासकः।।५६।।**

**भावार्थ** : यस प्रकार जुन साधकले महादेवलाई पृथिवी आदि अष्टमूर्तिभन्दा विलक्षण जान्दछ र ध्यान गर्दछ त्यसलाई अष्टमूर्तिनिरासक मानिन्छ ॥५५॥



**सर्वगतनिरसनस्थल - (२२)**

**सर्वगत्वे महेशस्य सर्वत्राराधनं भवेत्।**
**न लिङ्गमात्रे तन्निष्ठो न शिवं सर्वगं स्मरेत्।।५७।।**

**भावार्थ** : **सर्वगतनिरसनस्थल-वर्णन**— यहाँ यो प्रश्न हुन सक्छ - महेश्वर सर्वव्यापी हुनुहुन्छ, त्यसकारण उनको सर्वत्र आराधना गर्न सकिनु पर्ने न कि लिङ्गमा मात्र । यदि शिवलाई लिङ्गमा मात्र विराजमान मान्ने हो भने, सर्वव्यापकरूपमा उनलाई स्मरण गर्न मिल्दैन । यस अवस्थामा लिङ्गको मात्र पूजा कसरी युक्तियुक्त ठहर्ला? ॥५७॥

**सर्वगोऽपि स्थितः शम्भुः स्वाधारे हि विशेषतः।**
**तस्मादन्यत्र विमुखः स्वेष्टलिङ्गे यजेच्छिवम्।।५८।।**

**भावार्थ** : यद्यपि शिव सर्वव्यापी हुनुहुन्छ तर पनि आफ्नो आधार अर्थात् लिङ्गमा विशेषरूपले स्थित रहनु हुन्छ । यस कारण अन्यत्र विमुख भएर आफ्ना इष्ट लिङ्गमै शिवको आराधना पूजा गर्नु पर्दछ ॥५८॥

**शिवः सर्वगतश्चापि स्वाधारे व्यज्यते भृशम्।**
**शमीगर्भे यथा वह्निर्विशेषेण विभाव्यते।।५९।।**

**भावार्थ** : यद्यपि शिव सर्वगत हुनुहुन्छ तथापि आफ्नो आधार अर्थात् इष्टलिङ्गमा विशेषरूपले अभिव्यक्त हुनुहुन्छ । जसरी सबै वृक्षमा अग्नि रहन्छ तर पनि शमीनामको वृक्षमा अग्नि विशेषरूपले निवास गर्दछ तथा व्यक्त हुन्छ ॥५९॥

**सर्वगत्वं महेशस्य सर्वशास्त्रविनिश्चितम्।**
**तथाप्याश्रयलिङ्गादौ पूजार्थमधिका स्थितिः।।६०।।**

**भावार्थ** : महेश्वरको सर्वव्यापकता सबै शास्त्रले निश्चित गरेको छ तर पनि आश्रयभूतलिङ्गादिमा पूजाकालागि शिवको विशेषस्थिति अर्थात् उपस्थिति रहन्छ ॥६०॥

CC-0. Jangamwadi Math Digital Collection.

**नित्यं भासि तदीयस्त्वं या ते रुद्र शिवा तनूः।**
**अघोराऽपापकाशीति श्रुतिराह सनातनी।।६१।।**

**भावार्थ** : हे रुद्र! जो तपाँईको अघोर अर्थात् अभयङ्कर मङ्लकारी दोषरहित लिङ्गरूपी शरीर छ भनेर सनातन श्रुति-(वेद) ले बताउँछ, त्यस्ता शरीरभएका तिमी नित्यरूपमा प्रकाशित भैरहेका हुन्छौ ॥६१॥

**तस्मात्सर्वप्रयत्नेन सर्वस्थानपराङ्मुखः।**
**स्वेष्टलिङ्गे महादेवं पूजयेत्पूजकोत्तमः।।६२।।**

**भावार्थ** : त्यस कारण उत्तमपूजकले अरू सबै ठाऊँबाट पराङ्मुख भएर आफ्ना इष्टलिङ्गमा मात्र तल्लीन भएर महादेवको पूजा गर्नु पर्छ ॥६२॥

**शिवस्य सर्वगत्वेऽपि सर्वत्र रतिवर्जितः।**
**स्वेष्टलिङ्गे यजन् देवं सर्वगत्वनिरासकः।।६३।।**

**भावार्थ** : यद्यपि शिव सर्वगामी हुनुहुन्छ तथापि जो भक्त अनुरागरहित भएर केवल आफ्ना इष्टलिङ्गमा देवको पूजा गर्दछ त्यसलाई सर्वगत्वनिरासक भक्त भनिन्छ ॥६३॥

### शिवजगन्मयस्थल - (२३)

**पूजाविधौ नियम्यत्वाल्लिङ्गमात्रे स्थितं शिवम्।**
**पूजयन्नपि देवस्य सर्वगत्वं विभावयेत्।।६४।।**

**भावार्थ** : **शिवजगन्मयस्थल वर्णन**— पूजाविधिमा नियमित हुनाका कारणले भक्तले लिङ्गमात्रमा स्थित शिवको पूजा गरेर पनि देवाधिदेव सर्वव्यापक हुनुहुन्छ भन्ने भावना गर्नु पर्छ ॥६४॥

**यस्मादेतत् समुत्पन्नं महादेवाच्चराचरम्।**
**तस्मादेतन्न भिद्येत यथा कुम्भादिकं मृदः।।६५।।**

**भावार्थ** : किनकि यो समस्त चराचर महादेव बाटनै उत्पन्न भएको हो, यस कारण माटा बाट बनाइएको घडा माटाबाट भिन्न न भएजस्तै महादेवबाट केही पनि भिन्न छैन, भन्ने कुरा भक्तले बुझ्नु पर्छ ॥६५॥



**शिवतत्त्वात्समुत्पन्नं जगदस्मान्न भिद्यते।**
**फेनोर्मिबुद्बुदाकारं यथा सिन्धोर्न भिद्यते।।६६।।**

**भावार्थ** : समस्त चराचर शिवबाट उत्पन्न भएको हुँनाले समुद्रबाट उत्पन्न हुने फींज, तरङ्ग, थोपा समुद्रबाट अलग नभये समान शिवबाट भिन्न छैन ॥६६॥

**यथा तन्तुभिरुत्पन्नः पटस्तन्तुमयः स्मृतः।**
**तथा शिवात्समुत्पन्नं शिव एव चराचरम्।।६७।।**

**भावार्थ** : जस्ता प्रकारले तन्तुहरूबाट उत्पन्न पट(वस्त्र) तन्तुमय मानिन्छ त्यस्तै प्रकारले शिवबाट उत्पन्न चराचर पनि शिवमय नै हो ॥६७॥

**आत्मशक्तिविकासेन शिवो विश्वात्मना स्थितः।**
**कुटीभावाद् यथा भाति पटः स्वस्य प्रसारणात्।।६८।।**

**भावार्थ** : शिव आफ्ना शक्तिका विकासद्वारा विश्वकारूपमा ठीक त्यस्तै प्रकारले स्थित रहन्छन् जस्ता प्रकारले पटले (कपड़ा) तम्बूको रूप धारण गर्छ अथवा कुटी आदिका रूपमा परिणत हुन्छ ॥६८॥

**तस्माच्छिवमयं सर्वं जगदेतच्छराचरम्।**
**तदभिन्नतया भाति सर्पत्वमिव रज्जुतः।।६९।।**

**भावार्थ** : त्यसकारण शिवमय जो समस्त जगत् डोरीमा साँपको भय उत्पन्न भये जस्तै ती शिवबाट अभिन्नरूपमा भासित भैरहेको हुन्छ ॥६९॥

**विशेष**— डोरीमा सर्पको भ्रम हुँदा वस्तुतः मन्दान्धकार डोरीको बांगो पना आदि दोषका कारणले डोरीमा सर्पत्वको आरोप हुन्छ न कि सर्पको । सर्प ता डोरी भन्दा बिल्कुल अलग तथा अनारोप्य (आरोप गर्न न मिल्ने) हो ।

**रज्जौ सर्पवद्भाति शुक्तौ तु रजतत्ववत्।**
**चोरत्ववदपि स्थाणौ मरीच्यां च जलत्ववत्।।७०।।**

**गन्धर्वपुरवद्व्योम्नि सच्चिदानन्दलक्षणे।**
**निरस्तभेदसद्भावे शिवे विश्वं विराजते।।७१।।**

CC-0. Jangamwadi Math Digital Collection.

**भावार्थ** : डोरीमा सर्पत्व शुक्तिमा रजतत्त्व, स्थाणुमा चोरत्व, मृगमरीचिकामा जलत्व, आकाशमा गन्धर्व नगरत्वको आरोप भए जस्तै सच्चिदानन्दरूप भेदरहित शिवमा विश्व आभासित हुन्छ ।।७०-७१।।

**पत्रशाखादिरुपेण यथा तिष्ठति पादपः।**
**तथा भूम्यादिरूपेण शिव एको विराजते।।७२।।**

**भावार्थ** : जस्ता प्रकारले एक वृक्ष अनेक पत्ता शाखा आदिका रूपमा स्थित रहन्छ, त्यस्तै प्रकारले एक शिव अनेक भूमि आदि रूपमा विराजमान रहनु हुन्छ ।।७२।।

**विशेष** : प्रकाशस्वरूप शिव आफुभित्र समवेत विमर्शशक्तिद्वारा अनेकरूपमा भासित हुन्छन् । धृतिका कारणले धरणी, वरूणको कारणले जल, उज्ज्वलताका कारणले तेज, आनन्द स्पन्दनका कारणले वायु, चैतन्य व्याप्तिका कारणले आकाश तथा संकुचित चैतन्यका कारणले ती शिव जीवरूपमा प्रकाशित भैरहेका छन् । यद्यपि शिव निरंश (अंशरहित) हुनुहुन्छ तथापि आफ्नो दुर्घटकारिणी शक्तिका कारणले नाना एवं सावयवरूपमा वर्तमान हुनुहुन्छ । जहाँ सम्म प्रातिभाषिक प्रतीतिको विषय छ त्यसमा पनि आफ्नो शक्तिको न्यूनताद्वारा शिव नै भासित हुन्छन् । यस ग्रन्थका टीकाकारले बाध्यबाधक भाव स्वीकार, गरेको छैन किन कि शुक्तिमा रजतको प्रतीति एवं त्यसका बाध (निषेधको)को काल भिन्न हुन्छ । 'इदं रजतम्' 'नेदं रजतम्' यी दुवैज्ञानको स्थितिकाल अलग हुन्छ अतः बाध्यबाधक भाव हुन सक्दैन । ज्ञान गुण तथा निरंश हो अतः त्यहाँ त्यसको संभव हुँदैन । अतः रजतज्ञान र शुक्तिज्ञान आदि शिवका उन्मेष र निमेष मात्र हुन् ।

भक्तदेहिकलिङ्गस्थल - (२४)

**समस्तजगदात्मापि शङ्करः परमेश्वरः।**
**भक्तानां हृदयाम्भोजे विशेषेण विराजते।।७३।।**

**भावार्थ** : **भक्तिदेहिकलिङ्गस्थल वर्णन**— यद्यपि शङ्कर परमेश्वर सम्पूर्ण संसारमा व्याप्त हुनुहुन्छ तर पनि भक्तहरूका हृदयकमलमा विशेषरूपले विराजमान हुनुहुन्छ ।।७३।।



**कैलासे मन्दरे चैव हिमाद्रौ कनकाचले।**
**हृदयेषु च भक्तानां विशेषेण व्यवस्थितः।।७४।।**

**भावार्थ** : कैलास, मन्दार, हिमालय, कनकाचल, अर्थात् सुमेरु यी पर्वतहरू तथा भक्तहरूका हृदयमा शिवको विशेष स्थिति रहन्छ ।।७४।।

**सर्वात्मापि परिच्छिन्नो यथा देहेषु वर्तते।**
**तथा स्वकीयभक्तेषु शङ्करो भासते सदा।।७५।।**

**भावार्थ** : जस्ता प्रकारले सर्वत्र व्यापक भयेर पनि परमात्मा देवादिका देहहरूमा परिच्छिन्न भएर प्रतिबिम्बभावले रहनु हुन्छ । त्यस्तै प्रकारले शंकर आफ्नाभक्तहरूमा सर्वदा प्रकाशित हुनुहुन्छ ।।७५।।

**नित्यं भाति त्वदीयेषु या ते रुद्र शिवा तनूः।**
**अघोराऽपापकाशीति श्रुतिराह सनातनी।।७६।।**

**भावार्थ** : हे रुद्र! तिम्रा जुन शिवा, अघोरा, अपापकाशिनी आदि शरीर हरू छन् ती तिम्रा भक्तहरू भित्र सर्वदा प्रकाशित हुन्छन्— यस्तो सनातन श्रुतिको भनाई छ ।।७६।।

**विशुद्धेषु विरक्तेषु विवेकिषु महात्मसु।**
**शिवस्तिष्ठति सर्वात्मा शिवलाञ्छनधारिषु।।७७।।**

**भावार्थ** : विशुद्ध, वैराग्युक्त, विवेकी तथा शिवचिह्नलाई धारण गर्ने महात्माहरू भित्र सर्वात्माशिव सधैं विराजमान रहनुहुन्छ ।।७७।।

**नित्यं सन्तोषयुक्तानां ज्ञाननिर्धूतकर्मणाम्।**
**माहेश्वराणामन्तःस्थो विभाति परमेश्वरः।।७८।।**

**भावार्थ** : नित्य सन्तोषयुक्त ज्ञानद्वारा समस्तकर्महरूलाई भस्म गरेका महेश्वरका भक्तहरूका हृदयकमलमा परमेश्वर सर्वदा प्रकाशित हुनुहुन्छ ।।७८।।

**अन्यत्र शम्भो रतिमात्रशून्यो**
**निजेष्टलिङ्गे नियतान्तरात्मा।**

CC-0. Jangamwadi Math Digital Collection.

**शिवात्मकं विश्वमिदं विबुध्यन्**
**माहेश्वरोऽसौ भवति प्रसादी।।७९।।**

**भावार्थ** : शम्भु देखि अतिरिक्त विषयहरूमा अनासक्त आफ्नु इष्टलिङ्गमा संयत अन्त:स्करण भएको तथा यससंसारलाई शिवरूप मानने माहेश्वर भक्त प्रसादी अर्थात् सर्वदा प्रसन्न रहेर अरूलाई पनि प्रसन्न गराउने प्रसादिस्थलको साधक बन्न पुग्छ ।।७९।।

***ॐ तत्सत् इति श्रीशिवगीतेषु सिद्धान्तागमेषु शिवाद्वैतविद्यायां शिवयोगशास्त्रे श्रीरेणुकागस्त्य संवादे वीरशैवधर्मनिर्णये श्रीशिवयोगिशिवाचार्य-विरचिते श्रीसिद्धान्तशिखामणौ माहेश्वरस्थले माहेश्वरप्रशंसा-दिनवविधस्थलप्रसङ्गो नाम दशमः परिच्छेदः।***

**यस प्रकार श्रीसिद्धान्तशिखामणिको नवविध स्थलप्रसङ्गवर्णन नामक दशमपरिच्छेदको आचार्य हरिप्रसादअधिकारी कृत सुबोधिनी नामक नेपाली व्याख्या पूर्णभयो ।**

**।। दशमपरिच्छेद पूर्ण भयो ।।**

❍❍❍

CC-0. Jangamwadi Math Digital Collection.

# एकादशः परिच्छेदः

अंगस्थलांतर्गत

## प्रसादीस्थल

अगस्त्य उवाच —

**उक्तो माहेश्वरः साक्षाल्लिङ्गनिष्ठादिधर्मवान्।**
**कथमेष प्रसादीति कथ्यते गणनायक।।१।।**

**भावार्थ** : **प्रसादीस्थल वर्णन— अगस्त्यले भन्नुभयो**— हे गणनायक! साक्षात् लिङ्गमा निष्ठादिधर्मले युक्त माहेश्वरको तपाँइले वर्णन गर्नु भयो । यस माहेश्वरलाई फेरी प्रसादी किन भनिन्छ? यो कुरा बताउनुहवस् ।।१।।

**रेणुक उवाच —**

**लिङ्गनिष्ठादिभावेन ध्वस्तपापनिबन्धनः।**
**मनःप्रसादयोगेन प्रसादीत्येष कथ्यते।।२।।**

**भावार्थ** : **रेणुकाचार्यले भने**— लिङ्ग प्रति निष्ठादिभावद्वारा समस्त पापरूपी बन्धनलाई नष्ट गर्नेवाला माहेश्वरभक्त मनको प्रसन्नताका कारणले प्रसादी कहलाउँछ ।।२।।

**प्रसादिस्थलमित्येतदस्य माहात्म्यबोधकम्।**
**अन्तरस्थलभेदेन सप्तधा परिकीर्तितम्।।३।।**

**भावार्थ** : यो प्रसादी स्थल यसका महिमालाई बुझाउने हो । अन्तर्गत स्थलहरूका भेदले यो सातप्रकारको बताइएको छ ।।३।।

**प्रसादिस्थलमादौ तु गुरुमाहात्म्यकं ततः।**
**ततो लिङ्गप्रशंसा च ततो जङ्गमगौरवम्।।४।।**



**ततो भक्तस्य माहात्म्यं ततः शरणकीर्तनम्।**
**शिवप्रसादमाहात्म्यमिति सप्तप्रकारकम्।।५।।**

**भावार्थ** : पहिलो प्रसादी स्थल, दोस्रो गुरुमाहात्म्य स्थल, तेस्रो लिङ्गप्रशंसा, त्यस पछि जङ्गम गौरव, त्यस पछि भक्त माहात्म्य त्यसपछि शरणकीर्तन स्थल तथा अन्तमा शिवप्रसादमाहात्म्यस्थल यी सातवटा प्रकार बताइएका छन् ।।४-५।।

**प्रसादिस्थल - (२५)**

**क्रमाल्लक्षणमेतेषां कथयामि महामुने।**
**नैर्मल्यं मनसो लिङ्गं प्रसाद इति कथ्यते।।**
**शिवस्य लिङ्गरूपस्य प्रसादादेव सिद्ध्यति।।६।।**

**भावार्थ** : हे महामुने! अब म इनको क्रमै सँग लक्षण बताउँदैछु, मनको निर्मलतारूपी चिह्नलाई प्रसाद भनिन्छ । यो प्रसादलिङ्गरूपी शिवको कृपाबाट प्राप्त हुन्छ ।।६।।

**शिवप्रसादं यद्द्रव्यं शिवाय विनिवेदितम्।**
**निर्माल्यं तत्तु शैवानां मनोनैर्मल्यकारणम्।।७।।**

**भावार्थ** : शिवलाई समर्पित जो प्रसाद छ त्यसको निर्मलता वीर शैवहरूका मनलाई निर्मलता प्रदान गर्ने कारण हुन्छ ।।७।।

**मनःप्रसादसिद्ध्यर्थं निर्मलज्ञानकारणम्।**
**शिवप्रसादं स्वीकुर्वन् प्रसादीत्येष कथ्यते।।८।।**

**भावार्थ** : मनका प्रसन्नताको सिद्धिका लागि निर्मलज्ञानको कारणभूत शिवप्रसादलाई स्वीकार्ने अथवा ग्रहण गर्नेलाई प्रसादी भनिन्छ ।।८।।

**अन्नशुद्ध्या हि सर्वेषां तत्त्वशुद्धिरुदाहृता।**
**विशुद्धमन्नजातं हि यच्छिवाय समर्पितम्।।९।।**

**तदेव सर्वकालं तु भुञ्जानो लिङ्गतत्परः।**
**मनःप्रसादमतुलं लभते ज्ञानकारणम्।।१०।।**

CC-0. Jangamwadi Math Digital Collection.

**भावार्थ** : अन्नशुद्धि द्वारा सबैको तत्त्वशुद्धि बताइएको छ । शिवलाई समर्पित अन्न विशुद्ध अन्न मानिन्छ । लिङ्गको आराधनामा तत्पर भक्तले सदा त्यस अन्नको भक्षण गर्दछ तथा त्यस बाटहुने ज्ञानद्वारा उत्पन्न असीम मनः प्रसाद-(प्रसन्नता) लाई प्राप्त गर्दछ ॥९-१०॥

**आत्मभोगाय नियतं यद्यद्द्रव्यं समाहितम्।**
**तत्तत् समर्प्य देवाय भुञ्जीयादात्मशुद्धये।।११।।**

**भावार्थ** : आत्मभोगका लागि निश्चितरूपले जो जो द्रव्य एकत्रित गरिन्छ, आत्मशुद्धिका लागि त्यस त्यस अन्नलाई महादेवमा समर्पित गरी ग्रहण गर्नु पर्दछ ॥११॥

**नित्यसिद्धेन देवेन भिषजा जन्मरोगिणाम्।**
**यद्यत् प्रसादितं भुक्त्वा तत्तज्जन्मरसायनम्।।१२।।**

**भावार्थ** : जन्मरूपी रोगले युक्त भएका जनका लागि नित्यसिद्धवैद्यरूपी शिवदेवद्वारा भोगलगाएर जो जो वस्तुप्रसाद बनाइन्छ ती सबै वस्तु जन्मरसायन अर्थात् पुनर्जन्मबाट मुक्ति पाउनको लागि औषधी हो ॥१२॥

**आरोग्यकारणं पुंसामन्तःकरणशुद्धिदम्।**
**तापत्रयमहारोगसमुद्धरणभेषजम् ।।१३।।**
**विद्यावैशद्यकरणं विनिपातविघातनम्।**
**द्वारं ज्ञानावतारस्य मोहोच्छेदस्य कारणम्।।१४।।**
**वैराग्यसम्पदो मूलं महानन्दप्रवर्धनम्।**
**दुर्लभं पापचित्तानां सुलभं शुद्धकर्मणाम्।।१५।।**
**आदृतं ब्रह्मविष्ण्वाद्यैर्वसिष्ठाद्यैश्च तापसैः।**
**शिवस्वीकृतमन्नाद्यं स्वीकार्यं सिद्धिकाङ्क्षिभिः।।१६।।**

**भावार्थ** : सिद्धिचाहने मनुष्यहरूले शिवद्वारा स्वीकृत अर्थात् शिवलाई समर्पित अन्नादिको ग्रहण गरुन् । त्यस अन्नादिको विशेषताहरू निम्नलिखित छन्



- यो पुरुषहरुका आरोग्यको कारण हुन्छ । तिनका अन्तस्करणलाई शुद्ध गर्नेवाला हुन्छ । तीन तापरूपी महारोगबाट उद्धार गर्न का लागि औषधी हो, यसले विद्यालाई विशद बनाउँछ । पतन अर्थात् कृत्रिम दोषलाई रोक्दछ । यो ज्ञानावतारको द्वार तथा मोहोच्छेदको कारण हो । वैराग्यरूपी सम्पत्तिको मूल तथा महानन्दलाई बढाउनेवाला हुन्छ । यो पापीहरूका लागि दुर्लभ तथा शुद्ध आचार भएका लाई सुलभ हुन्छ । ब्रह्मा विष्णु आदि देवता तथा वशिष्ठ आदि तपस्वी हरुद्वारा प्रसादको आदर गरिएको छ ॥१३-१६॥

**पत्रं पुष्पं फलं तोयं यच्छिवाय निवेदितम्।**
**तत्तत्स्वीकारयोगेन सर्वपापक्षयो भवेत्।।१७।।**

**भावार्थ** : पत्र पुष्प फल जल जे पनि शिवलाई निवेदित अर्थात् चढाइएको छ त्यस त्यसको ग्रहण गर्नाले समस्त पापहरूको नाश हुन्छ । यो सँग मिल्ने श्लोक-पत्रं पुष्पं आदि श्रीमद्भगवद्गीताको नवम अध्यायमा पनि पाइन्छ ॥१७॥

**यथा शिवप्रसादान्नं स्वीकार्यं लिङ्गतत्परैः।**
**तथा गुरोः प्रसादान्नं तथैव शिवयोगिनाम्।।१८।।**

**भावार्थ** : लिङ्गको आराधनामा तत्पर जनहरूद्वारा जसरी शिवको प्रसादरूपी अन्न स्वीकार्य हुन्छ त्यसरी नै गुरु एवं शिवयोगीहरूको पनि प्रसादान्न स्वीकार्य हुनुपर्दछ ॥१८॥

### गुरुमाहात्म्यस्थल - (२६)

**गुरुरेवात्र सर्वेषां कारणं सिद्धिकर्मणाम्।**
**गुरुरूपो महादेवो यतः साक्षादुपस्थितः।।१९।।**

**भावार्थ** : यस जगत्मा समस्त सिद्धिकर्महरूको कारण गुरुमात्र हुनुहुन्छ किनकि गुरुका रूपमा साक्षात् महादेव उपस्थित हुनुहुन्छ॥१९॥

**निष्कलो हि महादेवो नित्यज्ञानमहोदधिः।**
**सकलो गुरुरूपेण सर्वानुग्राहको भवेत्।।२०।।**

CC-0. Jangamwadi Math Digital Collection.

**भावार्थ** : नित्यज्ञानका समुद्र महादेव निष्कल हुनुहुन्छ, वहाँ नै गुरुका रूपमा कल (कलायुक्त) भएर सर्वानुग्रहकारण हुनुहुन्छ ॥२०॥

**यः शिवः स गुरुर्ज्ञेयो यो गुरुः स शिवः स्मृतः।**
**न तयोरन्तरं कुर्याद् ज्ञानावाप्तौ महामतिः।।२१।।**

**भावार्थ** : जो शिव हुनुहुन्छ उनैलाई गुरु मान्नु पर्दछ। यस्तै प्रकारले जो गुरु हुनुहुन्छ उनैलाई शिव बताइएको छ, अर्थात् गुरु शिवसायुज्यरूप मोक्षको कारणभूत ज्ञानको दाता हुनाले शिवबाट अभिन्न हुनुहुन्छ। ज्ञानलाभका सन्दर्भमा विद्वान्हरूले ती दुबैमा अन्तर न गरून् ॥२१॥

**हस्तपादादिसाम्येन नेतरैः सदृशं वदेत्।**
**आचार्यं ज्ञानदं शुद्धं शिवरूपतया स्थितम्।।२२।।**

**भावार्थ** : ज्ञान दिने शुद्ध तथा शिवरूपमा स्थित आचार्यलाई हात खुट्टा आदिका समानताका कारणले अरू सामान्यजनहरू जस्तो मान्नु हुँदैन ॥२२॥

**आचार्यस्यावमानेन श्रेयःप्राप्तिर्विहन्यते।**
**तस्मान्निःश्रेयसप्राप्त्यै पूजयेत् तं समाहितः।।२३।।**

**भावार्थ** : आचार्यको अपमान गर्नाले मोक्षलाभमा विघ्न पर्छ। त्यसकारण निःश्रेयस (मोक्ष) को प्राप्ति का लागि समाहित चित्त भएर उनको पूजा गर्नु पर्छ ॥२३॥

**गुरुभक्तिविहीनस्य शिवभक्तिर्न जायते।**
**ततः शिवे यथा भक्तिस्तथा भक्तिर्गुरावपि।।२४।।**

**भावार्थ** : जो व्यक्ति गुरुभक्तिले रहित छ त्यस भित्र शिवभक्ति उत्पन्न हुँन सक्दैन त्यसकारण शिवमा जत्तिकै गुरुमा पनि भक्ति गर्नु पर्दछ ॥२४॥

### लिङ्गमाहात्म्यस्थल - (२७)

**गुरुमाहात्म्ययोगेन निजज्ञानातिरेकतः।**
**लिङ्गस्यापि च माहात्म्यं सर्वोत्कृष्टं विभाव्यते।।२५।।**



**भावार्थ** : **लिङ्गमाहात्म्यस्थल वर्णन**— गुरुको महिमा र आफ्नो ज्ञानको अधिकताले लिङ्गको माहात्म्य पनि सर्वोत्कृष्ट मानिन्छ ॥२५॥

**शिवस्य बोधलिङ्गं यद् गुरुबोधितचेतसा।**
**तदेव लिङ्गं विज्ञेयं शाङ्करं सर्वकारणम्।।२६।।**

**भावार्थ** : जो शिवको बोधलिङ्ग छ गुरुद्वारा प्रबोधित चित्त भएका मनुष्यले त्यसै बोधलिङ्गलाई सर्वकारण शाङ्करलिङ्ग मान्नु पर्छ ॥२६॥

**परं पवित्रममलं लिङ्गं ब्रह्म सनातनम्।**
**शिवाभिधानं चिन्मात्रं सदानन्दं निरङ्कुशम्।।२७।।**
**कारणं सर्वलोकानां वेदानामपि कारणम्।**
**पूरणं सर्वतत्त्वस्य तारणं जन्मवारिधेः।।२८।।**
**ज्योतिर्मयमनिर्देश्यं योगिनामात्मनि स्थितम्।**
**कथं विज्ञायते लोके महागुरुदयां विना।।२९।।**

**भावार्थ** : शिवनामक लिङ्ग परम पवित्र, निर्मल, सनातन, ब्रह्म, चिन्मात्र, सदानन्द, निरङ्कुश, समस्त लोकको कारण, वेदहरूको पनि कारण सम्पूर्ण तत्त्वहरूको पूरक, जन्मरूपीसमुद्रबाट पारि लैजाने ज्योतिर्मय, अनिर्देश्य, योगिहरूका हृदयमा रहनेवाला हुनुहुन्छ। यस्तो लिङ्गलाई महागुरूको महाकृपा विना यस संसारमा कसरी जान्न सकिन्छ ॥२७-२९॥

**ब्रह्मणा विष्णुना पूर्वं यल्लिङ्गं ज्योतिरात्मकम्।**
**अपरिच्छेद्यमभवत् केन वा परिचोद्यते।।३०।।**

**भावार्थ** : जुन ज्योतिस्वरूप लिङ्गको प्राचीन कालमा ब्रह्मा, तथा विष्णुले पनि पार पाएका थिएनन्। उसलाई कसले जान्न सक्दछ?॥३०॥

**बहुनात्र किमुक्तेन लिङ्गं ब्रह्म सनातनम्।**
**योगिनो यत्र लीयन्ते मुक्तपाशनिबन्धनाः।।३१।।**

**भावार्थ** : धेरै भन्नाले के लाभ? यो लिङ्गरूपी ब्रह्म सनातन हो योगीहरू पापबन्ध बाट मुक्त भएर उसमा लीन हुन्छन् ॥३१॥

CC-0. Jangamwadi Math Digital Collection.

**पीठिका परमा शक्तिर्लिङ्गं साक्षात्परः शिवः।**
**शिवशक्तिसमायोगं विश्वं लिङ्गं तदुच्यते।।३२।।**

**भावार्थ** : पीठिका (अर्घा) परमाशक्ति हो । लिङ्ग साक्षात् परमशिव हो । शिव र शक्तिको जो समायोग हुन्छ त्यसलाई विश्वलिङ्ग कहिन्छ ।।३२।।

**ब्रह्मादयः सुराः सर्वे मुनयः शौनकादयः।**
**शिवलिङ्गार्चनादेव स्वं स्वं पदमवाप्नुयुः।।३३।।**

**भावार्थ** : ब्रह्मा आदि देवता शौनकादि ऋषिगण यी सबै शिवलिङ्गको पूजाबाट नै आफ्नो आफ्नो पदमा प्राप्त भएका हुन् ।।३३।।

**विश्वाधिपत्वमीशस्य लिङ्गमूर्तेः स्वभावजम्।**
**अनन्यदेवसादृश्यं श्रुतिराह सनातनी।।३४।।**

**भावार्थ** : लिङ्ग स्वरूप ईश्वर विश्वाधिप(विश्वको स्वामी) हुनु स्वभावसिद्ध हो । यिनका समान विश्वाधिपत्व कुनै अन्य देवतामा हुन सक्दैन यस्तो सनातनी श्रुति अर्थात् वेदको कथन छ ।।३४।।

### जङ्गममाहात्म्यस्थल - (२८)

**गुरुशिष्यसमारूढलिङ्गमाहात्म्यसम्पदः ।**
**सर्वं चिद्रूपविज्ञानाज्जङ्गमाधिक्यमुच्यते।।३५।।**

**भावार्थ** : **जङ्गम माहात्म्य स्थल वर्णन**— गुरु र शिष्यका बीचमा उत्पन्न लिङ्ग माहात्म्यको सम्पत्तिको अपेक्षा चिद्रूप विज्ञानका कारण जङ्गमलिङ्गको माहात्म्य धेरै मानिएको छ ।।३५।।

**जानन्त्यतिशयाद् ये तु शिवं विश्वप्रकाशकम्।**
**स्वस्वरूपतया ते तु जङ्गमा इति कीर्तिताः।।३६।।**

**भावार्थ** : जो जनहरूले विश्वका प्रकाशक शिवलाई अतिशयका कारणले आत्मरूपमा जान्दछन् तिनलाई जङ्गमलिङ्ग भनियेको छ।।३६।।



**ये पश्यन्ति जगज्जालं चिद्रूपं शिवयोगतः।**
**निर्धूतमलसंस्पर्शास्ते स्मृताः शिवयोगिनः।।३७।।**

**भावार्थ** : जसले आफ्ना शिवयोग सामर्थ्यले जगज्जाललाई चिद्रूप जान्दछन् ती मल एवं स्पर्श बाट रहित जनहरू शिवयोगी कहलाउँछन् ।।३७।।

**घोरसंसारतिमिरपरिध्वंसनकारणम् ।**
**येषामस्ति शिवज्ञानं ते मताः शिवयोगिनः।।३८।।**

**भावार्थ** : जसका पासमा घोरसंसाररूपी अंधकारको नाशक शिवज्ञान हुन्छ ती शिवयोगी मानिन्छन् ।।३८।।

**जितकामा जितक्रोधा मोहग्रन्थिविभेदिनः।**
**समलोष्टाश्मकनकाः साधवः शिवयोगिनः।।३९।।**

**समौ शत्रौ च मित्रे च साक्षात्कृतशिवात्मकाः।**
**निस्पृहा निरहंङ्कारा वर्तन्ते शिवयोगिनः।।४०।।**

**भावार्थ** : काम र क्रोधलाई जित्ने, मोहरूपीग्रन्थिलाई छिन्न-भिन्न पार्ने, माटाको डल्लो, ढुँगो र सुनमा समान दृष्टि राख्ने साधुजन शिवयोगी कहलाउँछन् । शत्रु र मित्रमा समव्यवहार गर्ने शिवको साक्षात्कार गरेका निस्पृह तथा निरहंकारी भएर जो व्यवहार गर्दछन् ती शिवयोगी हुन् ।।३९-४०।।

**दुर्लभं हि शिवज्ञानं दुर्लभं शिवचिन्तनम्।**
**येषामेतद्द्वयं चास्ति ते हि साक्षाच्छिवात्मकाः।।४१।।**

**भावार्थ** : शिवको ज्ञान अत्यन्त दुर्लभ छ । त्यस्तै शिवको ध्यान पनि दुर्लभ छ । जसका साथमा यी दुवै छन् ती साक्षात् शिवस्वरूप हुन् ।।४१।।

**पादाग्ररेणवो यत्र पतन्ति शिवयोगिनाम्।**
**तदेव सदनं पुण्यं पावनं गृहमेधिनाम्।।४२।।**

**सर्वसिद्धिकरं पुंसां दर्शनं शिवयोगिनाम्।**
**स्पर्शनं पापशमनं पूजनं मुक्तिसाधनम्।।४३।।**

CC-0. Jangamwadi Math Digital Collection.

**भावार्थ** : शिवयोगीहरूका चरणका अग्रभागको धूलो जहाँ खस्छ त्यस गृहस्थको घर पुण्यप्रद तथा पवित्र हुन्छ । शिवयोगीहरुको दर्शन मनुष्यका लागि सर्वसिद्धिकर हुन्छ । उनको स्पर्श पापको शमन गर्ने तथा पूजन मूक्ति दिने हुन्छ ॥४२-४३॥

**महतां शिवतात्पर्यवेदिनामनुमोदिनाम्।**
**किं वा फलं न सिद्ध्येत सम्पर्काच्छिवयोगिनाम्।।४४।।**

**भावार्थ** : शिवतात्पर्यलाई जान्ने शिवस्वरूप सुखमा त्याग गर्ने महान् शिवयोगिहरूका सम्पर्क (सत्संग)ले के फल मिल्दैन? अर्थात् सम्पूर्ण कामनाको सिद्धि हुन्छ ॥४४॥

### भक्तमाहात्म्यस्थल - (२९)

**गुरोर्लिङ्गस्य माहात्म्यकथनाच्छिवयोगिनाम्।**
**सिद्धं भक्तस्य माहात्म्यं तथाप्येष प्रशस्यते।।४५।।**

**भावार्थ** : **भक्तमाहात्म्यस्थल वर्णन**— यद्यपि गुरु लिङ्ग र शिवयोगीहरूको महिमा गाउनाले भक्तको माहात्म्य अर्थात् प्रयोजन सिद्ध हुन्छ तथापि (तर पनि) अग्रिम श्लोकहरूमा यस्ता भक्तहरूको प्रशंसा वर्णित गरिन्छ ॥४५॥

**ये भजन्ति महादेवं परमात्मानमव्ययम्।**
**कर्मणा मनसा वाचा ते भक्ता इति कीर्तिताः।।४६।।**

**भावार्थ** : **भक्तको लक्षण**— जो जनहरू अव्यय परमात्मा महादेवको मन वाणी र कर्मद्वारा भजन अर्थात् सेवा गर्दछन् ती भक्त कहलाउँछन् ॥४६॥

**दुर्लभा हि शिवे भक्तिः संसारभयतारिणी।**
**सा यत्र वर्तते साक्षात् स भक्तः परिगीयते।।४७।।**

**भावार्थ** : संसाररूपी भय (डर) बाट पार तार्ने शिवभक्ति अत्यन्त दुर्लभ छ । त्यो भक्ति जस भित्र छ त्यो साक्षात् भक्त कहलाउँछ ॥४७॥

**किं वेदैः किं ततः शास्त्रैः किं यज्ञैः किं तपोव्रतैः।**
**नास्ति चेच्छाङ्करी भक्तिर्देहिनां जन्मरोगिणाम्।।४८।।**



**भावार्थ** : जन्मरूपी रोगले ग्रस्त देहधारी मनुष्य भित्र यदि शिवभक्ति छैन भने ती द्वारा पढिएको वेदशास्त्र तिनीद्वारा गरिएको यज्ञ तपस्या तथा व्रतबाट के लाभ? अर्थात् शिवभक्ति न भएमा सबैकुरा व्यर्थ हो ॥४८॥

**शिवभक्तिविहीनस्य सुकृतं चापि निष्फलम्।**
**विपरीतफलं च स्याद् दक्षस्यापि महाध्वरे।।४९।।**

**भावार्थ** : जो शिवभक्तिले रहित छ, उसको पुण्य पनि निष्फल हुन्छ। दक्ष प्रजापति जस्तो प्रतापीको यज्ञ पनि शिवभक्ति विहीन भएकाले विपरीत फल दिने भयो अर्थात् विपरीत फल मिल्यो ॥४९॥

**विशेष** - दक्षप्रजापतिद्वारा यज्ञमा शिवलाई नबोलाउनाले अप्रसन्न भई सतीदेवीद्वारा प्राण त्यागेको तथा परिणामतः वीरभद्रआदि शिवगणहरूद्वारा यज्ञविध्वंस भएको कथा नेपाली जगत्मा प्रसिद्ध छ ।

**अत्यन्तपापकर्मापि शिवभक्त्या विशुद्ध्यति।**
**चण्डो यथा पुरा भक्त्या पितृहाऽपि शिवोऽभवत्।।५०।।**

**भावार्थ** : अत्यन्त पाप गर्ने पनि शिवभक्तिद्वारा शुद्ध हुन्छ । उदाहरणार्थ - प्राचीनकालमा पितृघाती चण्ड पनि शिवभक्तिद्वारा शिवस्वरूप भएको थियो ॥५०॥

**सुकृतं दुष्कृतं वापि शिवभक्तस्य नास्ति हि।**
**शिवभक्तिविहीनानां कर्मपाशनिबन्धनम्।।५१।।**

**भावार्थ** : शिवभक्तका लागि न पुण्य हुन्छ न ता पाप नै हुन्छ । कर्मपाशको बन्धन मात्र शिवभक्ति रहित जीवहरूका लागि हो॥५१॥

**शिवाश्रितानां जन्तूनां कर्मणा नास्ति सङ्गमः।**
**वाजिनां दिननाथस्य कथं तिमिरजं भयम्।।५२।।**

**भावार्थ** : शिवमा निर्भर भएका जीवहरुलाई कर्मको फल मिल्दैन। सूर्यका घोडालाई अन्धकारको डर कसरी हुन सक्छ ? ॥५२॥

CC-0. Jangamwadi Math Digital Collection.

**निरोद्धुं न क्षमं कर्म शिवभक्तान् विशृङ्खलान्।**
**कथं मत्तगजान् रुन्धेच्छृङ्खला बिसतन्तुजा॥५३॥**

**भावार्थ** : विशृंखल अर्थात् बन्धनले रहित भएका शिवभक्तलाई कर्महरूले रोक्न सक्दैनन् । मात्तिएका हात्तीलाई विसतन्तु (कमलनाललाई भाँच्छा निक्लिने डोराले) को शृङ्खलाले कसरी बाँध्न सक्छ? ॥५३॥

**ब्राह्मणः क्षत्रियो वापि वैश्यो वा शूद्र एव वा।**
**अन्त्यजो वा शिवे भक्तः शिववन्मान्य एव सः॥५४॥**

**भावार्थ** : ब्राह्मण, क्षत्रिय, वैश्य, शूद्र अथवा अन्त्यज (चाण्डालादि) ले पनि यदि शिव प्रति भक्ति राख्छ भने त्यो शिव समान नै मान्य हुन्छ ॥५४॥

**शिवभक्तिसमावेशे क्व जातिपरिकल्पना।**
**इन्धनेष्वग्निदग्धेषु को वा भेदः प्रकीर्त्यते॥५५॥**

**भावार्थ** : शिवभक्तिको समावेश भैसके पछि जातिको परिकल्पना कहाँ सम्भव हुन सक्छ? दाउरा आगामा डडिसकेपछि आगो र दाउरामा अथवा इन्धनको अनेक प्रकारमा कसरी भेदको परिकल्पना गर्न सकिन्छ? ॥५५॥

**शुद्धा नियमसंयुक्ताः शिवार्पितफलागमाः।**
**अर्चयन्ति शिवं लोके विज्ञेयास्ते गणेश्वराः॥५६॥**

**भावार्थ** : दीक्षाआदिबाट परिशुद्ध नियमले बाँधिएका, आफ्ना अर्चनाको फल शिवलाई अर्पित गर्ने यस्ता जनहरू अर्थात् शिवभक्तहरू जो हुन्छन् ती गणेश्वर कहलाउँदछन् ॥५६॥

### शरणमाहात्म्यस्थल - (३०)

**गुरुलिङ्गादिमाहात्म्यबोधान्वेषणसङ्गतः।**
**सर्वात्मना शिवापत्तिः शरणस्थानमुच्यते॥५७॥**

**भावार्थ** : **शरणमाहात्म्यस्थल वर्णन**— गुरुलिङ्ग आदिका माहात्म्यको अन्वेषण गर्दै सबै प्रकारले शिवका शरणमा जानुलाई शरणस्थल भनिन्छ ॥५७॥



**ब्रह्मादिविबुधान् सर्वान् मुक्त्वा प्राकृतवैभवान्।**
**प्रपद्यते शिवं यत्तु शरणं तदुदाहृतम्॥५८॥**

**भावार्थ** : प्रकृतिका वैभवले युक्त ब्रह्मा आदि सबै देवताहरूलाई छोडेर जो शिवका शरणमा जान्छ त्यसैलाई 'शरण' भनिन्छ ॥५८॥

**शरण्यः सर्वभूतानां शङ्करः शशिशेखरः।**
**सर्वात्मना प्रपन्नस्तं शरणागत उच्यते॥५९॥**

**भावार्थ** : जसका शिरमा चन्द्रमा छन् यस्ता शङ्कर समस्त प्राणिहरूका शरणदाता हुनुहुन्छ । जो सर्वात्मना अर्थात् सबै प्रकारले उनका शरणमा पर्छ त्यसलाई शरणागत भनिन्छ ॥५९॥

**विमुक्तभोगलालस्यो देवतान्तरनिस्पृहः।**
**शिवमभ्यर्थयन् मोक्षं शरणार्थीति गीयते॥६०॥**

**भावार्थ** : जसको भोग लालसा समाप्त भैसकेको छ र अन्यदेवताहरूका विषयमा जो निस्पृह छ, यस्ता व्यक्तिले यदि शिवसँग मोक्षका लागि अभ्यर्चना, प्रार्थना, याचना गर्छ भने उसलाई शरणार्थी भनिन्छ॥६०॥

**ये प्रपन्ना महादेवं मनोवाक्कायकर्मभिः।**
**तेषां तु कर्मजातेन किं वा देवादितर्पणैः॥६१॥**

**भावार्थ** : जो व्यक्तिहरू मन वाणी र कर्मले महादेवका शरणमा परिसकेका छन्, तिनलाई यज्ञ-याग आदि कर्म समूह र देवता आदिका तर्पणादिहरूबाट के लाभ? अर्थात् उनिहरूलाई कुनै पनि कर्म गर्ने आवश्यकता हुँदैन ॥६१॥

**सर्वेषामपि यज्ञानां क्षयः स्वर्गः फलायते।**
**अक्षयं फलमाप्नोति प्रपन्नः परमेश्वरम्॥६२॥**

**भावार्थ** : समस्त यज्ञहरूको फल स्वर्ग क्षयशील हो तर जो भक्त परमेश्वरको शरणमा पर्‍यो उसले अक्षयफल अर्थात् शिवसायुज्य प्राप्त गर्दछ ॥६२॥

CC-0. Jangamwadi Math Digital Collection.

**प्रपन्नपारिजातस्य भवस्य परमात्मनः।**
**प्रपत्त्या किं न जायेत पापिनामपि देहिनाम्।।६३।।**

**भावार्थ** : परमात्मा शिव प्रपन्न (शरणागत) का लागि कल्पवृक्षका समान हुनुहुन्छ । यस्ता शिवप्रति प्रपत्ति (शरणागति) ले पापी जीवलाई कुन वस्तु उपलब्ध हुँदैन? अर्थात् सबै कुरा प्राप्त हुन्छ ।।६३।।

**प्रपन्नानां महादेवं परिपक्वान्तरात्मनाम्।**
**जन्मैव जन्म नान्येषां वृथा जननसङ्गिनाम्।।६४।।**

**भावार्थ** : महादेवका शरणमा गएका (परेका) तथा परिशुद्ध हृदय भएका भक्तको जन्म नै वास्तविक जन्म हो अर्थात् जन्म सफल हो । यसका अतिरिक्त अरु जनहरूको जन्म लिनु व्यर्थ हो ।।६४।।

**दुर्लभं मानुषं प्राप्य जननं ज्ञानसाधनम्।**
**ये न जानन्ति देवेशं तेषामात्मा निरर्थकः।।६५।।**

**भावार्थ** : ज्ञानको साधनभूत (साधन भएको) दुर्लभ मनुष्य जन्मलाई पाएर पनि जसले देवेश अर्थात् परमात्मा शिवलाई जान्दैन उसको जीवन व्यर्थ हो ।।६५।।

**तत्कुलं हि सदा शुद्धं सफलं तस्य जीवितम्।**
**यस्य चित्तं शिवे साक्षाद् विलीनमबहिर्मुखम्।।६६।।**

**भावार्थ** : जुन व्यक्तिको अबहिर्मुख मन साक्षात् शिवमा विलीन भएको हुन्छ, उसको कुल सदाको लागि शुद्ध भयो तथा उसको जीवन सफल भयो ।।६६।।

### प्रसादमहात्म्यस्थल - (३१)

**गुरुलिङ्गादिमाहात्म्यविशेषानुभवस्थितिः।**
**यस्माच्छिवप्रसादात् स्यात्तदस्य महिमोच्यते।।६७।।**

**भावार्थ** : **प्रसादमाहात्म्यस्थल वर्णन**— जुन शिवप्रसादका धारणले गुरु लिङ्ग आदिका माहात्म्यविशेषको अनुभव हुन्छ त्यही नै यसको माहात्म्य हो अर्थात् महत्त्व हो ।।६७।।



**सदा लिङ्गैकनिष्ठानां गुरुपूजानुषङ्गिणाम्।**
**प्रपन्नानां विशुद्धानां प्रसीदति महेश्वरः।।६८।।**

**भावार्थ** : जो सधैं लिङ्गार्चनमा निरत हुन्छन्, गुरुपूजामा तत्पर हुन्छन्, प्रपन्न तथा विशुद्ध हुन्छन् ती माथि परमेश्वर प्रसन्न हुन्छन् ।।६८।।

**प्रसादोऽपि महेशस्य दुर्लभः परिकीर्त्यते।**
**घोरसंसारसन्तापनिवृत्तिर्येन जायते।।६९।।**

**भावार्थ** : जसद्वारा घोर संसार संतापको निवृत्ति हुन्छ यस्तो महेश्वरको प्रसन्नता अथवा कृपा पनि दुर्लभ बताइएको छ ।।६९।।

**यज्ञास्तपांसि मन्त्राणां जपश्चिन्ता प्रबोधनम्।**
**प्रसादार्थं महेशस्य कीर्तितानि न संशयः।।७०।।**

**भावार्थ** : यज्ञ, तप, मन्त्रहरूको जप, ध्यान, ज्ञान यी सबै साधनका रूपमा महेश्वरका प्रसन्नताका लागि बताइएका हुन् । यसमा सन्देह छैन ।।७०।।

**प्रसादमूला सर्वेषां भक्तिरव्यभिचारिणी।**
**शिवप्रसादहीनस्य भक्तिश्चापि न सिद्ध्यति।।७१।।**

**भावार्थ** : सबै व्यक्तिहरूको शिवका प्रसादबाट उत्पन्न भक्ति अव्यभिचारिणी अर्थात् एक निष्ठा भएको हुन्छ । शिवप्रसादरहित व्यक्तिमा भक्ति पनि हुन सक्दैन ।।७१।।

**गर्भस्थो जायमानो वा जातो वा ब्राह्मणोऽथवा।**
**अन्त्यजो वापि मुच्येत प्रसादे सति शाङ्करे।।७२।।**

**भावार्थ** : यसरी शिवको प्रसन्नता भए पछि गर्भस्थ, उत्पन्न हुँदै गरेको तथा उत्पन्न भैसकेको ब्राह्मण, चाण्डाल, अथवा अरु कुनै होस् अवश्य मुक्त हुन्छ ।।७२।।

**ब्रह्माद्या विबुधाः सर्वे स्वस्वस्थाननिवासिनः।**
**नित्यसिद्धा भवन्त्येव प्रसादात् पारमेश्वरात्।।७३।।**

CC-0. Jangamwadi Math Digital Collection.

**भावार्थ** : ब्रह्मा आदि समस्त देवगण परमेश्वरका प्रसन्नताबाट नै आफ्ना-आफ्ना पदमा रहेर नित्यसिद्ध भएका छन् ॥७३॥

**प्रसादे शाम्भवे सिद्धे परमानन्दकारणे।**
**सर्वं शिवमयं विश्वं दृश्यते नात्र संशयः।।७४।।**

**भावार्थ** : परमानन्दको कारण शाम्भव प्रसाद (शिवको प्रसाद) सिद्ध अर्थात् प्राप्त भएपछि समस्त संसार शिवमय देखिन्छ । यसमा कुनै सन्देह छैन ॥७४॥

**संसारचक्रनिर्वाहनिमित्तं कर्म केवलम्।**
**प्रसादेन विना शम्भोर्न कस्यापि निवर्तते।।७५।।**

**भावार्थ** : कर्म मात्र संसाररूपी चक्रलाई परिभ्रमण (घुमाउने) गराउने कारण हो । शिवप्रसाद (प्रसन्नता) विना कसैको पनि कर्म नष्ट हुन सक्दैन ॥७५॥

**बहुनात्र किमुक्तेन नास्ति नास्ति जगत्त्रये।**
**समानमधिकं चापि प्रसादस्य महेशितुः।।७६।।**

**भावार्थ** : यस विषयमा अधिक वर्णन गरेर के लाभ? महेश्वरका प्रसादभन्दा श्रेष्ठ अथवा बराबर तीनै लोकमा केहि पनि छैन ॥७६॥

**शिवप्रसादे सति योगभाजि**
**सर्वं शिवैकात्मतया विभाति।**
**स्वकर्ममुक्तः शिवभावितात्मा**
**स प्राणलिङ्गीति निगद्यतेऽसौ।।७७।।**

**भावार्थ** : शिवप्रसादले युक्त भए पछि सबै शिवमय प्रतीत हुन्छ । जो व्यक्ति शिवभावनामय छ त्यो आफ्ना कर्मबाट मुक्त भएर प्राणलिङ्गी कहलाउँदछ ॥७७॥

***ॐ तत्सत् इति श्रीशिवगीतेषु सिद्धान्तागमेषु शिवाद्वैतविद्यायां शिवयोगशास्त्रे श्रीरेणुकागस्त्यसंवादे वीरशैवधर्मनिर्णये***



***श्रीशिवयोगिशिवाचार्यविरचिते श्रीसिद्धान्तशिखामणौ प्रसादिस्थले प्रसादिस्थलादिसप्तविधस्थलप्रसङ्गो नाम एकादशः परिच्छेदः।***

**यस प्रकार श्रीसिद्धान्तशिखामणिको प्रसादीको सातप्रकारको स्थल नामक एकादश परिच्छेदको आचार्य हरिप्रसादअधिकारी कृत सुबोधिनी नामक नेपाली व्याख्या पूर्णभयो ।**

**।। एकादशपरिच्छेद पूर्ण भयो ।।**

❍❍❍

CC-0. Jangamwadi Math Digital Collection.

# द्वादश परिच्छेद

अंगस्थलांतर्गत

## प्राणलिङ्गीस्थल

प्राणलिङ्गीस्थल - (३२)

अगस्त्य उवाच —

**भक्तो माहेश्वरश्चेति प्रसादीति निबोधितः।**
**एक एव कथं चैव प्राणलिङ्गीति कथ्यते।।१।।**

**भावार्थ** : **प्राणलिङ्गीस्थल वर्णन**— अगस्त्यले भन्नु भयो— एउटै व्यक्ति भक्त, महेश्वर, र प्रसादी हुन्छ, यो कुरा तपाँईले मलाई बताउनु भयो। त्यसै प्रसादीलाई "प्राणलिङ्गी" कसरी भनिन्छ? अर्थात् त्यो प्राणलिङ्गी कसरी कहलाउँछ ? ।।१।।

**श्रीरेणुक उवाच —**

**भक्तो माहेश्वरश्चैष प्रसादीति च कीर्तितः।**
**कर्मप्राधान्ययोगेन ज्ञानयोगोऽस्य कथ्यते।।२।।**

**भावार्थ** : श्री रेणकाचार्यले भन्नु भयो— एउटै मनुष्य अर्थात् जो भक्त माहेश्वर र प्रसादी कहलाउँछ त्यो कर्मप्राधान्यका कारणले हो। अब यस प्रसादीको ज्ञानयोग बताइन्छ, अर्थात् ज्ञानयोगका कारणले नै प्रसादी प्राणलिङ्गी कहलाउँछ ।।२।।

**लिङ्गं चिदात्मकं ब्रह्म तच्छक्तिः प्राणरूपिणी।**
**तद्रूपलिङ्गविज्ञानी प्राणलिङ्गीति कथ्यते।।३।।**

**भावार्थ** : चित्स्वरूप ब्रह्मलिङ्ग हो । उसको शरीर प्राण हो । यस्ता स्वरूपयुक्त लिङ्गलाई विशेषरूपले जान्नेलाई प्राणलिङ्गी भनिन्छ ।।३।।



**प्राणलिङ्गिस्थलं चैतत् पञ्चस्थलसमन्वितम्।**
**प्राणलिङ्गिस्थलं चादौ प्राणलिङ्गार्चनं ततः।।४।।**

**शिवयोगसमाधिश्च ततो लिङ्गनिजस्थलम्।**
**अङ्गलिङ्गिस्थलं चाथ क्रमादेषां भिदोच्यते।।५।।**

**भावार्थ** : यो प्राणलिङ्गीस्थल पाँच स्थलहरूले युक्त हुन्छ । पहिलो प्राणलिङ्गी स्थल त्यस पछि प्राणलिङ्गार्चन फेरि शिवयोग समाधि त्यस पछि निजलिङ्ग स्थल तथा अन्तमा अङ्गलिङ्गी स्थल हुन्छ। अब क्रमै सँग इनको भेद बताइन्छ ।।४-५।।

**प्राणापानसमाघातात् कन्दमध्याद्यदुत्थितम्।**
**प्राणलिङ्गं तदाख्यातं प्राणापाननिरोधिभिः।।६।।**

**भावार्थ** : प्राण र अपानको परस्पर आघातले नाभिकन्दको बीचबाट जो ज्योति उत्पन्न हुन्छ। प्राण एवं अपानलाई निरुद्ध गर्न सक्ने योगीहरूले त्यसलाई प्राणलिङ्ग भन्दछन् ।।६।।

**प्राणो यत्र लयं याति भास्करे तुहिनं यथा।**
**तत्प्राणलिङ्गमुद्दिष्टं तद्धारी स्यात् तदाकृतिः।।७।।**

**भावार्थ** : जस्ता प्रकारले तुहिन (तुसारो) सूर्यमा लीन हुन्छ त्यस्तै प्रकारले जसको प्राण परब्रह्ममय शिवलिङ्गमा लीन हुन्छ त्यसलाई प्राणलिङ्ग भनिन्छ । त्यसलाई धारण गर्नेवाला तद्रूप अर्थात् प्राणलिङ्गी हुन्छ ।।७।।

**ज्ञानिनां योगयुक्तानामन्तः स्फुरति दीपवत्।**
**चिदाकारं परब्रह्मलिङ्गमज्ञैर्न भाव्यते।।८।।**

**भावार्थ** : चिदाकार परब्रह्म ज्ञानिहरू शिवयोगीहरू अथवा शिवयोग समन्वित ज्ञानिहरूमा दीयो बले जस्तै गरी प्रकाशमान भै रहन्छ (चम्की रहन्छ) अज्ञानीहरूले त्यसलाई जान्न सक्दैनन् ।।८।।

CC-0. Jangamwadi Math Digital Collection.

**अन्तःस्थितं परं लिङ्गं ज्योतीरूपं शिवात्मकम्।**
**विहाय बाह्यलिङ्गस्था विमूढा इति कीर्तिताः।।९।।**

**भावार्थ** :शिवात्मक ज्योतिरूप तथा आफुभित्र रहेको उत्कृष्ट लिङ्गलाई छोडेर बाह्यलिङ्गमा आस्था राख्नेलाई मूर्ख भनिएको छ ॥९॥

**संविल्लिङ्गपरामर्शी बाह्यवस्तुपराङ्मुखः।**
**यः सदा वर्तते योगी प्राणलिङ्गी स उच्यते।।१०।।**

**भावार्थ** : जसले संवित्‌रूपी लिङ्गको बार बार ध्यान गर्दछ तथा बाह्य वस्तुहरूबाट पराङ्मुख भएर व्यवहार गर्छ त्यस योगीलाई प्राणलिङ्गी भनिन्छ ॥१०॥

**मायाविकल्पजं विश्वं हेयं सञ्चिन्त्य नित्यशः।**
**चिदानन्दमये लिङ्गे विलीनः प्राणलिङ्गवान्।।११।।**

**भावार्थ** : प्रतिदिन विश्वलाई मायाविकल्पबाट उत्पन्न भएको मान्दै चिदानन्दमय लिङ्गमा सदा लीनरहनेवाला प्राणलिङ्गी हुन्छ ॥११॥

**सत्ता प्राणमयी शक्तिः सद्रूपं प्राणलिङ्गकम्।**
**तत्सामरस्यविज्ञानात् प्राणलिङ्गीति कथ्यते।।१२।।**

**भावार्थ** : म हूँ अथवा म छु यस प्रकारको अनुभव गर्ने वाला सत्ता नै प्राणमयी शक्ति हो । प्राणलिङ्गी (शिव) पनि सद्‌रूप हुन्, यस प्रकार सत्तारूपी शक्ति र प्राणरूपी शिव यी दुवैका सामरस्यको विज्ञानी (अर्थात् यसको रहस्यलाई जान्ने) लाई प्राणलिङ्गी कहिन्छ ॥१२॥

## प्राणलिङ्गार्चनस्थल - (३३)

**अन्तर्गतं चिदाकारं लिङ्गं शिवमयं परम्।**
**पूज्यते भावपुष्पैर्यत् प्राणलिङ्गार्चनं हि तत्।।१३।।**

**भावार्थ** : **प्राणलिङ्गार्चनस्थल वर्णन**— हृदयकमल भित्र जो चित्स्वरूप शिवमय उत्तमलिङ्ग छ, उसको जो भावात्मक पुष्पले पूजा गरिन्छ त्यसलाई प्राणलिङ्गार्चन भनिन्छ ॥१३॥



**अन्तः पवनसंस्पृष्टे सुसूक्ष्माम्बरशोभिते।**
**मूर्धन्यचंद्रविगलत्सुधासेकातिशीतले ।।१४।।**

**बद्धेन्द्रियनवद्वारे बोधदीपे हृदालये।**
**पद्मपीठे समासीनं चिल्लिङ्गं शिवविग्रहम्।।**
**भावयित्वा सदाकालं पूजयेद् भाववस्तुभिः।।१५।।**

**भावार्थ** : अन्तःपवन (अर्थात् प्राणवायुद्वारा संस्पृष्ट सूक्ष्म आकाशले सुशोभित सहस्रारमा स्थित चन्द्रमाबाट द्रवित हुने(पग्लिने) अमृतसिंचनद्वारा शीतल भएका, इन्द्रियका नौ ढोका बाँधिएका व्यक्ति अर्थात् साधकभक्तले बोधदीपयुक्त हृदयकमलमा विराजमान चित्स्वरूप शिवको भावना गरेर भाववस्तुद्वारा नै सदा सर्वदा उनको पूजन गर्नुपर्छ ॥१४-१५॥

**क्षमाऽभिषेकसलिलं विवेको वस्त्रमुच्यते।**
**सत्यमाभरणं प्रोक्तं वैराग्यं पुष्पमालिका।।१६।।**

**गन्धः समाधिसम्पत्तिरक्षता निरहङ्कृतिः।**
**श्रद्धा धूपो महाज्ञानं जगद्भासि प्रदीपिका।।१७।।**

**भ्रान्तिमूलप्रपञ्चस्य निवेद्यं तन्निवेदनम्।**
**मौनं घण्टापरिस्पन्दस्ताम्बूलं विषयार्पणम्।।१८।।**

**विषयभ्रान्तिराहित्यं तत्प्रदक्षिणकल्पना।**
**बुद्धेस्तदात्मिका शक्तिर्नमस्कारक्रिया मता।।१९।।**

**एवंविधैर्भावशुद्धैरुपचारैरदूषितैः ।**
**प्रत्युन्मुखमना भूत्वा पूजयेल्लिङ्गमान्तरम्।।२०।।**

**भावार्थ** : यसपूजामा क्षमाको अभिषेक जल, विवेकको वस्त्र, सत्यको अलङ्कार, वैराग्यको पुष्पमाला, समाधिको गन्ध, निरहङ्कारताको अक्षता, क्षद्धाको धूप, जगत्‌लाई प्रकाशित गर्ने महाज्ञानरूपी दीप, मूल प्रपञ्चको भ्रमरूपी नैवेद्य, मौन घण्टा को नाद (ध्वनि), कामक्रोध आदि विषयरूपी ताम्बूल (पान) विषयभ्रम

CC-0. Jangamwadi Math Digital Collection.

हटाउन खालको परिक्रमा, तथा बुद्धिवृत्तिलाई लिङ्गमा लय गर्नुलाई नमस्कार बताइएको छ । यस प्रकारका दोषरहित भावशुद्ध पूजा साधनहरूद्वारा अन्तर्मुखी भएर आन्तर हृदयमा वर्तमान चित्स्वरूप शिवलिङ्गको पूजन गर्नुपर्छ ॥१६-२०॥

**शिवयोगसमाधिस्थल - (३४)**

**अन्तःक्रियारतस्यास्य प्राणलिङ्गार्चनक्रमैः।**
**शिवात्मध्यानसम्पत्तिः समाधिरिति कथ्यते।।२१।।**

**भावार्थ** : **शिवयोग समाधिस्थल वर्णन**— शिवयोग समाधिस्थल वर्णन - प्राणलिङ्गार्चनका क्रमले आभ्यन्तरपूजामा निरत यस प्राणलिङ्गीलाई शिवध्यानरूपी जो सम्पत्ति प्राप्त हुन्छ, त्यसलाई समाधि भनिन्छ ॥२१॥

**सर्वतत्त्वोपरि गतं सच्चिानन्दभासुरम्।**
**स्वप्रकाशमनिर्देश्यमवाङ्मानसगोचरम्।।२२।।**

**उमाख्यया महाशक्त्या दीपितं चित्स्वरूपया।**
**हंसरूपं परात्मानं सोऽहंभावेन भावयेत्।।**
**तदेकतानतासिद्धिः समाधिः परमो मतः।।२३।।**

**भावार्थ** : पृथिवी आदि समस्त छत्तीस (३६) तत्त्वहरूभन्दा अगाडी सत् चित् आनन्दका रूपमा देदीप्यमान, स्वप्रकाश अनिर्देश्य, वाणी र मनका सीमा भन्दा पर (बाहिर) चित्स्वरूप उमानायक महाशक्तिद्वारा दीपित (प्रज्वलित) हंसरूप परमात्माको सोऽहं भाव अर्थात् म त्यो हूँ त्यो म हूँ यस प्रकारको भाव लिएर ध्यान भावना गर्नु पर्छ । त्यस्तो भावना एकतान हुनु (अर्थात् बीचमा अरु विचार न उठ्नु) लाई परम-समाधि भनिन्छ ॥२२-२३॥

**परब्रह्म महालिङ्गं प्राणो जीवः प्रकीर्तितः।**
**तदेकभावमननात् समाधिस्थः प्रकीर्तितः।।२४।।**

**भावार्थ** : महालिङ्गलाई परब्रह्म र प्राणलाई जीव भनिएको छ । ती दुबैलाई एक र अभिन्न मान्नेवालालाई समाधिस्थ भनिएको छ ॥२४॥



**अन्तः षट्चक्ररूढानि पङ्कजानि विभावयेत्।**
**ब्रह्मादिस्थानभूतानि भ्रूमध्यान्तानि मूलतः।।२५।।**

**भ्रूमध्यादूर्ध्वभागे तु सहस्रदलमम्बुजम्।**
**भावयेत्तत्र विमलं चन्द्रबिम्बं तदन्तरे।।२६।।**

**सूक्ष्मरंध्रं विजानीयात् तत्कैलासपदं विदुः।**
**तत्रस्थं भावयेच्छम्भुं सर्वकारणकारणम्।।२७।।**

**भावार्थ** : साधकले आफुभित्र छ चक्र अर्थात् १. मूलाधार, २. स्वाधिष्ठान, ३. मणिपुर, ४. अनाहत, ५. शाकिकी तथा ६. आज्ञामा स्थित छ कमलको भावना गर्नु पर्छ । यी चक्रहरू मूलाधार देखि लिएर भ्रूमध्य सम्म स्थित छन् तथा ब्रह्मा आदिका स्थान हुन्। अर्थात् क्रमशः ब्रह्मा, विष्णु, रुद्र, ईश्वर, सदाशिव र शिव यी चक्रहरूमा निवास गर्दछन् । भ्रूमध्यका माथिल्लो भागमा सहस्रदल कमलको भावना गर्नु पर्छ । त्यस भित्र चन्द्रबिम्बको ध्यान गर्नु पर्छ। त्यस चन्द्रभित्र सूक्ष्म छिद्रको भावना गर्नु पर्छ । यसै सूक्ष्म रन्ध्र (छिद्र) लाई कैलास भनिएको छ । त्यसमाथि सबै कारणहरूका पनि कारण शिव विराजमान हुनुहुन्छ । यस्तो भावना गर्नुपर्छ ॥२५-२७॥

**बहिर्वासनया विश्वं विकल्पार्थं प्रकाशते।**
**अन्तर्वासितचित्तानामात्मानन्दः प्रकाशते।।२८।।**

**भावार्थ** : बाहिरी वासनाका कारणले विकल्पात्मक विषयहरूले युक्तभएको विश्व प्रकाशित हुन्छ । जसको चित्त अन्तर्मुखी हुन्छ उनलाई आत्मानन्दको साक्षात्कार हुन्छ ॥२८॥

**आत्मारणिसमुत्थेन प्रमोदमथनात्सुधीः।**
**ज्ञानाग्निना दहेत्सर्वं पाशजालं जगन्मयम्।।२९।।**

**भावार्थ** : विद्वानको यो कर्तव्य हो कि उसले प्रमोदरूपी अर्थात् शिवानन्दरूपी विचारमन्थनद्वारा आत्मारूपी अरणिद्वारा ज्ञानरूपी अग्निद्वारा जगत्रूपी समस्त पाशजाललाई भस्म गरिदेओस् अर्थात् डडाओस् ॥२९॥

CC-0. Jangamwadi Math Digital Collection.

**संसारविषवृक्षस्य पञ्चक्लेशपलाशिनः।।३०।।**
**छेदने कर्ममूलस्य परशुः शिवभावना।।३०।।**

**भावार्थ** : कर्मबाट उत्पन्न यो संसार विषवृक्ष जस्तो छ । अविद्या, अस्मिता, राग, द्वेष, र अभिनिवेश अर्थात् मृत्युबाट डर यी पाँच क्लेश यस वृक्षका पात हुन् । यस वृक्षलाई काट्नका लागि शिवभावना बञ्चरो समान छ ॥३०॥

**अज्ञानराक्षसोन्मेषकारिणः संहृतात्मनः।।३१।।**
**शिवध्यानं तु संसारतमसश्चण्डभास्करः।।३१।।**

**भावार्थ** : आत्मालाई आवृत गर्ने तथा अज्ञानरूपी राक्षसलाई उद्दीप्त गर्ने अर्थात् बलियो बनाउने संसाररूपी अन्धकारलाई हटाउनका लागि शिवको ध्यान प्रचण्ड सूर्यको तेज जस्तो छ ॥३१॥

**लिङ्गनिजस्थल - (३५)**

**स्वान्तस्थशिवलिङ्गस्य प्रत्यक्षानुभवस्थितिः।।३२।।**
**यस्यैव परलिङ्गस्य निजमित्युच्यते बुधैः।।३२।।**

**भावार्थ** : **निजलिङ्गस्थलवर्णन**— जसलाई स्वान्तस्थ शिवको अर्थात् शिवलिङ्गको प्रत्यक्ष अनुभव हुन लाग्दछ । त्यस परालिङ्गलाई स्वात्मस्वरूपमा अनुभव गर्ने प्राणलिङ्गलाई विद्वान्हरूले निजलिङ्गको संज्ञा दिएका छन् ॥३२॥

**ब्रह्मविष्ण्वादयो देवाः सर्वे वेदादयस्तथा।**
**लीयन्ते यत्र गम्यन्ते तल्लिङ्गं ब्रह्म शाश्वतम्।।३३।।**

**भावार्थ** : ब्रह्मा विष्णु आदि समस्त देवताहरू तथा समस्त वेद, आगम, पुराण, स्मृति आदि शास्त्रहरू जसमा लीन हुन्छन् तथा पुनः उत्पन्न हुन्छन् त्यो लिङ्गनै केवल ब्रह्म हो ॥३३॥

**चिदानन्दमयः साक्षच्छिव एव निरञ्जनः।**
**लिङ्गमित्युच्यते नान्यद् यतः स्याद्विश्वसंभवः।।३४।।**



**भावार्थ** : चित्, आनन्दस्वरूप निरञ्जन अर्थात् निष्कलङ्क शिवनै साक्षात् लिङ्ग कहिन्छन् इनीबाटै समस्त विश्वको उत्पत्ति हुन्छ ॥३४॥

**बहुनात्र किमुक्तेन लिङ्गमित्युच्यते बुधैः।।३५।।**
**शिवाभिदं परं ब्रह्म चिद्रूपं जगदास्पदम्।।३५।।**

**भावार्थ** : यस विषयमा धेरै भन्नाले के लाभ? शिवनाम परब्रह्म, जो चिद्रूप तथा संसारका आधार हुनुहुन्छ । विद्वान् हरुले उनीलाई लिङ्गशब्दले सम्बोधन गरेको छ ॥३५॥

**वेदान्तवाक्यजां विद्यां लिङ्गमाहुस्तथापरे।**
**तदसज्ज्ञेयरूपत्वाल्लिङ्गस्य ब्रह्मरूपिणः।।३६।।**

**भावार्थ** : जो जन तत्त्वमसि, अहं ब्रह्मास्मि, अयमात्मा ब्रह्म, प्रज्ञानं ब्रह्म, यी चार वेदान्तका महावाक्यहरूबाट उत्पन्नज्ञानलाई लिङ्ग भन्दछन् तिनीहरूको कथन असङ्गत छ, किन कि ब्रह्मरूपी लिङ्ग ज्ञेय छ एवं उनिहरूले प्रतिपादन गरेको ब्रह्म अवाङ्मनसगोचर (वाणी र मन द्वारा जान्न न सकिने) हुन्छ ॥३६॥

**अव्यक्तं लिङ्गमित्याहुर्जगतां मूलकारणम्।**
**लिङ्गी महेश्वरश्चेति मतमेतदसङ्गतम्।।३७।।**

**भावार्थ** : कुनै विद्वान्हरू संसारको मूलकारण अव्यक्ततत्त्वलाई लिङ्गभन्दछन् तथा महेश्वरलाई लिङ्गी । यो मत पनि असङ्गत छ अर्थात् ठीक छैन किन कि प्रकृति जड़ हो त्यसै कारणले हेय हो जब कि शैवमतमा परमेश्वरको शक्ति चेतन हो ॥३७॥

**न सूर्यो भाति तत्रेन्दुर्न विद्युन्न च पावकः।**
**न तारका महालिङ्गे द्योतमाने परात्मनि।।३८।।**

**भावार्थ** : जब त्यो परमात्मा महालिङ्ग प्रकाशमान हुन्छ त्यस बेला न सूर्य प्रकाशित हुन्छ, न चन्द्रमा, न विद्युत् न अग्नि न त ताराहरू नै प्रकाशमान हुन्छन् । उपनिषद्मा न तत्र सूर्यो भाति आदि मन्त्रमा यसको राम्रो वर्णन गरिएको छ (श्वे०उपनिषद् ६-१४) ॥३८॥

CC-0. Jangamwadi Math Digital Collection.

**ज्योतिर्मयं परं लिङ्गं श्रुतिराह शिवात्मकम्।**
**तस्य भासा सर्वमिदं प्रतिभाति न संशयः।।३९।।**

**भावार्थ** : श्रुति (वेद) ले शिवात्मक परलिङ्गलाई ज्योतिर्मय बताएको छ । त्यसैको प्रकाशले यो समस्त संसार देदीप्यमान भैरहेको छ । यसमा कुनै सन्देह छैन ।।३९।।

**विशेष**— अग्नि सूर्य र चन्द्रमा प्रमाता प्रमाण र प्रमेयरूप हुन् । यो त्रिपुटी महालिङ्गका अधीनमा रहेर प्रकाशित हुन्छ । यदि महालिङ्गलाई पनि वेदान्तजन्यज्ञानद्वारा प्रकाश्य मान्ने हो भने परप्रकाश्य हुनाका कारणले यो महालिङ्ग पनि घटादिको समान जड मानिने छ । अतः त्यो महालिङ्ग स्वप्रकाश अर्थात् स्वसंवेद्य हो ।

**लिङ्गान्नास्ति परं तत्त्वं यदस्माज्जायते जगत्।**
**यदेतद्रूपतां धत्ते यदत्र लयमश्नुते।।४०।।**

**भावार्थ** : लिङ्गभन्दा ठूलो कुनै तत्त्व छैन, किन कि यसैबाट संसार उत्पन्न हुन्छ । त्यसै लिङ्गमा संसार स्थित रहन्छ तथा त्यसैमा लीन पनि हुन्छ ।।४०।।

**तस्माल्लिङ्गं परं ब्रह्म सच्चिदानन्दलक्षणम्।**
**निजरूपमिति ध्यानात् तदवस्था प्रजायते।।४१।।**

**भावार्थ** : यस कारण सत् चित् आनन्दस्वरूप ब्रह्म नै परलिङ्ग हो । त्यही आफ्नो रूप हो । यस्तो ध्यान गर्नाले निजलिङ्गावस्था उत्पन्न हुन्छ ।।४१।।

**अंगलिंगस्थल - (३६)**

**ज्ञानमङ्गमिति प्राहुर्ज्ञेयं लिङ्गं सनातनम्।**
**विद्यते तद्द्वयं यस्य सोऽङ्गलिङ्गीति कीर्तितः।।४२।।**

**भावार्थ** : **अङ्गलिङ्गस्थलवर्णन**— विद्वान्हरूले ज्ञानलाई अङ्ग र ज्ञेयलाई सनातन लिङ्ग भन्दछन् । यी दुबैको ज्ञान जसमा हुन्छ ऊ अङ्गलिङ्गी कहलाउँछ ।।४२।।

**अङ्गे लिङ्गं समारूढं लिङ्गे चाङ्गमुपस्थितम्।**
**एतदस्ति द्वयं यस्य स भवेदङ्गलिङ्गवान्।।४३।।**



**भावार्थ** : अङ्गमा लिङ्ग आरूढ छ र त्यसैगर्न लिङ्गमा अङ्ग ओतप्रोत छ । बीजाङ्कुर न्यायले यी दुबै प्रकारको ज्ञान जसमा छ त्यो अङ्गलिङ्गवान् हुन्छ ।।४३।।

**ज्ञात्वा यः सततं लिङ्गं स्वान्तःस्थं ज्योतिरात्मकम्।**
**पूजयेद्भावयन्नित्यं तं विन्द्यादङ्गलिङ्गिनम्।।४४।।**

**भावार्थ** : जो मनुष्य आफुभित्र रहेका ज्योतिर्मय लिङ्गलाई शास्त्र गुरु तथा आफ्ना अनुभवले जानेर नित्य उसको पूजा भावना गर्छ उसलाई अङ्गलिङ्गी मान्नु पर्छ ।।४४।।

**ज्ञायते लिङ्गमेवैकं सर्वैः शास्त्रैः सनातनैः।**
**ब्रह्मेति विश्वधामेति विमुक्तेः पदमित्यपि।।४५।।**

**मुक्तिरूपमिदं लिङ्गमिति यस्य मनःस्थितिः।**
**स मुक्तो देहयोगेऽपि स ज्ञानी स महागुरुः।।४६।।**

**भावार्थ** : समस्त सनातन शास्त्रहरू एउटै लिङ्गलाई ब्रह्म, विश्वधाम तथा मुक्तिपदक रूपमा जान्दछन् अर्थात् वर्णन गर्छन्। "यो लिङ्ग मुक्तिस्वरूप हो" यो विचार जसले मनमा दृढ गर्छ त्यो देहले युक्त भएर पनि मुक्त अर्थात् जीवन्मुक्त मानिन्छ । त्यही ज्ञानी र महागुरु पनि हो ।।४५-४६।।

**अनादिनिधनं लिङ्गं कारणं जगतामिह।**
**ये न जानन्ति ते मूढा मोक्षमार्गबहिष्कृताः।।४७।।**

**भावार्थ** : आदि अन्त अर्थात् उत्पत्ति र विनाशबाट रहित लिङ्ग संसारको कारण हो यो ज्ञान जसलाई हुँदैन ती मूढ हुन् तथा मोक्षमार्गबाट बहिष्कृत हुन् ।।४७।।

**यः प्राणलिङ्गार्चनभावपूर्वै-**
**र्धर्मैरुपेतः शिवभावितात्मा।**
**स एव तुर्यः परिकीर्तितोऽसौ**
**संविद्विपाकाच्छरणाभिधानः।।४८।।**

CC-0. Jangamwadi Math Digital Collection.

**भावार्थ** : जो प्राणलिङ्गार्चनभावले पूर्णधर्महरूले युक्त छ तथा आत्मामा सर्वदा शिवको भावना गरिरहन्छ त्यसैलाई चौथो अवस्थामा प्राप्त भएको मानिन्छ। संवित् (शुद्धज्ञान) का परिपाकले त्यसलाई शरणस्थल पनि मानिन्छ ॥४८॥

*ॐ तत्सत् इति श्रीशिवगीतेषु सिद्धान्तागमेषु शिवाद्वैतविद्यायां शिवयोगशास्त्रे श्रीरेणुकागस्त्यसंवादे वीरशैवधर्मनिर्णये श्रीशिवयोगिशिवाचार्यविरचिते श्रीसिद्धान्तशिखामणौ प्राणलिङ्गीस्थले प्राणलिङ्गिस्थलादिपञ्चविध-स्थलप्रसङ्गो नाम द्वादशः परिच्छेदः।*

**यस प्रकार श्रीसिद्धान्तशिखामणिको प्राणलिङ्गी पञ्चस्थल प्रसङ्ग नामक द्वादशपरिच्छेदको आचार्य हरिप्रसादअधिकारी कृत सुबोधिनी नामक नेपाली व्याख्या पूर्णभयो।**

**।। द्वादशपरिच्छेद पूर्ण भयो ।।**



CC-0. Jangamwadi Math Digital Collection.

# तेरहवाँ परिच्छेद

### अंगस्थलांतर्गत

## शरणस्थल

अगस्त्य उवाच —

**माहेश्वरः प्रसादीति प्राणलिङ्गीति बोधितः।।१।।**
**कथमेष समादिष्टः पुनः शरणसंज्ञकः।।१।।**

**भावार्थ** : **शरणस्थलवर्णन**— अगस्त्यले भन्नु भयो— माहेश्वर प्रसादी र प्राणलिङ्गीको तपाँइले ज्ञान गराउनु भयो । पुनः यसैलाई शरणस्थली कसरी भनिन्छ? कृपापूर्वक बताउनुहोस् ॥१॥

रेणुक उवाच —

**अङ्गलिङ्गी ज्ञानरूपः सती ज्ञेयः शिवः पतिः।**
**यत्सौख्यं तत्समावेशे तद्वान् शरणनामवान्।।२।।**

**भावार्थ** : रेणुकाचार्यले भन्नु भयो— ज्ञानरूप अङ्गलिङ्गी सती हो। ज्ञेय शिव उनका पति हुन् । यस सती र पतिको सामरस्य अथवा यामल(जोडा) रूप जो सुख छ, त्यसको अनुभव गर्नेलाई शरणस्थल भनिन्छ ॥२॥

**स्थलमेतत्समाख्यातं चतुर्धा धर्मभेदतः।।३।।**
**आदौ शरणमाख्यातं ततस्तामसवर्जनम्।।३।।**

**ततो निर्देशमुद्दिष्टं शीलसम्पादनं ततः।।४।।**
**क्रमाल्लक्षणमेतेषां कथयामि निशम्यताम्।।४।।**

**भावार्थ** : धर्मका भेदले यो स्थल चारप्रकारको बताइएको छ । पहिलो शरणस्थल दोस्रो तामस निरसनस्थल तेस्रो निर्देशस्थल तथा चौथो शीलसम्पादनस्थल हुन्छ । अब म क्रमै सँग इनको लक्षण बताउँछु । सुन्नुहोस् ॥३-४॥



**शरणस्थल - (३७)**

**सतीव रमणे यस्तु शिवे शक्तिं विभावयन्।।५।।**
**तदन्यविमुखः सोऽयं ज्ञातः शरणनामवान्।।५।।**

**भावार्थ** : जस्ता प्रकारले सती (पतिव्रता)स्त्री आफ्ना रमण अर्थात् प्रियतम प्रति अनन्य भाव राख्दछे, त्यस्तै प्रकारले जो व्यक्ति शिवका विषयमा आफुलाई शरणागत मान्दै भावना गर्दछ तथा शिवेतर देवताहरूबाट विमुख हुन्छ त्यसलाई शरणवान् मानिएको छ ॥५॥

**परिज्ञाते शिवे साक्षात् को वाऽन्यमभिकाङ्क्षति।**
**निधाने महति प्राप्ते कः काचं याचतेऽन्यतः।।६।।**

**भावार्थ** : शिवको साक्षात् ज्ञान भए पछि कुन यस्तो जन होला जसले कुनै अर्काको इच्छा गर्ला? पर्याप्त धनराशि मिलिसकेपछि कसले अर्का सँग काँच अर्थात् सीसाको याचना गर्ला? ॥६॥

**शिवानन्दं समासाद्य को वाऽन्यमुपतिष्ठते।**
**गङ्गामृतं परित्यज्य कः काङ्क्षेन्मृगतृष्णिकाम्।।७।।**

**भावार्थ** : शिवानन्दप्राप्त गरेपछि कसले अरूदेवको उपासना गर्ला? गङ्गाजलरूपी अमृतलाई छोडेर कसले मृगमरीचिकाको इच्छा गर्ला? अर्थात् कसैले गर्दैन ॥७॥

**संसारतिमिरच्छेदे विना शङ्करभास्करम्।**
**प्रभवन्ति कथं देवाः खद्योता इव देहिनाम्।।८।।**

**भावार्थ** : जुन देवताहरू संसारी जीवहरूका लागि जुनकिरीका समान छन्, तिनीहरुले शङ्कररूपी सूर्यको सहारा न लिईकन कसरी संसाररूपी महाअन्धकार लाई मेटाउन सक्छन् ? ॥८॥

**संसारार्तः शिवं यायाद् ब्रह्माद्यैः किं फलं सुरैः।**
**चकोरस्तृषितः पश्येच्चन्द्रं किं तारका अपि।।९।।**

CC-0. Jangamwadi Math Digital Collection.

**भावार्थ** : त्यस कारणले संसारबाट पीडित भएका व्यक्तिले शिवको शरणमा जानु पर्दछ । ब्रह्मा आदि देवताहरूबाट कुनै फल मिलनेवाला छैन । तिर्खाएका चकोर (काकाकुल) पक्षीले चन्द्रमालाई हेर्छ न कि ताराहरू लाई ॥९॥

**शिव एव समस्तानां शरण्यः शरणार्थिनाम्।**
**संसाररोगदष्टानां सर्वज्ञः सर्वदोषहा।।१०।।**

**शिवज्ञाने समुत्पन्ने परानन्दः प्रकाशते।**
**तदासक्तमना योगी नान्यत्र रमते सुधीः।।११।।**

**भावार्थ** : संसाररूपी नागले डसिएका हुनाले विषमूर्च्छित समस्त शरणार्थिहरूका लागि एकमात्र शिव शरण हुनुहुन्छ । शिव सर्वज्ञ तथा सम्पूर्ण दोषहरूलाई नष्टगर्नेवाला हुनुहुन्छ । शिवज्ञान उत्पन्न भए पछि परानन्दको अनुभव हुन्छ । त्यसमा संसक्त चित्त भएको बुद्धिमान् योगीले अन्यत्र आनन्दको आस्वादन गर्न सक्दैन ॥१०-११॥

**तस्मात्सर्वप्रयत्नेन शङ्करं शरणं गतः।**
**तदनन्तसुखं प्राप्य मोदते नान्यचिन्तया।।१२।।**

**भावार्थ** : यसै कारण सम्पूर्ण प्रयत्न गरेर शङ्करको शरणमा परेको योगी त्यस अनन्तसुखलाई पाएर आनन्दमा निमग्न रहन्छ, न कि अन्य देवीदेवताहरूको ध्यानमा ॥१२॥

**तामसनिरसनस्थल - (३८)**

**शिवासक्तपरानन्दमोदिना गुरुणा यतः।**
**निरस्यन्ते तमोभावाः स तामसनिरासकः।।१३।।**

**भावार्थ** : **तामसनिरसनस्थल वर्णन**— शिवमा आसक्त अत एव परमानन्दद्वारा आनन्दित हुने जुन गुरुद्वारा समस्त तमोभाव निरस्त (समाप्त) गरिन्छन्, त्यस्ता गुरुलाई तामसनिरासक भनिन्छ ॥१३॥

**यस्य ज्ञानं तमोमिश्रं न तस्य गतिरिष्यते।**
**सत्त्वं हि ज्ञानयोगस्य नैर्मल्यं विदुरुत्तमाः।।१४।।**



**भावार्थ** : जसको ज्ञान तमोगुण मिश्रित हुन्छ त्यसको सद्गति हुँदैन । उत्तमपुरुषहरुले सत्त्वगुणलाई ज्ञानयोगका निर्मलताको कारण बताएका छन् ॥१४॥

**शमो दमो विवेकश्च वैराग्यं पूर्णभावना।**
**क्षान्तिः कारुण्यसम्पत्तिः श्रद्धा सत्यसमुद्भवा।।१५।।**

**शिवभक्तिः परो धर्मः शिवज्ञानस्य बान्धवाः।**
**एतैर्युक्तो महायोगी सात्त्विकः परिकीर्तितः।।१६।।**

**भावार्थ** : शम, दम, विवेक, वैराग्य, पूर्णभावना अर्थात् अखण्डज्ञान, क्षमा, करूणा, सत्यबाट उत्पन्न श्रद्धा, शिवभक्ति, परमधर्म अर्थात् उत्कृष्ट शैवाचार यी सबै शिवज्ञानका बन्धु अर्थात् सहायक हुन् । यी सबै विशेषताहरूले युक्त भएको योगी सात्त्विक कहलाउँछ ॥१५-१६॥

**कामक्रोधमहामोहमदमात्सर्यवारणाः ।**
**शिवज्ञानमृगेन्द्रस्य कथं तिष्ठन्ति सन्निधौ।।१७।।**

**भावार्थ** : काम, क्रोध, महामोह, महामद, मात्सर्यरूपी हात्तीहरूको समूह शिवज्ञानरूपी सिंहका सामुन्ने कसरी ठहर्न सक्ला? ॥१७॥

**यत्र कुत्रापि वा द्वेष्टि प्रपञ्चे शिवरूपिणि।**
**शिवद्वेषी स विज्ञेयो रजसाविष्टमानसः।।१८।।**

**भावार्थ** : शिवरूप प्रपञ्चमा जहाँ पनि जहिले पनि जसले पनि यदि कसैले द्वेष गर्छ भने त्यो रजोगुणले युक्तभएको शिवद्वेषी हो भन्ने ठान्नु पर्छ ॥१८॥

**यो द्वेष्टि सकलान् लोकान् यो वाऽहङ्कुरुते सदा।**
**योऽसत्यभावानायुक्तः स तामस इति स्मृतः।।१९।।**

**भावार्थ** : जो सबै सँग द्वेष गर्छ अथवा जो अहङ्कार युक्त रहन्छ तथा जो असत्यभावनाले युक्त हुन्छ त्यसलाई तामस मानिएको छ ॥१९॥

CC-0. Jangamwadi Math Digital Collection.

**तमोमूला हि सञ्जाता रागद्वेषादिपादपाः।**
**शिवज्ञानकुठारेण छेद्यन्ते हि निरन्तरम्।।२०।।**

**भावार्थ** : राग द्वेष आदिका वृक्ष तमोमूलक हुन्छन् अर्थात् यिनी तमोगुणात्मक कारणबाट उत्पन्न हुन्छन्। यिनलाई शिवज्ञानरूपी बञ्चराले काट्नु पर्दछ ॥२०॥

**शिवज्ञाने समुत्पन्ने सहस्रादित्यसन्निभे।**
**कुतस्तमोविकाराः स्युर्महतां शिवयोगिनाम्।।२१।।**

**भावार्थ** : सहस्रों सूर्यका समान शिवज्ञान उत्पन्न भएपछि महाशिवयोगीहरूका लागि तमोविकार अर्थात् तमोगुणको विकार (नराम्रो पन) कहाँबाट उत्पन्न हुन सक्छ? अर्थात् कदापि हुँन सक्दैन ॥२१॥

**निर्देशस्थल - (३९)**

**निराकृत्य तमोभागं संसारस्य प्रवर्तकम्।**
**निर्दिश्यते तु यज्ज्ञानं स निर्देश इति स्मृतः।।२२।।**

**भावार्थ** : **निर्देश स्थल वर्णन**— संसारको प्रवर्तक अर्थात् मूलकारणभूत तमोभागलाई हटाएर जो ज्ञान निर्दिष्ट हुन्छ त्यसलाई निर्देश भनिन्छ ॥२२॥

**गुरुरेव परं तत्त्वं प्रकाशयति देहिनाम्।**
**को वा सूर्यं विना लोके तमसो विनिवर्तकः।।२३।।**

**भावार्थ** : गुरुलेनै मनुष्यलाई परमतत्त्वको ज्ञानगराउँछन्। सूर्य बिना संसारमा अन्धकारलाई हटाउने को हुन सक्छ? ॥२३॥

**अन्तरेण गुरुं सिद्धं कथं संसारनिष्कृतिः।**
**निदानज्ञं विना वैद्यं किं वा रोगो निवर्तते।।२४।।**

**भावार्थ** : सिद्धगुरुबिना संसारको निवृत्ति कसरी हुन सक्छ? के विशेषज्ञवैद्य बिनै जटिल रोगको निवृत्ति हुन सक्छ? ॥२४॥

**अज्ञानमलिनं चित्तदर्पणं यो विशोधयेत्।**
**प्रज्ञाविभूतियोगेन तमाहुर्गुरुसत्तमम्।।२५।।**



**भावार्थ** : जसले प्रज्ञारूपी भस्म द्वारा अज्ञानले मलिन चित्तरूपी दर्पणलाई शुद्ध गर्छ, विद्वान् हरूले त्यसैलाई उत्तम गुरुभनेका छन् ॥२५॥

**अपरोक्षिततत्त्वस्य जीवन्मुक्तस्वभाविनः।**
**गुरोः कटाक्षे संसिद्धे को वा लोकेषु दुर्लभः।।२६।।**

**भावार्थ** : तत्त्वसाक्षात्कार गरेकाले स्वभावतः जीवन्मुक्त गुरुको कृपादृष्टि प्राप्तभै सके पछि लोकमा के दुर्लभ छ? ॥२६॥

**कैवल्यकल्पतरवो गुरवः करुणालयाः।**
**दुर्लभा हि जगत्यस्मिन् शिवाद्वैतपरायणाः।।२७।।**

**भावार्थ** : कैवल्यरूपी फल दिनका लागि कल्पवृक्षका समान, करुणाका सागर तथा शिवाद्वैत परायणगुरु यस संसारमा दुर्लभ छन् ॥२७॥

**क्षीराब्धिरिव सिन्धूनां सुमेरुरिव भूभृताम्।**
**ग्रहाणमिव तिग्मांशुर्मणीनामिव कौस्तुभः।।२८।।**

**द्रुमाणामिव भद्रश्रीर्देवानामिव शङ्करः।**
**गुरुः शिवः परः श्लाघ्यो गुरूणां प्राकृतात्मनाम्।।२९।।**

**भावार्थ** : जस्ताप्रकारले समुद्रहरूमा क्षीरसागर, पर्वतहरुमा सुमेरु, ग्रहहरूमा सूर्य, मणिहरूमा कौस्तुभ, वृक्षहरूमा चन्दन, तथा देवताहरूमा शङ्कर श्रेष्ठ र श्लाघनीय छन्। त्यस्तै प्रकारले प्राकृत गुरुहरूभन्दा शिवज्ञानी गुरु श्रेष्ठ र प्रशस्य हुन्छन् ॥२८-२९॥

**शीलसम्पादनस्थल - (४०)**

**जिज्ञासा शिवतत्त्वस्य शीलमित्युच्यते बुधैः।**
**निर्देश्ययोगादार्याणां तद्वान् शीलीति कथ्यते।।३०।।**

**भावार्थ** : **शीलसम्पादन स्थल वर्णन**— गुरुहरूद्वारा निर्देश्य अर्थात् उपदेश्य हुनाका कारणले विद्वान्हरू शिवतत्त्वको जिज्ञासालाई शील भन्दछन्। त्यो शील जसका साथमा रहन्छ त्यसलाई शीली भनिन्छ ॥३०॥

CC-0. Jangamwadi Math Digital Collection.

**प्रपन्नार्तिहरे देवे परमात्मनि शङ्करे।**
**भावस्य स्थिरतायोगः शीलमित्युच्यते बुधैः।।३१।।**

**भावार्थ** : शरणागतका कष्टलाई हटाउने देवाधिदेव परमात्मा शङ्करप्रति भावको स्थिरतालाई विद्वान्हरूले शील भन्दछन् ।।३१।।

**शीलं शिवैकविज्ञानं शिवध्यानैकतानता।**
**शिवप्राप्तिसमुत्कण्ठा तद्योगी शीलवान् स्मृतः।।३२।।**

**भावार्थ** : केवल शिवको ज्ञान, शिवको निरन्तर ध्यान र शिवको प्राप्तिका लागि उत्कण्ठा शील कहलाउँछ । त्यो शील जसका पासमा हुन्छ, त्यसलाई शीलवान् मानिन्छ ।।३२।।

**शिवादन्यत्र विज्ञाने वैमुख्यं यस्य सुस्थिरम्।**
**तदासक्तमनोवृत्तिस्तमाहुः शीलभाजनम्।।३३।।**

**भावार्थ** : शिवबाट भिन्न विज्ञानका विषयमा जसको पराङ्मुखता स्थिर छ तथा जसको मनोवृत्ति उस शिवमा आसक्त छ, त्यो शीलको पात्र अर्थात् शीलवान् हुन्छ ।।३३।।

**पतिव्रताया यच्छीलं पतिरागात् प्रशस्यते।**
**तथा शिवानुरागेण सुशीलोऽभक्त उच्यते।।३४।।**

**भावार्थ** : जस्तै पतिव्रताको शीलको प्रशंसा पति प्रति उसका रागात्मकभावनाका कारणले हुन्छ । त्यस्तै नै शिव प्रति अनुरागका कारणले शिवबाट अवियुक्त मनुष्य पनि सुशील कहलाउँछ ।।३४।।

**पतिं विना यथा स्त्रीणां सेवान्यस्य तु गर्हणा।**
**शिवं विना तथान्येषां सेवा निन्द्या कृतात्मनाम्।।३५।।**

**भावार्थ** : जस्ता प्रकारले स्त्रीहरुका लागि पतिभन्दा अलग पुरुषको सेवा निन्दनीय हुन्छ, त्यस्तै प्रकारले कृतकृत्य जनहरूका लागि शिवदेखि भिन्न देवताहरूको सेवा निन्दनीय हुन्छ ।।३५।।



**बहुनात्र किमुक्तेन शिवज्ञानैकनिष्ठता।**
**शीलमित्युच्यते सद्भिः शीलवांस्तत्परो मतः।।३६।।**

**भावार्थ** : यस विषयमा धेरै भन्नाले के लाभ? सज्जनहरूले शिवज्ञान प्रति एक निष्ठतालाई शील भनेका छन् र उसमा जो लागेको छ उसलाई शीलवान् भनिएको छ ।।३६।।

**शिवात्मबोधैकरतः स्थिराशयः**
**शिवं प्रपन्नो जगतामधीशम्।**
**शिवैकनिष्ठाहितशीलभूषणः**
**शिवैक्यवानेष हि कथ्यते बुधैः।।३७।।**

**भावार्थ** :केवल शिवबोधमा लागेको स्थिरभावनाले युक्त संसारका स्वामी शिवका शरणमा परेको केवल शिवमा निष्ठारूपी आभूषणलाई धारण गर्ने मनुष्यलाई विद्वान्हरूले शिवैक्यवान् नामले सम्बोधित गरेका छन् ।।३७।।

***ॐ तत्सत् इति श्रीशिवगीतेषु सिद्धान्तागमेषु शिवाद्वैतविद्यायां शिवयोगशास्त्रे श्रीरेणुकागस्त्यसंवादे वीरशैवधर्मनिर्णये श्रीशिवयोगिशिवाचार्यविरचिते श्रीसिद्धान्तशिखामणौ शरणस्थले शरणस्थलादिचतुर्विधस्थलप्रसङ्गो नाम त्रयोदशः परिच्छेदः।***

**यस प्रकार श्रीसिद्धान्तशिखामणिको शरणको चतुःस्थलप्रसङ्ग नामक त्रयोदश परिच्छेदको आचार्य हरिप्रसादअधिकारी कृत सुबोधिनी नामक नेपाली व्याख्या पूर्णभयो ।**

**।। त्रयोदशपरिच्छेद पूर्ण भयो ।।**

○○○

CC-0. Jangamwadi Math Digital Collection.

# चौधौं परिच्छेद

## अंगस्थलान्तर्गत
## ऐक्यस्थल

**अगस्त्य उवाच —**

**तामसत्यागसम्बन्धान्निर्देशाच्छीलतस्तथा।**
**शरणाख्यस्य भूयोऽस्य कथमैक्यनिरूपणम्।।१।।**

**भावार्थ** : **ऐक्यस्थल वर्णन**— अगस्त्यले भन्नु भयो— तामस गुणको त्याग ज्ञाननिर्देश तथा शीलसम्पादनद्वारा शरणनामक साधकको पुनः ऐक्य कसरी हुन्छ? ॥१॥

**श्रीरेणुक उवाच —**

**प्राणलिङ्गादियोगेन सुखातिशयमेयिवान्।**
**शरणाख्यः शिवेनैक्यभावनादैक्यवान् भवेत्।।२।।**

**भावार्थ** : श्री रेणुकाचार्यले भन्नु भयो - प्राणलिङ्गध्यानयोगद्वारा अतिशय सुखलाई प्राप्त गर्ने शरण नामक साधक शिवसँग ऐक्यभावनाले गर्दा 'ऐक्यवान्' हुन जान्छ ॥२॥

**विशेष** — लिङ्ग र आत्माको भेद संभव छैन किन कि दुवै चित्स्वरूप हुन्। दुवै चित्स्वरूप हुनाले दुइमा नितान्त पार्थक्य पनि छैन, किन कि त्यति खेर आफ्नु ज्ञान भएका बेला घट पट आदिको ज्ञान हुने छैन । यी दुवै नितान्त एक पनि हुन सक्दैनन्, एक भएमा शैव सिद्धान्तको व्याघात हुने छ । शैव सिद्धान्तका अनुसार शिव र जीवमा सेव्य-सेवक भाव हुनु पर्दछ। त्यसैले दुई बीचमा भेदको कल्पना गर्नु पर्दछ । यसद्वारा भेद भए पछि पनि फेरि ऐक्यभावना संभव छ ।

**ऐक्यस्थलमिदं प्रोक्तं चतुर्धा मुनिपुङ्गव।**
**ऐक्यमाचारसम्पत्तिरेकभाजनमेव च।।**
**सहभोजनमित्येषां क्रमाल्लक्षणमुच्यते।।३।।**



**भावार्थ** : हे मुनिश्रेष्ठ! यो ऐक्यस्थल चार प्रकारको बताइएको छ । ऐक्यस्थल, आचारसम्पत्ति स्थल, एक भाजन स्थल, र सह भोजन स्थल । अब क्रमैसँग इनको लक्षण बताइन्छ ॥३॥

**ऐक्यस्थल - (४१)**

**विषयानन्दकणिकानिःस्पृहो निर्मलाशयः।**
**शिवानन्दमहासिन्धुमज्जनादैक्यमुच्यते।।४।।**

**भावार्थ** : **ऐक्यस्थल वर्णन**— विषयानन्दका लेशमात्र पनि इच्छा न राख्ने, निस्पृह, निर्मल चित्त भएको साधक शिवानन्दमहासमुद्रमा मज्जन अर्थात् सामरस्य स्थापित गर्नेवाला ऐक्यस्थल कहलाउँछ ॥४॥

**निर्धूतमलसम्बन्धो निष्कलङ्कमनोगतः।**
**शिवोऽहमिति भावेन निरूढो हि शिवैक्यताम्।।५।।**

**भावार्थ** : मल(मैलो) लाई हटाएर त्यससँग असंबद्ध भएको निष्कलङ्क मन भएको, साधक ''शिवोऽहम्'' यस भावनाले भावित भएर शिवैक्यमा प्राप्त हुन्छ ॥५॥

**शिवेनैक्यं समापन्नश्चिदानन्दस्वरूपिणा।**
**न पश्यति जगज्जालं मायाकल्पितवैभवम्।।६।।**

**भावार्थ** : चित्आनन्द स्वरूप शिवसँग ऐक्यप्राप्त मनुष्यले मायारचित वैभवयुक्त संसार जाललाई देख्दैन ॥६॥

**ब्रह्माण्डबुद्बुदोद्भेदविजृम्भी तत्त्ववीचिमान्।**
**मायासिन्धुर्लयं याति शिवैक्यवडवानले।।७।।**

**भावार्थ** : ब्रह्माण्डरूपी बुद्बुद् (भुलभुल) का उद्भवरूपी बाढले युक्त, छत्तीस तत्त्व रूपी तरङ्गहरूले युक्त मायारूपी समुद्र शिवैक्यरूपी वाडवाग्निमा लीन हुन जान्छ ॥७॥

**मायाशक्तितिरोधानाच्छिवे भेदविकल्पना।**
**आत्मनस्तद्विनाशे तु नाद्वैतात्किञ्चिदिष्यते।।८।।**

CC-0. Jangamwadi Math Digital Collection.

**भावार्थ** : मायाशक्ति शिवमा तिरोधान भए पछि जीवको शिवसँग भेदभाव हुन्छ । त्यो भेदभाव नष्ट भए पछि अद्वैत भन्दा अतिरिक्त केही अवशिष्ट रहँदैन ॥८॥

**पशुत्वं च पतित्वं च मायामोहविकल्पितम्।**
**तस्मिन् प्रलयमापन्ने कः पशुः को नु वा पतिः।।९।।**

**भावार्थ** : पशुभाव र पतिभाव यी दुवै मायामोहका विकल्प हुन् । त्यस मायामोहको प्रलय (नाश) भए पछि कुन पशु तथा कुन पति भनेर छुट्याउन सकिदैन ॥९॥

**घोरसंसारसर्पस्य भेदवल्मीकशायिनः।**
**बाधकं परमाद्वैतभावना परमौषधम्।।१०।।**

**भावार्थ** : यो परमाद्वैत भावना भेदरूपी बिलमा सुतेका अथवा सुत्ने भयङ्कर संसाररूपी सर्पको बाधक परमौषधि हो । उक्त भेद पाँचप्रकारको बताइएको छ - जड-अजड भेद, जीव-अजीव भेद, जीव-जड भेद, जीव-ईश्वर भेद र जड-ईश्वर भेद ॥१०॥

**भेदबुद्धिसमुत्पन्नमहासंसारसागरम् ।**
**अद्वैतबुद्धिपोतेन समुत्तरति देशिकः।।११।।**

**भावार्थ** : आचार्य अथवा शिवलिङ्गचैक्य भावना भएको व्यक्ति भेदबुद्धिले उत्पन्न महासंसार सागरलाई अद्वैतबुद्धिरूपी जहाजद्वारा पार गर्दछ ॥११॥

**अज्ञानतिमिरोद्रिक्ता कामरक्षःक्रियाकरी।**
**संसारकालरात्रिस्तु नश्येदद्वैतभानुना।।१२।।**

**तस्माददैतभावस्य सदृशो नास्ति योगिनाम्।**
**उपायो घोरसंसारमहातापनिवृत्तये।।१३।।**

**भावार्थ** : अज्ञानरूपी अन्धकारले भरिएको कामरूपी राक्षसी कृत्य गर्ने संसाररूपी कालरात्रि शिवाद्वैतरूपी सूर्यद्वारा नष्ट हुन्छ । यस कारण योगीहरूका लागि घोर संसाररूपी महातापलाई नाश गर्न अद्वैतभाव का समान अर्को कुनै उपाय छैन ॥१२-१३॥



**अद्वैतभावनाजातं क्षणमात्रेऽपि यत्सुखम्।**
**तत्सुखं कोटिवर्षेण प्राप्यते नैव भोगिभिः।।१४।।**

**चित्तवृत्तिसमालीनजगतः शिवयोगिनः।**
**शिवानन्दपरिस्फूर्तिर्मुक्तिरित्यभिधीयते।।१५।।**

**भावार्थ** : अद्वैतभावनाबाट उत्पन्न एक क्षण मात्रको जो सुख हुन्छ, त्यो सुख भोगीहरूले करोडौं वर्षमा पनि प्राप्त गर्न सक्दैनन् । जसले संसारलाई आफ्ना चित्तवृत्तिमा लीन गरिसकेको छ यस्ता शिवयोगीको शिवानन्द परिस्फूर्ति नै मुक्ति कहलाउँछ ॥१४-१५॥

### आचारसंपत्तिस्थल - (४२)

**शिवैकभावनापन्नशिवत्वे देहवानपि।**
**देशिको हि न लिप्येत स्वाचारैः सूतकादिभिः।।१६।।**

**भावार्थ** : **आचार सम्पत्ति स्थल वर्णन**— 'शिवनै एक मात्र सत्य हुनुहुन्छ' यस्ता भावनाले युक्त शिवतत्त्ववाला आचार्य शरीरधारी भएर पनि सूतक आदि आफ्ना सम्प्रदाय र समाजका आचार-विचारबाट लिप्त अर्थात् दूषित हुँदैन ॥१६॥

**शिवाद्वैतपरिज्ञाने स्थिते सति मनस्विनाम्।**
**कर्मणा किं नु भाव्यं स्यादकृतेन कृतेन वा।।१७।।**

**भावार्थ** : शिवाद्वैतको परिज्ञान भए पछि मनस्वी हरूका अर्थात् शिवलिङ्गीहरूका सत्कर्म (राम्रो कर्म) अथवा असत्कर्म (नराम्रो कर्म) को कुनै फल हुँदैन ॥१७॥

**शम्भोरेकत्वभावेन सर्वत्र समदर्शनः।**
**कुर्वन्नपि महाकर्म न तत्फलमवाप्नुयात्।।१८।।**

CC-0. Jangamwadi Math Digital Collection.

**भावार्थ** : जीवात्मा र शिवका एकत्वभावनाले सर्वत्र एकदृष्टि अथवा तुल्यदृष्टि भएको व्यक्ति ठूला ठूला सत्कर्म अथवा असत्कर्म गरेर पनि त्यसकर्मका फलको भागी हुँदैन, अर्थात् कर्मफलले उसलाई बाँध्न सक्दैन । श्रीमद्भगवद्गीतामा पनि **यस्य नाहं कृतो भावो बुद्धिर्यस्य न लिप्यते.....** इत्यादि श्लोकमा यस्तै विचार वर्णित छ ॥१८॥

**सुकृती दुःष्कृती वापि**
**ब्राह्मणो वान्त्यजोऽपि वा।**
**शिवैकभावयुक्तानां**
**सदृशो भवति ध्रुवम्।।१९।।**

**भावार्थ** : पुण्य गर्नेवाला अथवा पापी ब्राह्मणहोस् अथवा चाण्डालहोस् शिवैक्यभावले युक्त भएका योगिहरूका लागि निश्चितरूपले यी सबै समान हुन्छन् ॥१९॥

**वर्णाश्रमसदाचारैर्ज्ञानिनां किं प्रयोजनम्।**
**लौकिकस्तु सदाचारः फलाभावेऽपि भाव्यते।।२०।।**

**भावार्थ** : शिवज्ञानिहरूका लागि लौकिकवर्णाश्रमसम्बन्धी सदाचार सँग के प्रयोजन? नित्य नैमित्यिक आदि लौकिक सदाचार फल दिन असमर्थ भए पनि उनिहरू (ज्ञानिहरू) द्वारा पालन गरियेकै हुन्छन् ॥२०॥

**निर्दग्धकर्मबीजस्य निर्मलज्ञानवह्निना।**
**देहिवद्भासमानस्य देहयात्रा तु लौकिकी।।२१।।**

**भावार्थ** : निर्मल ज्ञानरूपी अग्निद्वारा जसको कर्मबीज दग्ध भैसकेको छ, देही का समान प्रतीत हुने यस्ता शरीरधारीहरूको देहयात्रा (आहार निद्रा आदि) लौकिकरूपमा अन्य व्यक्तिहरू जस्तै हुन्छ अर्थात् देखिन्छ तर त्यसदेहयात्राबाट फल र संस्कारको निर्माण हुँदैन ॥२१॥

**शिवज्ञानसमापन्नस्थिरवैराग्यलक्षणः।**
**स्वकर्मणा न लिप्येत पद्मपत्रमिवाम्भसा।।२२।।**



**भावार्थ** : शिवज्ञानले युक्त स्थिर वैराग्ययुक्तसाधक आफ्ना कर्मले त्यस्तै प्रकारले लिप्त हुँदैन जस्ता प्रकारले पानीमा रहेर पनि कमलको पात उसबाट पृथक् नै रहन्छ ॥२२॥

**गच्छंस्तिष्ठन् स्वपन् वापि जाग्रन् वापि महामतिः।**
**शिवज्ञानसमायोगाच्छिवपूजापरः सदा।।२३।।**

**भावार्थ** : महामतिमान् शिवयोगी हिड्दै, उभिदै, सुत्दै अथवा जाग्दै रहेर पनि शिवज्ञान सँग अविच्छिन्नरूपले सम्बद्ध हुनाका कारणले सदा शिव पूजा गरिरहेकै हुन्छ ॥२३॥

**यद्यत्पश्यति सामोदं वस्तु लोकेषु देशिकः।**
**शिवदर्शनसम्पत्तिस्तत्र तत्र महात्मनः।।२४।।**

**भावार्थ** : शिवलिङ्गैक्य आचार्यले परमानन्दमा निमग्न हुँदै यस संसारमा जुन जुन वस्तुलाई हेर्छ, त्यस महात्मालाई ती ती वस्तुमा शिवकै प्रतीति हुन्छ ॥२४॥

**यद्यद्धिह्वान्तयते योगी मनसा शुद्धभावनः।**
**तत्तच्छिवमयत्वेन शिवध्यानमुदाहृतम्।।२५।।**

**भावार्थ** : शुद्धभावना भएका योगीले मनले जुन जुन वस्तुको ध्यान गर्दछ, ती सबै वस्तु शिवमय देखिने हुनाले यो पनि शिवध्यान कहलाउँछ ॥२५॥

**यत्किञ्चिद्भाषितं लोके स्वेच्छया शिवयोगिना।**
**शिवस्तोत्रमिदं सर्वं यस्मात् सर्वात्मकः शिवः।।२६।।**

**भावार्थ** : शिवयोगीले स्वेच्छाले जे पनि उच्चारण गर्छ त्यो सबै शिवस्तोत्र हुन जान्छ किनकि उसका दृष्टिमा शिव सर्वत्र विद्यमान हुनुहुन्छ ॥२६॥

**या या चेष्टा समुत्पन्ना जायते शिवयोगिनाम्।**
**सा सा पूजा महेशस्य सर्वदा तद्गतात्मनाम्।।२७।।**

CC-0. Jangamwadi Math Digital Collection.

**भावार्थ** : शिवयोगीका शरीरमा जे जे चेष्टाहरू उत्पन्न हुन्छन्, शिवमय आत्मा भएका त्यस योगीका लागि ती सबै चेष्टाहरू सदाशिवको पूजन समान हुन्छन् ॥२७॥

**एकभाजनस्थल - (४३)**

**विश्वं शिवमयं चेति सदा भावयतो धिया।**
**शिवैकभाजनात्मत्वादेकभाजनमुच्यते ॥२८॥**

**भावार्थ** : **एक भाजन स्थलवर्णन**— यो विश्व शिवमय हो यस्तो भावना गर्नु नै शिवैकभाजनात्मक हुने हुनाले त्यो जन 'एकभाजन' कहलाउँछ ॥२८॥

**स्वस्य सर्वस्य लोकस्य शिवस्याद्वैतदर्शनात्।**
**एकभाजनयोगेन प्रसादैक्यमतिर्भवेत्॥२९॥**

**भावार्थ** : आफुलाई, समस्त संसारलाई तथा शिवलाई एक मान्नाले एकपात्रता हुन्छ, एकपात्रतापश्चात् अद्वैतविषयिणी बुद्धि उत्पन्न हुन्छ, त्यसरी चरमूर्ति अर्था् लिङ्गचैक्यको पादोदक शिवलिङ्गलाई स्नान गरायेको जल यी दुबै समानरूपेण ग्रहण गर्ने योग्य हुन्छन् ॥२९॥

**शिवे विश्वमिदं सर्वं शिवः सर्वत्र भासते।**
**आधाराधेयभावेन शिवस्य जगतः स्थितिः॥३०॥**

**भावार्थ** : यो समस्त विश्व शिवमा स्थित छ, तथा शिव सर्वत्र प्रकाशमान भैरहेका छन्, यस प्रकारले शिव र संसारको आधार र आधेय सम्बन्धले स्थिति छ। अर्थात् शिव र संसार दुवै एकसाथ एकअर्काका आधार र आधेय हुन् ॥३०॥

**चित्तैकभाजनं यस्य चित्तवृत्तेः शिवात्मकम्।**
**नान्यत्तस्य किमेतेन मायामूलेन वस्तुना॥३१॥**

**भावार्थ** : जसको चित्तवृत्ति शिवात्मक र मात्र चैतन्य विषयवाला छ, कुनै अर्का विषयको त्यसमा लेश पनि छैन, त्यस्ता व्यक्तिलाई मायामूलक वस्तुहरू सँग के प्रयोजन ?॥३१॥



**चित् प्रकाशयते विश्वं तद्विना नास्ति वस्तु हि।**
**चिदेकनिष्ठचित्तानां किं मायापरिकल्पितैः॥३२॥**

**भावार्थ** : चित् तत्त्वले घडा आदिद्वारा उपलक्षित(निर्दिष्ट) समस्त प्रपञ्चमय विश्वलाई प्रकाशित गर्दछ। ऊ देखी अलग कुनै वस्तु छँदै छैन। जसको चित्त केवल एकमात्र चित्मा लागेको छ उसका लागि मायापरिकल्पित वस्तुहरूबाट के प्रयोजन ? ॥३२॥

**वृत्तिशून्ये स्वहृदये शिवलीने निराकुले।**
**यः सदा वर्तते योगी स मुक्तो नात्र संशयः॥३३॥**

**भावार्थ** : जो योगी सर्वदा वृत्तिशून्य शिवमा लीन हुनाले निराकुल शान्त तथा आफ्ना हृदयमा ध्यानस्थ रहन्छ, त्यो मुक्त मानिन्छ। यसमा कुनै सन्देह छैन ॥३३॥

**सहभोजनस्थल - (४४)**

**गुरोः शिवस्य शिष्यस्य स्वस्वरूपतया स्मृतिः।**
**सहभोजनमाख्यातं सर्वग्रासात्मभावतः॥३४॥**

**भावार्थ** : **सहभोजनस्थल वर्णन**— गुरु शिष्य र शिवलाई आफ्नै स्वरूप मानेर स्मरण गर्नु सर्वग्रासात्मभावका कारणले "सहभोजन" कहलाउँछ ॥३४॥

**शिवं विश्वं गुरुं साक्षाद्योजयेन्नित्यमात्मनि।**
**एकत्वेन चिदाकारे तदिदं सहभोजनम्॥३५॥**

**भावार्थ** : शिव विश्व र गुरुलाई प्रतिदिन साक्षात्चिदाकार आत्मामा एकरूपले संयोजित (जोड्ने) गर्नेवाला सहभोजन कहलाउँछ। अर्थात् शिव गुरु र विश्वको आफ्ना स्वरूप सँग अभिन्नरूपमा परामर्श गर्नु नै सहभोजनको तात्पर्य हो ॥३५॥

**अयं शिवो गुरुश्चैव जगदेतच्चराचरम्।**
**अहं चेति मतिर्यस्य नास्त्यसौ विश्वभोजकः॥३६॥**

CC-0. Jangamwadi Math Digital Collection.

**भावार्थ** : यी शिव हुन् यी गुरु हुन्, यो चराचर जगत् हो तथा म यो हूँ जसमा यस प्रकारको भेदबुद्धि हुन्छ त्यो विश्वभोजक हुँदैन ॥३६॥

**अहं भृत्यः शिवः स्वामी शिष्योऽहं गुरुरेव वै।**
**इति यस्य मतिर्नास्ति स चाद्वैतपदे स्थितः॥३७॥**

**भावार्थ** : म सेवक हूँ तथा शिव स्वामी हुनुहुन्छ, म शिष्य हूँ तथा यहाँ गुरु हुनुहुन्छ, जसमा यस प्रकारको भेदबुद्धि हुँदैन त्यो व्यक्ति अद्वैतपदमा प्रतिष्ठित हुन्छ ॥३७॥

**पराहन्तामये स्वात्मपावके विश्वभास्वति।**
**इदन्ताहव्यहोमेन विश्वहोमीति कथ्यते॥३८॥**

**भावार्थ** : विश्वलाई आभासित गर्ने पर अहन्तारूपी आत्माग्निमा इदन्तारूपी हव्यको हवन गर्ने व्यक्ति विश्वहोत्री कहिन्छ ॥३८॥

**अहं शिवो गुरुश्चाहमहं विश्वं चराचरम्।**
**यया विज्ञायते सम्यक् पूर्णाहन्तेति सा स्मृता॥३९॥**

**भावार्थ** : म नै शिव हूँ, म नै गुरु हूँ, म नै चर-अचर विश्व हूँ, जुन स्मृति द्वारा यस प्रकारको अनुभव हुन्छ त्यस स्मृतिलाई पूर्णाहन्ता मानिएको छ ॥३९॥

**विशेष**— यो संसार अकार देखि क्षकार सम्म पर्ने ५० वर्णहरूका विकासको फल हो । साधनाद्वारा यसलाई (उक्तवर्णसमूहलाई) अ ह यी दुई वर्णमा प्रत्याहूत गरेर (खिचेर) त्यस पछि यी दुई अक्षरलाई पनि बिन्दुका रूपमा प्रत्याहरण गरिन्छ । यो बिन्दु अकार र हकारको सूक्ष्मतम रूप हो । यसमा मपूराण्डरसन्यायले सम्पूर्ण विश्व लुकेको हुन्छ । यही पूर्ण अहंभाव हो । जसमा समस्त जगत् सूक्ष्मरूपले प्रतिबिम्बित भैरहन्छ ।

**आधारवह्नौ चिद्रूपे भेदजातं जगद्धविः।**
**जुहोति ज्ञानयज्वा यः स ज्ञेयो विश्वहव्यभुक्॥४०॥**



**भावार्थ** : जुन ज्ञानयोगको कर्ता चिद्रूपी आधारवह्नि आज्ञाचक्रमा स्थित तेजमा भेदसमूहले युक्त भएका जगत्रूपी हविको हवन गर्छ उसलाई विश्वहव्यभुक् मात्र पर्दछ ॥४०॥

**चिदाकारे पराकाशे परमानन्दभास्वति।**
**विलीनचित्तवृत्तीनां का वा विश्वक्रमस्थितिः॥४१॥**

**भावार्थ** : परमानन्दरूपी सूर्ययुक्त चित्स्वरूप पराकाशमा जसका चित्तवृत्तिहरू विलीन भएका हुन्छन् उसका लागि विश्वक्रम अर्थात् विश्वव्यवहारको स्थिति कसरी हुन सक्छ? ॥४१॥

**निरस्तविश्वसम्बाधे निष्कलङ्के चिदम्बरे।**
**भावयेल्लीनमात्मानं सामरस्यस्वभावतः॥४२॥**

**सैषा विद्या परा ज्ञेया सत्तानन्दप्रकाशिनी।**
**मुक्तिरित्युच्यते सद्भिर्जगन्मोहनिवर्तिनी॥४३॥**

**भावार्थ** : विश्वको बाधा अर्थात् जन्म मृत्युआदिको बन्धन जहाँ हटि सकेको हुन्छ, यस्ता निष्कलङ्क चिदाकाशमा आफुलाई सामरस्यस्वभावले लीन मात्र पर्छ । सज्जन अर्थात् विद्वान्हरूले यस स्थितिलाई जगत्को मोह हटाउने मुक्ति हो भनि प्रतिपादित गरेका छन् ॥४२-४३॥

**भक्तादिधामार्पितधर्मयोगात्**
**प्राप्तैकभावः परमाद्भुतेन।**
**शिवेन चिद्व्योममयेन साक्षान्**
**मोक्षश्रियो भाजनतामुपैति॥४४॥**

**भावार्थ** : भक्त आदि स्थलका लागि समर्पित धर्मयोगका कारणले चिदाकाशमय परमअद्भुत शिवलिङ्ग संग ऐक्य प्राप्त 'ऐक्यस्थली' व्यक्ति साक्षात् मोक्षको पात्र हुन्छ ॥४४॥

***ॐ तत्सत् इति श्रीशिवगीतेषु सिद्धान्तागमेषु शिवाद्वैतविद्यायां शिवयोगशास्त्रे श्रीरेणुकागस्त्य संवादे वीरशैवधर्मनिर्णये***

CC-0. Jangamwadi Math Digital Collection.

*श्रीशिवयोगिशिवाचार्यविरचिते श्रीसिद्धान्तशिखामणौ*
*ऐक्यस्थले ऐक्यस्थलादिचतुर्विधस्थलप्रसङ्गो*
*नाम चतुर्दशः परिच्छेदः।*

**यस प्रकार श्रीसिद्धान्तशिखामणिको शिवलिङ्गैक्य सम्बन्धी**
**चतुर्विधस्थलप्रसङ्ग नामक चतुर्दश परिच्छेदको**
**आचार्य हरिप्रसादअधिकारी कृत सुबोधिनी**
**नामक नेपाली व्याख्या पूर्णभयो ।**
**।। चतुर्दशपरिच्छेद पूर्ण भयो ।।**

❍❍❍

CC-0. Jangamwadi Math Digital Collection.

# पञ्चदशः परिच्छेदः

## लिंगस्थलांतर्गत

## भक्तस्थल

**श्रीरेणुक उवाच—**

**षट्स्थलोक्तसदाचारसम्पन्नस्य यथाक्रमम्।**
**लिङ्गस्थलानि कथ्यन्ते जीवन्मुक्तिपराणि च।।१।।**

**भावार्थ** : **लिङ्गस्थलवर्णन**— श्री रेणुकाचार्यले भन्नु भयो— छ स्थानमा वर्णित सदाचार सम्पन्न साधकका जीवनमुक्तिपरक लिङ्गस्थलहरूको क्रमै सँग वर्णन गरिन्छ ।।१।।

**अगस्त्य उवाच—**

**भक्ताद्यैक्यावसानानि षडुक्तानि स्थलानि च।**
**लिङ्गस्थलानि कानीह कथ्यन्ते कति वा पुनः।।२।।**

**भावार्थ** : अगस्त्यले भन्नु भयो— भक्तस्थल देखि लिएर ऐक्यस्थल सम्म छ स्थल बताइएका छन् । अब लिङ्गस्थल कुन कुन हुन् र कति छन् यसको वर्णन् गर्नुहोस् ।।२।।

**गुर्वादिज्ञानशून्यान्ता भक्तादिस्थलसंश्रिताः।**
**स्थलभेदाः प्रकीर्त्यन्ते पञ्चाशत् सप्त चाधुना।।३।।**

**भावार्थ** : श्री रेणुकाचार्यले भन्नु भयो - भक्त आदि छ स्थलहरूमा आधारित दीक्षागुरु स्थल देखि लिएर ज्ञानशून्यता सम्म सन्ताउन्न स्थलभेदहरूको वर्णन यस प्रकार छ ।।३।।

**आदौ नवस्थलानीह भक्तस्थलसमाश्रयात्।**
**कथ्यन्ते गुणसारेण नामान्येषां पृथक् शृणु।।४।।**



**भावार्थ** : भक्तस्थलका आधारमा प्रथमतः यहाँ नवस्थल (नौ स्थल) को वर्णन उनका गुण अनुसार गरिन्छ । तिनका अलग अलग नामहरूको श्रवण गर ।।४।।

**दीक्षागुरुस्थलं पूर्वं ततः शिक्षागुरुस्थलम्।**
**प्रज्ञागुरुस्थलं चाथ क्रियालिङ्गस्थलं ततः।।५।।**

**भावलिङ्गस्थलं चाथ ज्ञानलिङ्गस्थलं ततः।**
**स्वयं चरं परं चेति तेषां लक्षणमुच्यते।।६।।**

**भावार्थ** : पहिले दीक्षागुरुस्थल त्यस पछि शिक्षागुरुस्थल, पुनः प्रज्ञागुरुस्थल त्यस पछि क्रियालिङ्गस्थल पुनः भावलिङ्गस्थल त्यस पछि ज्ञानलिङ्गस्थल, स्वयं स्थल, पर स्थल, र चरस्थल यी नौ स्थल हुन्छन् । अब क्रमशः इनको लक्षण बताइन्छ ।।५-६।।

### दीक्षागुरुस्थल - (४५)

**दीयते परमं ज्ञानं क्षीयते पाशबन्धनम्।**
**यया दीक्षेति सा तस्यां गुरुर्दीक्षागुरुः स्मृतः।।७।।**

**भावार्थ** : **दीक्षागुरुस्थल वर्णन**— जसद्वारा परमज्ञान दिइन्छ र पाशबन्धनको नाश गरिन्छ, त्यसलाई दीक्षा भनिन्छ । त्यस्तो दीक्षा प्रदान गर्ने गुरुलाई दीक्षागुरु भनिन्छ ।।७।।

**गुणातीतं गुकारं च रूपातीतं रुकारकम्।**
**गुणातीतमरूपं च यो दद्यात् स गुरुः स्मृतः।।८।।**

**भावार्थ** : 'गु' को अर्थ हो गुणातीत तथा 'रु' को अर्थ हो रूपातीत। जसले गुणभन्दा पर अर्थात् निर्गुण र रूपरहित तत्त्व प्रदान गर्दछ अर्थात् त्यसको ज्ञान गराउँछ, उसलाई गुरु भनिएको छ ।।८।।

**आचिनोति च शास्त्रार्थानाचारे स्थापयत्यलम्।**
**स्वयमाचरते यस्मादाचार्यस्तेन चोच्यते।।९।।**

CC-0. Jangamwadi Math Digital Collection.

**भावार्थ** : जसले शास्त्रहरूका तात्पर्यको संचयन गर्छ तथा आफ्ना शिष्यहरूलाई त्यसको बोध गराउँछ एवं उसको आचरण पनि गर्छ उसलाई आचार्य भनिन्छ ।।९।।

**षडध्वातीतयोगेन यतते यस्तु देशिकः।**
**मायाब्धितारणोपायहेतुर्विश्वगुरुः शिवः।।१०।।**

**भावार्थ** : जुन आचार्यले षडध्वा (छ मार्ग) भन्दा अगाडी बढेर योगसिद्धिका लागि प्रयत्न गर्छ त्यो 'देशिक' कहलाउँछ । मायारूपी समुद्रबाट पार गराउने उपाय बताउनेवाला विश्वगुरु हो, त्यही शिव पनि हो ।।१०।।

**अखण्डं येन चैतन्यं व्यज्यते सर्ववस्तुषु।**
**आत्मयोगप्रभावेण स गुरुर्विश्वभासकः।।११।।**

**भावार्थ** : जसद्वारा आफ्ना योगका प्रभावले सबै वस्तुहरूमा अखण्डचैतन्यको अभिव्यक्ति गरिन्छ त्यस्तो गुरु विश्वको प्रकाशक हुन्छ ।।११।।

**शिक्षागुरुस्थल - (४६)**

**दीक्षागुरुरसौ शिक्षाहेतुः शिष्यस्य बोधकः।**
**प्रश्नोत्तरप्रवक्ता च शिक्षागुरुरितीर्यते।।१२।।**

**भावार्थ** : **शिक्षागुरुस्थलवर्णन**— यो दीक्षागुरु नै शिष्यलाई ज्ञानगराउने हुनाले उसको शिक्षागुरु पनि हुन्छ । जसले शिष्यद्वारा गरिएका जिज्ञासा अर्थात् प्रश्नहरूको समाधान गर्दछ, उसलाई शिक्षागुरु भनिन्छ ।।१२।।

**बोधकोऽयं समाख्यातो बोध्यमेतदिति स्फुटम्।**
**शिष्यो नियुज्यते येन स शिक्षागुरुरुच्यते।।१३।।**

**भावार्थ** : यी गुरु शिवसिद्धान्तका बोधक अर्थात् परतत्त्वको प्रकाशक बताइएका छन् । यो अर्थात् शिवयोग बोध्य (जानने लायक) छ । जसले शिष्यमा यसज्ञानलाई नियुक्त अर्थात् स्थापित गर्दछ, उसलाई दीक्षागुरु भनिन्छ ।।१३।।

**संसारतिमिरोन्माथिशरच्चन्द्रमरीचयः ।**
**वाचो यस्य प्रवर्तन्ते तमाचार्यं प्रचक्षते।।१४।।**



**भावार्थ** : संसाररूपी अन्धकारलाई नाश गर्नका लागि उसको वाणी शरत्कालीन चन्द्रमाका समान कार्य गर्न समर्थ छ, विद्वान्हरूले उनलाई आचार्यनामले पुकार्दछन् ।।१४।।

**ददाति यः पतिज्ञानं जगन्मायानिवर्तकम्।**
**अद्वैतवासनोपायं तमाचार्यवरं विदुः।।१५।।**

**भावार्थ** : जसले संसाररूपी मायालाई टाढा हटाउन सक्ने पतिज्ञान प्रदान गर्दछ । अद्वैतभावनाका उपायभूत त्यस्ता मनुष्यलाई आचार्य मानिएको छ ।।१५।।

**पूर्वपक्षं समादाय जगद्भेदविकल्पनम्।**
**अद्वैतकृतसिद्धान्तो गुरुरेष गुणाधिकः।।१६।।**

**भावार्थ** : जगद्विषयक भेदको विकल्पनाई पूर्वपक्षकारूपमा स्वीकार गरेर जो सिद्धान्तपक्षका रूपमा जसले अद्वैतवादलाई स्थापित गर्दछ त्यो गुरु गुणाधिक अर्थात् श्रेष्ठ हुन्छ ।।१६।।

**सन्देहवनसन्दोहसमुच्छेदकुठारिका ।**
**यत्सूक्तिधारा विमला स गुरूणां शिखामणिः।।१७।।**

**भावार्थ** : जुन गुरुको निर्मल सूक्तिधारा सन्देहरूपी जङ्गलसमूहलाई काट्नका लागि बञ्चरो जस्तो हुन्छ त्यो गुरुहरूको शिखामणि हुन्छ ।।१७।।

**यत्सूक्तिदर्पणाभोगे निर्मले दृश्यते सदा।**
**मोक्षश्रीर्बिम्बरूपेण स गुरुर्भवतारकः।।१८।।**

**भावार्थ** : जसका निर्मल सूक्तिरूपी दर्पणका विस्तारमा मोक्षरूपी लक्ष्मी सदा बिम्बका रूपमा देखा पर्छिन् । त्यो गुरु संसारबाट परलाने(पार गराउने वाला) हुन्छ ।।१८।।

**शिष्याणां हृदयालेख्यं प्रद्योतयति यः स्वयम्।**
**ज्ञानदीपिकयाऽनेन गुरुणा कः समो भवेत्।।१९।।**

CC-0. Jangamwadi Math Digital Collection.

**भावार्थ** : जसले स्वयं आफ्ना ज्ञानदीपले शिष्यहरूका हृदयचित्तलाई प्रकाशित गर्दछ अर्थात् चित्तलाई निर्मल बनाएर त्यसमा निजस्वरूप शिवको प्रकाश फैलाउँछ त्यस गुरुका समान संसारमा को हुन्छ? अर्थात् कोहि हुँदैन ॥१९॥

**परमाद्वैतविज्ञानपरमौषधदानतः ।**
**संसाररोगनिर्माथी देशिकः केन लभ्यते।।२०।।**

**भावार्थ** : परम अद्वैतविज्ञानरूपी परम औषधीको दानले संसाररूपी रोगलाई नष्टगर्नेवाला आचार्य कसलाई प्राप्त हुन्छ? अर्थात् शिवको करुणाले नै यस्ता गुरु प्राप्त हुन्छन् ॥२०॥

**ज्ञानगुरुस्थल - (४७)**

**उपदेष्टोपदेशानां संशयच्छेदकारकः।**
**सम्यज्ज्ञानप्रदः साक्षादेष ज्ञानगुरुः स्मृतः।।२१।।**

**भावार्थ** : **ज्ञानगुरुस्थल वर्णन**— शिवयोगको उपदेश गर्ने शिष्यका संशयलाई हटाउने समीचीन ज्ञान प्रदान गर्नेलाई साक्षात् ज्ञानगुरु भनिन्छ ॥२१॥

**निरस्तविश्वसम्भेदं निर्विकारं चिदम्बरम्।**
**साक्षात्करोति यो युक्त्या स ज्ञानगुरुरुच्यते।।२२।।**

**भावार्थ** : विश्वका भेदलाई मेटाउने निर्विकार चिदाकाशको जसले अद्वैत शास्त्रका युक्तिहरूद्वारा प्रत्यक्ष गर्दछ उसलाई ज्ञानगुरु भनिन्छ ॥२२॥

**कलङ्कवानसौ चन्द्रः क्षयवृद्धिपरिप्लुतः।**
**निष्कलङ्कस्थितो ज्ञानचन्द्रमा निर्विकारवान्।।२३।।**

**भावार्थ** : आकाशमा देखिने चन्द्रमा कलङ्कयुक्त तथा ह्रास एवं वृद्धिले पीडित अथवा युक्त छ तर ज्ञानरूपी चन्द्र निष्कलङ्क एवं निर्विकार हुन्छ ॥२३॥

**पार्श्वस्थतिमिरं हन्ति प्रदीपो मणिनिर्मितः।**
**सर्वगामि तमो हन्ति बोधदीपो निरङ्कुशः।।२४।।**



**भावार्थ** : मणिनिर्मित दीपकले छेउमा रहेका अन्धकारलाई हटाउँछ किन्तु निर्बाध ज्ञानरूपी दीपकले सर्वव्यापी अन्धकारलाई हटाउँछ ॥२४॥

**सर्वार्थसाधकज्ञानविशेषादेशतत्परः ।**
**ज्ञानाचार्यः समस्तानामनुग्रहकरः शिवः।।२५।।**

**भावार्थ** : सम्पूर्ण अर्थको साधनभूत विशेष ज्ञानको दानमा तत्पर एवं सबैमाथि कृपा गर्ने ज्ञानाचार्य साक्षात् शिव हुन्छ ॥२५॥

**कटाक्षचन्द्रमा यस्य ज्ञानसागरवर्धनः।**
**संसारतिमिरच्छेदी स गुरुर्जानपारगः।।२६।।**

**भावार्थ** : जसको अनुग्रह कटाक्षरूपी चन्द्रमा ज्ञानरूपी सागरलाई बढाउने वाला हुन्छ संसाररूपी अन्धकारलाई नाश गर्नमा समर्थ त्यो गुरू ज्ञानको पारगामी हुन्छ ॥२६॥

**बहिस्तिमिरविच्छेत्ता भानुरेष प्रकीर्तितः।**
**बहिरन्तस्तमश्छेदी विभुर्देशिकभास्करः।।२७।।**

**भावार्थ** : प्राकृतिक दृश्यमान सूर्य बाह्य अन्धकारलाई नाश गर्दछ तर आचार्यरूपी व्यापकसूर्य बाह्य र आभ्यन्तर दुबै प्रकारका अज्ञानान्धकारलाई नाश गर्नेवाला हुन्छ अर्थात् यो संसार शिवबाट भिन्न हो यस्तो संझिनु बाह्य अज्ञान हो । म शिवबाट भिन्न हूँ यस्तो मान्नु आन्तर अज्ञान हो ॥२७॥

**कटाक्षलेशमात्रेण विना ध्यानादिकल्पनम्।**
**शिवत्वं भावयेद्यत्र स वेदः शाम्भवो भवेत्।।२८।।**

**भावार्थ** : ध्यान आदिको कल्पना नगरीकन जसबाट मात्र कृपाकटाक्षले शिवत्वको भावना उत्पन्न हुन्छ ॥२८॥

**शिववेदकरे ज्ञाने दत्ते येन सुनिर्मले।**
**जीवन्मुक्तो भवेच्छिष्यः स गुरुर्ज्ञानसागरः।।२९।।**

CC-0. Jangamwadi Math Digital Collection.

**भावार्थ** : जसद्वारा शिवभावना उत्पन्न गर्ने निर्मलज्ञान प्रदान गरिएपछि शिष्य जीवन्मुक्त हुन्छ ती गुरु ज्ञानका सागर हुन् ॥२९॥

**क्रियालिङ्गस्थल - (४८)**

**गुरोर्विज्ञानयोगेन क्रिया यत्र विलीयते।**
**तत्क्रियालिङ्गमाख्यातं सर्वैरागमपारगैः॥३०॥**

**भावार्थ** : **क्रियालिङ्गस्थलवर्णन**— गुरुका विज्ञानयोगद्वारा क्रिया जसमा लीन हुन्छ समस्त आगमशास्त्रमा पारङ्गत विद्वान्हरूले त्यस स्थितिलाई क्रियालिङ्ग भन्दछन् ॥३०॥

**परानन्दचिदाकारं परब्रह्मैव केवलम्।**
**लिङ्गं सद्रूपतापन्नं लक्ष्यते विश्वसिद्धये॥३१॥**

**भावार्थ** : परानन्द चिदाकार तथा केवल अर्थात् अद्वितीय परब्रह्म विश्वको रचना अथवा सम्पूर्ण क्रिया सिद्धिका लागि सद्रूपता अर्थात् स्थूलरूपतामा प्राप्त हुन्छन् अथवा प्राप्त भए जस्तो प्रतीति हुन्छ ॥३१॥

**लिङ्गमेव परं ज्योतिर्भवति ब्रह्म केवलम्।**
**तस्मात् तत्पूजनादेव सर्वकर्मफलोदयः॥३२॥**

**भावार्थ** : परज्योति केवल परब्रह्मनै लिङ्गरूपमा स्थित हुनुहुन्छ, त्यसैकारण उनको पूजनले समस्त कर्मफलको उदय हुन्छ ॥३२॥

**परित्यज्य क्रियाः सर्वा लिङ्गपूजैकतत्पराः।**
**वर्तन्ते योगिनः सर्वे तस्माल्लिङ्गं विशिष्यते॥३३॥**

**भावार्थ** : समस्त योगीजनहरू सबै क्रियाहरूलाई छोडेर केवल लिङ्गपूजामा तत्पर हुन्छन्, यस कारण क्रियालिङ्ग सबैमा श्रेष्ठ मानिन्छ ॥३३॥

**यज्ञादयः क्रियाः सर्वा लिङ्गपूजांशसंमिताः।**
**इति यत्पूज्यते सिद्धैस्तत्क्रियालिङ्गमुच्यते॥३४॥**



**भावार्थ** : यज्ञ आदि सम्पूर्ण क्रियाहरू लिङ्ग पूजाका अंशमात्रका बराबर हुन् यस् भावनाले सिद्धहरू जसको पूजन गर्दछन् त्यसलाई क्रियालिङ्ग भनिन्छ ॥३४॥

**किं यज्ञैरग्निहोत्राद्यैः किं तपोभिश्च दुश्चरैः।**
**लिङ्गार्चनरतिर्यस्य स सिद्धः सर्वकर्मसु॥३५॥**

**भावार्थ** : अग्निहोत्र आदि यज्ञ तथा कृच्छ चान्द्रायण आदि कठिन तपस्याबाट के लाभ? जसको लिङ्गार्चनमा रति छ त्यो सबैकार्यमा सिद्धहुन्छ ॥३५॥

**ब्रह्मविष्ण्वादयः सर्वे विबुधा लिङ्गमाश्रिताः।**
**सिद्धाः स्वस्वपदे भान्ति जगत्तन्त्राधिकारिणः॥३६॥**

**भावार्थ** : ब्रह्मा विष्णु आदि सबै देवता लिङ्गमा आश्रित हुनाले आफ्ना-आफ्ना कार्यमा(पदमा) सिद्ध छन् अर्थात् स्थित छन्। जगत्को सृजन पालन आदि गर्ने ब्रह्मा विष्णु आदि सबै देवता लिङ्गमा आश्रित भएर नै आफ्ना-आफ्ना पदमा देदीप्यमान छन् ॥३६॥

**भावलिंगस्थल - (४९)**

**क्रिया यथा लयं प्राप्ता तथा भावोऽपि लीयते।**
**यत्र तद्देशिकैरुक्तं भावलिङ्गमिति स्फुटम्॥३७॥**

**भावार्थ** : **भावलिङ्गस्थल वर्णन**— भावलिङ्गस्थलवर्णन - जस्ता प्रकारले क्रिया क्रियालिङ्गमा लीन भयो त्यसै प्रकारले जहाँ भाव पनि लीन हुन जान्छ त्यसलाई आचार्यहरूले स्पष्ट रूपमा भावलिङ्ग भनेका छन् ॥३७॥

**भावेन गृह्यते देवो भगवान् परमः शिवः।**
**किं तेन क्रियते तस्य नित्यपूर्णो हि स स्मृतः॥३८॥**

**भावार्थ** : भगवान् परमशिव भाव अर्थात् निर्मल हृदयको भावनाद्वारा वशमा हुन्छन्। बाह्य पूजा आदि सँग उनको के सम्बन्ध? ऊ (शिव) नित्यपूर्ण छन् ॥३८॥

CC-0. Jangamwadi Math Digital Collection.

**अखण्डपरमानन्दबोधरूपः परः शिवः।**
**भक्तानामुपचारेण भावयोगात् प्रसीदति।।३९।।**

**भावार्थ** : परमशिव अखण्ड परमानन्द र ज्ञानस्वरूप हुनुहुन्छ। भक्तहरूका पूजाद्वारा उनी भावद्वारा अर्थात् भावका कारणबाटै प्रसन्न हुन्छन्। अर्थात् भावरहित पूजाद्वारा परमशिव कहिल्यै पनि प्रसन्न हुँदैनन् ॥३९॥

**मृच्छिलाविहिताल्लिङ्गाद्भावलिङ्गं विशिष्यते।**
**निरस्तसर्वदोषत्वाद् ज्ञानमार्गप्रवेशनात्।।४०।।**

**भावार्थ** : माटो र ढुङ्गाको शिवलिङ्ग भन्दा भावलिङ्ग विशिष्ट हुन्छ। किन कि त्यसमा कुनै पनि दोषको सम्भावना हुँदैन तथा त्यो भावलिङ्ग भक्तहरूका ज्ञानमार्गमा प्रवेश गर्दछ ॥४०॥

**विहाय बाह्यलिङ्गानि चिल्लिङ्गं मनसि स्मरन्।**
**पूजयेद् भावपुष्पैर्यो भावलिङ्गीति कथ्यते।।४१।।**

**भावार्थ** : जो भक्त बाह्यलिङ्गहरूलाई छोडेर चित् लिङ्गको मनमा स्मरण गर्दछ तथा भावरूपी पुष्पले उसको पूजन गर्दछ, त्यसलाई भावलिङ्गी भनिन्छ ॥४१॥

**मूलाधारेऽथवा चित्ते भ्रूमध्ये वा सुनिर्मलम्।**
**दीपाकारं यजन् लिङ्गं भावद्रव्यैः स योगवान्।।४२।।**

**भावार्थ** : मूलाधार, हृदय अथवा भ्रूमध्यमा जो निर्मल दीपकलिकाको आकारयुक्त भावलिङ्गको पूजन गर्दछ त्यो शिवयोगी हुन्छ ॥४२॥

**स्वानुभूतिप्रमाणेन ज्योतिर्लिङ्गेन संयुतः।**
**शिलामृद्दारुसंभूतं न लिङ्गं पूजयत्यसौ।।४३।।**

**भावार्थ** : जो आफ्ना अनुभवद्वारा अर्थात् प्रमाणद्वारा ज्योतिर्लिङ्गले युक्त हुन्छ उसले ढुङ्गो माटो काठद्वारा बनाइएका लिङ्गको पूजा गर्दैन ॥४३॥



**क्रियारूपा तु या पूजा सा ज्ञेया स्वल्पसंविदाम्।**
**आन्तरा भावपूजा तु शिवस्य ज्ञानिनां मता।।४४।।**

**भावार्थ** : शिवको जो क्रियारूपी बाह्यपूजा हुन्छ त्यो अल्पज्ञानी हरूद्वारा गरिन्छ। उनको आन्तरिक भावपूजा ज्ञानिहरूको पूजा मानिन्छ ॥४४॥

**ज्ञानलिङ्गस्थल - (५०)**

**तद्भावज्ञापकज्ञानं लयं यत्र समश्नुते।**
**तज्ज्ञानलिङ्गमाख्यातं शिवतत्त्वार्थकोविदैः।।४५।।**

**भावार्थ** : **ज्ञानलिङ्गस्थलवर्णन**— उन शिवको भावज्ञापक ज्ञान जसमा लीन हुन जान्छ, शिवतत्त्वरूपी अर्थ अथवा शिवतत्त्वको अर्थलाई जान्नेहरूले उसलाई ज्ञानलिङ्ग भनेका छन् ॥४५॥

**त्रिमूर्तिभेदनिर्मुक्तं त्रिगुणातीतवैभवम्।।४६।।**
**ब्रह्म यद्बोध्यते तत्तु ज्ञानलिङ्गमुदाहृतम्।।४६।।**

**भावार्थ** : ब्रह्मा विष्णु र रुद्ररूपी त्रिमूर्ति भेदबाट रहित सत्त्व, रजस् तमस् यी तीन गुण भन्दा पर वैभवयुक्त ब्रह्म जसद्वारा बताइन्छ उसलाई ज्ञानलिङ्ग भनिन्छ ॥४६॥

**स्थूले क्रियासमापत्तिः सूक्ष्मे भावस्य सम्भवः।**
**स्थूलसूक्ष्मपदातीते ज्ञानमेव परात्मनि।।४७।।**

**भावार्थ** : स्थूल लिङ्गका विषयमा क्रियाको समापत्ति (अर्थात् प्राप्ति) हुन्छ, अर्थात् क्रिया गर्नु पर्दछ सूक्ष्मलिङ्गका सन्दर्भमा भावमय सामग्रीको आवश्यकता हुन्छ। जो स्थूल र सूक्ष्म दुबै स्तरबाट माथि छ उस परमात्माका विषयमा ज्ञान नै पूजासम्भार (पूजा सामग्री) हुन्छ ॥४७॥

**कल्पितानि हि रूपाणि स्थूलानि परमात्मनः।**
**सूक्ष्माण्यपि च तैः किं वा परबोधं समाचरेत्।।४८।।**

CC-0. Jangamwadi Math Digital Collection.

**भावार्थ** : स्थूल र सूक्ष्म दुवै परमात्माकै मायाद्वारा कल्पित हुन् । ती बाट के लाभ? अर्थात् ती मोक्षका साधन हुन सक्दैनन् । पर बोधरूप तृप्तिलिङ्गलाई आचरणमा उतार्नु पर्छ अर्थात् ज्ञानको विषय बनाउनु पर्छ।।४८।।

**परात्परं तु यदब्रह्म परमानन्दलक्षणम्।**
**शिवाख्यं ज्ञायते येन ज्ञानलिङ्गीति कथ्यते।।४९।।**

**भावार्थ** : जो परात्पर परमानन्दस्वरूप शिवनामक ब्रह्मलाई जान्दछ त्यसलाई ज्ञानलिङ्गी भनिन्छ ।।४९।।

**बाह्यक्रियां परित्यज्य चिन्तामपि मानसीम्।**
**अखण्डज्ञानरूपत्वं यो भजेन्मुक्त एव सः।।५०।।**

**भावार्थ** : जो भक्त बाह्य क्रिया एवं मानस ध्यानलाई छोडेर अखण्ड ज्ञानरूपताको भजन अर्थात् सेवन गर्छ त्यो सदा मुक्त नै हो ।।५०।।

**स्वयस्थल - (५१)**

**तद्भावज्ञापकं ज्ञानं यत्र ज्ञाने लयं व्रजेत्।**
**तद्वानेष समाख्यातः स्वाभिधानो मनीषिभिः।।५१।।**

**भावार्थ** : **स्वयंस्थल वर्णन**— त्यस अर्थात् भावलिङ्गको ज्ञापक ज्ञान जुन ज्ञानमा लीन हुन्छ, विद्वान्हरू द्वारा त्यस ज्ञानले युक्त भएको व्यक्ति 'स्वयं' नाम ले पुकारिन्छ ।।५१।।

**स्वच्छन्दाचारसन्तुष्टो ज्योतिर्लिङ्गपरायणः।**
**आत्मस्थसकलाकारः स्वाभिधो मुनिसत्तमः।।५२।।**

**भावार्थ** : स्वच्छन्द आचारले सन्तुष्ट, ज्योति लिङ्गको अर्चनामा तत्पर आत्मा - आत्मामा सम्पूर्ण आकार या विश्वलाई राख्ने मुनिसत्तमलाई 'स्वयं' भनिन्छ ।।५२।।

**निर्ममो निरहङ्कारो निरस्तक्लेशपञ्चकः।**
**भिक्षाशी समबुद्धिश्च मुक्तप्रायो मुनिर्भवेत्।।५३।।**



**भावार्थ** : विषयहरू प्रति ममता रहित, शरीरमा आत्मभावनारूप अहङ्कारबाट रहित तथा अविद्या आदि पाँच क्लेशहरूलाई समाप्त गर्ने वाला, भिक्षा माँगेर भोजन गर्ने समबुद्धि मुनि मुक्तप्राय हुन्छ ।।५३।।

**यदृच्छालाभसन्तुष्टो भस्मनिष्ठो जितेन्द्रियः।**
**समवृत्तिर्भवेद्योगी भिक्षुके वा नृपेऽथवाः।।५४।।**

**भावार्थ** : जति सुकै जेसुकै मिले पनि सन्तुष्ट रहने, भस्मधारण गर्भमा श्रद्धा राख्ने जितेन्द्रिय भिखारी र समानबुद्धि राख्ने तथा समान व्यवहार गर्नेवाला शिवयोगी हुन्छ ।।५४।।

**पश्यन् सर्वाणि भूतानि संसारस्थानि सर्वशः।**
**स्मयमानः परानन्दे लीनात्मा वर्तते सुधीः।।५५।।**

**भावार्थ** : विद्वान् साधक परानन्दमा सदा लीन रहने हुनाले संसारमारहने समस्त प्राणिहरूलाई सदा मुस्कानका साथ हेर्छ र समान व्यवहार गर्छ ।।५५।।

**ध्यानं शैवं तथा ज्ञानं भिक्षा चैकान्तशीलता।**
**यतेश्चत्वारि कर्माणि न पञ्चममिहेष्यते।।५६।।**

**भावार्थ** : शिवको ज्ञान, शिवको ध्यान, भिक्षा र एकान्तवास शिवयोगीका यी चार मात्र कर्म हुन्छन् । यस संसारमा उसका लागि पाँचौ कर्म हुँदैन ।।५६।।

**चरस्थल - (५२)**

**स्वरूपज्ञानसम्पन्नो ध्वस्ताहंममताकृतिः।**
**स्वयमेव स्वयं भूत्वा चरतीति चराभिधः।।५७।।**

**भावार्थ** : **चरस्थल वर्णन**— जो स्वरूपज्ञानले सम्पन्न छ । जसले अहङ्कार र ममकार अर्थात् म र मेरो भन्ने भावनालाई नष्ट गरिदिएको छ तथा यस प्रकार स्वयंस्थली भएर स्वयं यस संसारमा हिडडुल गर्छ त्यसलाई चरस्थल भनिन्छ ।।५७।।

CC-0. Jangamwadi Math Digital Collection.

**कामक्रोधादिनिर्मुक्तः शान्तिदान्तिसमन्वितः।**
**समबुद्ध्या चरेद् योगी सर्वत्र शिवबुद्धिमान्।।५८।।**

**भावार्थ** : काम क्रोध आदिबाट रहित शमदमले युक्त, सबै पति शिवबुद्धि राख्ने योगीले सर्वत्र बुद्धिले व्यवहार गर्नु पर्छ ।।५८।।

**इदं मुख्यमिदं हीनमिति चिन्तामकल्पयन्।**
**सर्वत्र सञ्चरेद् योगी सर्वं ब्रह्मेति भावयन्।।५९।।**

**भावार्थ** : यो मुख्य हो यो गौण (अमुख्य) हो यस्तो विचार नगरी तथा सबै ब्रह्म हो यस्तो भावना गर्दै सर्वत्र विचरण गरोस् ।।५९।।

**न सम्मानेषु सम्प्रीतिं नावमानेषु च व्यथाम्।**
**कुर्वाणः सञ्चरेद्योगी कूटस्थे स्वात्मानि स्थितः।।६०।।**

**भावार्थ** : सम्मान हुँदा हर्ष र अपमान हुँदा विषाद न गरी शिवयोगीले कूटस्थ आत्मामा स्थित भएर व्यवहार गर्नु पर्छ ।।६०।।

**अप्राकृतैर्गुणैः स्वीयैः सर्वं विस्मापयन् जनम्।**
**अद्वैतपरमानन्दमुदितो देहिवच्चरेत्।।६१।।**

**भावार्थ** : आफ्ना अलौकिकगुणहरूले समस्त संसारलाई आश्चर्यचकित गराउँदै अद्वैत परमानन्दमा निमग्न रहने व्यावहारिक दशामा शिवयोगीले सामान्यजनहरू जस्तै दैनन्दिनव्यवहार आचरणादिको पालन गर्नु पर्छ ।।६१।।

**न प्रपञ्चे निजे देहे न धर्मे न च दुष्कृते।**
**गतवैषम्यधीर्धीरो यतिश्चरति देहिवत्।।६२।।**

**भावार्थ** : त्यस्ता योगीले संसार आफ्नो शरीर धर्म अधर्म आदिका विषयमा वैषम्य बुद्धिले रहित भएर साधारण शरीरधारी जस्तै व्यवहार गर्नु पर्छ ।।६२।।

**प्राकृतैश्वर्यसम्पत्तिपराङ्मुखमनःस्थितिः।**
**चिदानन्दनिजात्मस्थो मोदते मुनिपुङ्गवः।।६३।।**



**भावार्थ** : प्राकृतिक ऐश्वर्य तथा वैभव प्रति पराङ्मुख अर्थात् निस्पृह मन भएको यसै कारण चिदानन्द स्वरूप आत्मामा प्रतिष्ठित अर्थात् सदा सर्वदा नै आत्मसाक्षात्कार गर्ने मुनि श्रेष्ठ सधैं आनन्दमय स्थितिमा रहन्छ ।।६३।।

**परस्थल - (५३)**

**स्वयमेव स्वयं भूत्वा चरतः स्वस्वरूपतः।**
**परं नास्तीति बोधस्य परत्वमभिधीयते।।६४।।**

**भावार्थ** : **परस्थल वर्णन**— आफैं आफुभएर आफ्ना स्वरूप सँग आचरण गर्ने वाला शिव योगीका लागि शिव देखि अर्को कोई हुँदैन। यस ज्ञानलाई परत्वज्ञान भनिन्छ ।।६४।।

**स्वतन्त्रः सर्वकृत्येषु स्वं परत्वेन भावितः।**
**तृणीकुर्वन् जगज्जालं वर्तते शिवयोगिराट्।।६५।।**

**भावार्थ** : सबै कार्यमा स्वतन्त्र रहँदै आफुलाई परतत्त्वका रूपमा मान्ने तथा संसारलाई तृणवत् (तृण जस्तै) तुच्छ मान्ने वाला शिवयोगिराज हुन्छ ।।६५।।

**वर्णाश्रमसमाचारमार्गनिष्ठापराङ्मुखः ।**
**सर्वोत्कृष्टं स्वमात्मानं पश्यन् योगी तु मोदते।।६६।।**

**भावार्थ** : वर्ण आश्रम आदिका आचरणमार्गबाट पराङ्मुखभएका शिवयोगीले आफुलाई पर अर्थात् सर्वोत्कृष्ट मान्छ तथा परमानन्दमा निमग्न रहन्छ ।।६६।।

**विश्वातीतं परं ब्रह्म शिवाख्यं चित्स्वरूपकम्।**
**तदेवाहमिति ज्ञानी सर्वोत्कृष्टः स उच्यते।।६७।।**

**भावार्थ** : शिवातीत शिवनामक चित्स्वरूप ब्रह्म पर अर्थात् अन्तिम तत्व हो । 'म पनि त्यही हूँ' यस्तो प्रकारको ज्ञान धारण गर्नेलाई सर्वोत्कृष्ट मानिन्छ ।।६७।।

**अचलं ध्रुवमात्मानमनुपश्यन्निरन्तरम्।**
**निरस्तविश्वविभ्रान्तिर्जीवन्मुक्तो भवेन्मुनिः।।६८।।**

CC-0. Jangamwadi Math Digital Collection.

**भावार्थ** : आफुलाई सर्वदा अचल (ध्रुव) संझिने समस्त भ्रमहरूले रहित भएको मुनि जीवन्मुक्त मानिन्छ ॥६८॥

**ब्रह्माद्याः किं नु कुर्वन्ति देवताः कर्ममार्गगाः।**
**कर्मातीतपदस्थस्य स्वयं ब्रह्मस्वरूपिणः॥६९॥**

**भावार्थ** : कर्म भन्दा अगाडी अर्थात् सबै भन्दा उच्च स्थानमा स्थित स्वयं ब्रह्मरूपी योगीलाई कर्ममार्गी ब्रह्मा आदि देवगणले के गर्न सक्दछन्? ॥६९॥

**स्वेच्छया सञ्चरेद्योगी विमुञ्चन् देहमानिताम्।**
**दर्शनैः स्पर्शनैः सर्वानज्ञानपि विमोचयेत्॥७०॥**

**भावार्थ** : शरीरमा अहंभाव र मम भाव न राख्ने योगी यस संसारमा स्वेच्छापूर्वक आचरण गर्छ तथा आफ्ना दर्शन एवं स्पर्शले समस्त अज्ञानीहरूलाई पनि मुक्त गराउँछ ॥७०॥

**नित्ये निर्मलभावने निरुपमे निर्धूतविश्वभ्रमे**
**सत्तानन्दचिदात्मके परशिवे साम्यं गतः संयमी।**
**प्रध्वस्ताश्रमवर्णधर्मनिगलः स्वच्छन्दसञ्चारवान्**
**देहीवाद्भुतवैभवो विजयते जीवन्विमुक्तः सुधीः॥७१॥**

**भावार्थ** : नित्य निर्मल भावरूप अनुपम समस्त भ्रमको नाशक सत् चित् आनन्दस्वरूप पराशिवका साथमा सामरस्य स्थापित गर्ने संयमी वर्ण आश्रम धर्मको बन्धनलाई तोड़ेर स्वच्छन्दरूपले आचरण गर्ने विद्वान् योगी अद्भुत वैभवले युक्त भएर पनि जीवन्मुक्त भएर पनि व्यावहारिक दशामा सामान्यजनहरू जस्तै व्यवहार गर्दछ ॥७१॥

***ॐ तत्सत् इति श्रीशिवगीतेषु सिद्धान्तागमेषु शिवाद्वैतविद्यायां शिवयोगशास्त्रे श्रीरेणुकागस्त्य संवादे वीरशैवधर्मनिर्णये श्रीशिवयोगिशिवाचार्यविरचिते श्रीसिद्धान्तशिखामणौ लिङ्गस्थलान्तर्गतभक्तस्थले दीक्षागुरुस्थलादि नवविधस्थलप्रसङ्गो नाम पञ्चदशः परिच्छेदः।***



**यस प्रकार श्रीसिद्धान्तशिखामणिको भक्तस्थलका नवविधलिङ्ग प्रसङ्ग चतुर्विधस्थलप्रसङ्ग नामक पञ्चदश परिच्छेदको आचार्य हरिप्रसादअधिकारी कृत सुबोधिनी नामक नेपाली व्याख्या पूर्णभयो ।**

**।। पञ्चदशपरिच्छेद पूर्ण भयो ।।**

OOO

CC-0. Jangamwadi Math Digital Collection.

# षोडशः परिच्छेदः

लिङ्गस्थलान्तर्गत

## माहेश्वरस्थल

**अगस्त्य उवाच—**

**स्थलानां नवकं प्रोक्तं भक्तस्थलसमाश्रयम्।**
**माहेश्वरस्थले सिद्धं स्थलभेदं वदस्व मे।।१।।**

**भावार्थ** : **क्रियागम स्थल वर्णन**— अगस्त्यले भन्नु भयो— हे रेणुकाचार्य! तपाँइले भक्तस्थल अन्तर्गत पर्ने नौ स्थलहरूको वर्णन गर्नु भयो । अब माहेश्वरस्थलमा सिद्ध स्थलभेदको वर्णन गर्नुहोस्, अर्थात् यस बारेमा मलाई बताउनुहोस् ॥१॥

**माहेश्वरस्थले सन्ति स्थलानि नव तापस।**
**क्रियागमस्थलं पूर्वं ततो भावागमस्थलम्।।२।।**

**ज्ञानागमस्थलं चाथ सकायस्थलमीरितम्।**
**ततोऽकायस्थलं प्रोक्तं परकायस्थलं ततः।।३।।**

**धर्माचारस्थलं चाथ भावाचारस्थलं ततः।**
**ज्ञानाचारस्थलं चाथ क्रमादेषां भिदोच्यते।।४।।**

**भावार्थ** : रेणुकाचार्यले भन्नु भयो— हे तपस्वी! माहेश्वर स्थलमा नौ स्थल छन् - पहिलो क्रियागमस्थल दोस्रो भावागमस्थल तेस्रो ज्ञानागमस्थल चौथो सकायस्थल, पाँचौं अकायस्थल छैठों परकायस्थल, सातौं धर्माचारस्थल आठौं भावाचारस्थल तथा नवौं ज्ञानाचार स्थल हुन् । अब क्रमैसँग इनको भेद बताइन्छ ॥२-४॥



### क्रियागमस्थल - (५४)

**शिवो हि परमः साक्षात् पूजा तस्य क्रियोच्यते।**
**तत्परा आगमा यस्मात् तदुक्तोऽयं क्रियागमः।।५।।**

**भावार्थ** : परलिङ्ग शिवयोगी साक्षात् शिव हुन्छ । उनको पूजा क्रिया कहलाउँछ । त्यस क्रियालाई बताउने अथवा प्रतिपादन गर्ने आगमलाई क्रियागम भनिन्छ ॥५॥

**प्रकाशते यथा नाग्निररण्यां मथनं विना।**
**क्रियां विना तथान्तस्थो न प्रकाशो भवेच्छिवः।।६।।**

**भावार्थ** : जसरी अरणि (काठ) मा गुप्तरूपले रहेको अग्नि (आगो) मन्थन नगरी प्रकट हुँदैन त्यसै गरी क्रिया बिना भित्र स्थित भएको (रहेको) शिव प्रकाशित हुँदैन ॥६॥

**न यथा विधिलोपः स्यद्यथा देवः प्रसीदति।**
**यथागमः प्रमाणं स्यत्तथा कर्म समाचरेत्।।७।।**

**भावार्थ** : जसो गर्नाले विधानको लोप हुँदैन, तथा जुनविधिले शिव प्रसन्न हुन्छन्, तथा आगम प्रमाण हुन्छ अर्थात् आगमशास्त्रको जुन कार्य गर्न निर्देश गर्छ त्यस्ता प्रकारको कर्म गर्नु पर्छ ॥७॥

**विधिः शिवनियोगोऽयं यस्माद्विहितकर्मणि।**
**शिवाराधनबुद्ध्यैव निरतः स्याद्विचक्षणः।।८।।**

**भावार्थ** : आगमशास्त्रद्वारा बताइएका कर्ममा 'यो शिवको आज्ञा हो' यस्तो विचार राखेर विद्वान्ले शिवाराधनबुद्धिले पूजा कर्ममा लाग्नु पर्छ ॥८॥

**गुरोरादेशमासाद्य पूजयेत् परमेश्वरम्।**
**पूजिते परमेशाने पूजिताः सर्वदेवताः।।९।।**

**भावार्थ** : शिवभक्तले गुरूको आज्ञा लिएर परमेश्वर शिवको पूजन गर्नु पर्दछ, किन भने शिवको पूजन भए पछि सबै देवताहरूको पूजन सम्पन्न हुन्छ ॥९॥

CC-0. Jangamwadi Math Digital Collection.

**सदा शिवार्चनोपायसामग्रीव्यग्रमानसः।**
**शिवयोगरतो योगी मुच्यते नात्र संशयः।।१०।।**

**भावार्थ** : शिवपूजनका सामग्रीहरू जुटाउनमा सदा व्यग्रचित्तभएको तथा शिवयोगमा लागेको योगी मुक्त हुन्छ, यसमा सन्देह छैन ।।१०।।

**अन्धपङ्गुवदन्योन्यसापेक्षे ज्ञानकर्मणी।**
**फलोत्पत्तौ विरक्तस्तु तस्मात्तद्द्वयमाचरेत्।।११।।**

**भावार्थ** : अन्धा र लँगडाका समान ज्ञान र कर्म परस्पर सापेक्ष हुन्छन्, अर्थात् एक अर्काका पूरक हुन्छन् । यस कारण फलोत्पत्तिमा अनासक्त रहँदै योगीले उक्त दुबैको (ज्ञान र कर्म) पालन गर्नु पर्छ ।।११।।

**ज्ञाने सिद्धेऽपि विदुषां कर्मापि विनियुज्यते।**
**फलाभिसन्धिरहितं तस्मात् कर्म न सन्त्यजेत्।।१२।।**

**भावार्थ** : ज्ञानीहरूले ज्ञानसिद्ध (प्राप्त) भए पछि पनि कर्मको त्याग गर्नु हुँदैन, अर्थात् कर्म गर्नु पर्छ । यसकारण फलेच्छा न भए पनि कर्मको त्याग न गर्नु ।।१२।।

**आचार एव सर्वेषामलङ्काराय कल्प्यते।**
**आचारहीनः पुरुषो लोके भवति निन्दितः।।१३।।**

**भावार्थ** : आचार नै सबैको अलङ्कार हो । आचारहीन पुरुष लोकमा (संसारमा) निन्दाको पात्र हुन्छ ।।१३।।

**ज्ञानेनाचारयुक्तेन प्रसीदति महेश्वरः।**
**तस्मादाचारवान् ज्ञानी भवेदादेहपातनात्।।१४।।**

**भावार्थ** : सदाचार युक्त ज्ञानले महेश्वर प्रसन्न हुन्छन् । यस कारण ज्ञानीले शरीर रहुञ्जेल आचारवान् हुनु पर्छ ।।१४।।

### भावागमस्थल - (५५)

**भावचिह्नानि विदुषो यानि सन्ति विरागिणः।**
**तानि भावागमत्वेन वर्तन्ते सर्वदेहिनाम्।।१५।।**



**भावार्थ** : **भावागमस्थल वर्णन**— वैराग्ययुक्त विद्वान्हरूका जो भाव चिह्न हुन्छन् ती चिह्नहरूनै सामान्य जनहरूका भावागम अर्थात् भावरूपी आगमशास्त्रका रूपमा प्रमाण हुन जान्छन् ।।१५।।

**शिवोऽहमिति भावोऽपि शिवतापत्तिकारणम्।**
**न ज्ञानमात्रं नाचारो भावयुक्तः शिवो भवेत्।।१६।।**

**भावार्थ** : 'शिवोऽहम्' म शिव हूँ यो भाव पनि शिवत्व प्राप्तिको कारण हुन्छ । केवल ज्ञान तथा केवल आचार युक्त होइन अपितु केवल भावयुक्त भक्त शिव हुन जान्छ ।।१६।।

**ज्ञानं वस्तुपरिच्छेदो ध्यानं तद्भावकारणम्।**
**तस्माद् ज्ञाते महादेवे ध्यानयुक्तो भवेत्सुधीः।।१७।।**

**भावार्थ** : ज्ञान वस्तुको परिच्छेदक अर्थात् उसका वास्तविक स्वरूपको निर्णायक हुन्छ । ध्यान त्यसभावको कारण हुन्छ । यस कारण महादेवको ध्यान भएपछि अर्थात् महादेवको तत्त्व जाने पछि विद्वान्ले शिवध्यानयुक्त हुनु पर्दछ ।।१७।।

**अन्तर्बहिश्च सर्वत्र परिपूर्णं महेश्वरम्।**
**भावयेत् परमानन्दलब्धये पण्डितोत्तमः।।१८।।**

**भावार्थ** : उत्तम पण्डितले परमानन्द प्राप्तिका लागि शरीरभित्र तथा बाहिर सर्वत्र परिपूर्ण महेश्वरको ध्यान तथा भावना गर्नु पर्छ ।।१८।।

**अर्थहीना यथा वाणी पतिहीना यथा सती।**
**श्रुतिहीना यथा बुद्धिर्भावहीना तथा क्रिया।।१९।।**

**भावार्थ** : जस्ता प्रकारले अर्थले हीन वाणी, पति रहित सती स्त्री, वेदज्ञानले रहित बुद्धि व्यर्थ हुन्छ त्यस्तै प्रकारले शिवभावनाले रहित क्रिया व्यर्थ हुन्छ ।।१९।।

**चक्षुर्हीनो यथा रूपं न किञ्चिद्वीक्षितुं क्षमः।**
**भावहीनस्तथा योगी न शिवं द्रष्टुमीश्वरः।।२०।।**

CC-0. Jangamwadi Math Digital Collection.

**भावार्थ** : जसरी नेत्रहीन मनुष्य केही पनि देख्नमा (हेर्नमा) समर्थ हुँदैन अर्थात् आँखा न भएका मनुष्यले हेर्न सक्दैन त्यस्तै प्रकारले भावहीनयोगी शिवको साक्षात्कार गर्नमा समर्थ हुँदैन ॥२०॥

**भावशुद्धेन मनसा पूजयेत्परमेष्ठिनम्।।२१।।**
**भावहीनां न गृह्णाति पूजां सुमहतीमपि।।२१।।**

**भावार्थ** : यस कारण मनुष्यले शुद्ध भावले युक्त भएर मनद्वारा परमेश्वर शिवको पूजन गर्नुपर्दछ। भावरहित ठूला ठूला पूजाले पनि परमेश्वर प्रसन्न हुँदैनन् अर्थात् त्यसपूजालाई स्वीकार गर्दैनन् ॥२१॥

**नैरन्तर्येण सम्पन्ने भावे ध्यातुं शिवं प्रति।**
**तद्भावो जायते यद्वत् क्रिमेः कीटस्य चिन्तनात्।।२२।।**

**भावार्थ** : जसरी एक प्रकारको कीरो भ्रमरको चिन्तन गर्दागर्दै स्वयं भ्रमररूपमा परिणत हुन्छ त्यसै गरी शिवमा ध्यानको निरन्तरता सम्पन्न भएपछि ध्यानकर्ता योगी पनि शिवस्वरूप हुन जान्छ ॥२२॥

**निष्कलङ्कं निराकारं परब्रह्म शिवाभिधम्।**
**निर्ध्यातुमसमर्थोऽपि तद्विभूतिं विभावयेत्।।२३।।**

**भावार्थ** : यदि कुनै भक्त शिवनामक निष्कलङ्क निराकार परब्रह्मको ध्यान गर्नमा समर्थ छैन भने पनि शिवका सर्वज्ञता आदि ऐश्वर्यको ध्यान गरोस् ॥२३॥

**ज्ञानागमस्थल - (५६)**

**परस्य ज्ञानचिह्नानि यानि सन्ति शरीरिणाम्।**
**तानि ज्ञानागमत्वेन प्रवर्तन्ते विमुक्तये।।२४।।**

**भावार्थ : ज्ञानागमस्थल वर्णन**— पर अर्थात् भावागम सम्पन्न ज्ञानयोगीका जो ज्ञानचिह्न हुन्छन्, सामान्य देहधारी हरूका लागि ती चिह्न हरूनै मोक्षका लागि ज्ञानागम (ज्ञानको स्रोत) का रूपमा व्यवहृत हुन्छन् ॥२४॥



**भावेन किं फलं पुंसां कर्मणा वा किमिष्यते।**
**भावकर्मसमायुक्तं ज्ञानमेव विमुक्तिदम्।।२५।।**

**भावार्थ** : केवलभावले अर्थात् भावमात्रले मनुष्यलाई कुनै फलमिल्दैन यसैगरी केवल कर्मले पनि कुनै लाभ हुँदैन। भाव र कर्म दुबैले युक्त ज्ञान नै मोक्षदायक हुन्छ ॥२५॥

**केवलं कर्ममात्रेण जन्मकोटिशतैरपि।**
**नात्मनां जायते मुक्तिर्ज्ञानं मुक्तेर्हि कारणम्।।२६।।**

**भावार्थ** : केवल कर्मद्वारा करोडौं जन्ममा पनि आत्माहरूको मुक्ति हुँदैन। ज्ञाननै मुक्तिको एकमात्र कारण हो ॥२६॥

**ज्ञानहीनं सदा कर्म पुंसां संसारकारणम्।**
**तदेव ज्ञानयोगेन संसारविनिवर्तकम्।।२७।।**

**भावार्थ** : पुरुषहरूको ज्ञानरहित कर्महरू सधैं संसार अर्थात् पुनर्जन्मको कारण बन्दछन् तिनै कर्महरू ज्ञानले युक्त भएपछि संसारका विनिवर्ततक अर्थात् मोक्षप्रद हुन्छन् ॥२७॥

**फलं क्रियावतां पुंसां स्वर्गाद्यं नश्वरं यतः।**
**तस्मात्स्थायिफलप्राप्त्यै ज्ञानमेव समभ्यसेत्।।२८।।**

**भावार्थ** : मात्र क्रियामा आश्रित रहने जीवहरूको क्रियाद्वारा प्राप्त स्वर्गादिफल नश्वर हुन्छ यस कारण स्थायी अर्थात् अनश्वर फलप्राप्तिका लागि ज्ञानको अभ्यास गर्नु पर्छ ॥२८॥

**शास्त्राभ्यासादियत्नेन सद्गुरोपुपदेशतः।**
**ज्ञानमेव समभ्यस्येत् किमन्येन प्रयोजनम्।।२९।।**

**भावार्थ** : शास्त्रको अभ्यास तथा सद्गुरुका उपदेशद्वारा सधैं ज्ञान का लागि प्रयत्न गर्नु पर्छ। अन्य साधनहरूबाट के प्रयोजन? ॥२९॥

CC-0. Jangamwadi Math Digital Collection.

**ज्ञानं परशिवाद्वैतपरिपाकविनिश्चयः।**
**येन संसारसम्बन्धविनिवृत्तिर्भवेत् सताम्।।३०।।**

**भावार्थ** : ज्ञानको अर्थ हो — परशिवको अद्वैतभावको परिपाकका सन्दर्भमा निश्चित अवधारणा। यसैद्वारा महात्माहरूलाई संसारबाट निवृत्ति प्राप्त हुन्छ ।।३०।।

**शिवात्मकमिदं सर्वं शिवादन्यन्न विद्यते।**
**शिवोऽहमिति या बुद्धिस्तदेव ज्ञानमुत्तमम्।।३१।।**

**भावार्थ** : 'यो सबै शिवमय नै हो' शिवदेखि अतिरिक्त अरु केही पनि छैन, म पनि शिव नै हूँ, यस प्रकारको बुद्धि हुनु नै उत्तम ज्ञान हुनु हो ।।३१।।

**अन्धो यथा पुरस्थानि वस्तूनि च न पश्यति।**
**ज्ञानहीनस्तथा देही नात्मस्थं वीक्षते शिवम्।।३२।।**

**भावार्थ** : जसरी अन्धो व्यक्तिले आफ्ना अगाडि भएको वस्तु पनि देख्न सक्दैन त्यसरी नै ज्ञानहीन (ज्ञानरहित) जीवले आफुभित्र रहेका शिवलाई हेर्न सक्दैन ।।३२।।

**शिवस्य दर्शनात् पुंसां जन्मरोगनिवर्तनम्।**
**शिवदर्शनमप्याहुः सुलभं ज्ञानचक्षुषाम्।।३३।।**

**भावार्थ** : शिवको साक्षात्कार भए पछि मनुष्यहरूको जन्मरूपी रोग नष्ट हुन्छ। ज्ञानरूपी नेत्रभएका महात्माहरूलाई शिवको दर्शन पनि सुलभ हुन्छ ।।३३।।

**दीपं विना यथा गेहे नान्धकारो निवर्तते।**
**ज्ञानं विना तथा चित्ते मोहोऽपि न निवर्तते।।३४।।**

**भावार्थ** : जस्ता प्रकारले घरमा स्थित अन्धकार दीपक बिना नष्ट हुँदैन त्यस्तै प्रकारले चित्तमा स्थित मोह पनि ज्ञान बिना नष्ट हुँदैन ।।३४।।



**सकायस्थल - (५७)**

**परस्य या तनुर्ज्ञेयाऽदेहकर्माभिमानिनः।**
**तया सकायो लोकोऽयं तदात्मत्वनिरूपणात्।।३५।।**

**भावार्थ** : **सकायस्थलवर्णन**— स्थूल आदि विशिष्ट देह र कर्मको जो अभिमानी हुँदैन यस्तो पर अर्थात् ज्ञानस्थलीको जो ज्ञेय शरीर हुन्छ त्यसद्वारा यसलोकलाई सकाय भनिन्छ किन कि त्यस ज्ञानीको शरीर पनि आत्मारूपमै प्रतिपादित हुन्छ ।।३५।।

**कायं विना समस्तानां न क्रिया न च भावना।**
**न ज्ञानं यत्ततो योगी कायवानेव सञ्चरेत्।।३६।।**

**भावार्थ** : किनकि काय विना सबै जनको क्रियाभावना र ज्ञान केही पनि संभव हुँदैन, त्यस कारण योगी कायवान् भएर संसारमा विचरण गरोस् ।।३६।।

**शिवैकज्ञानयुक्तस्य योगिनोऽपि महात्मनः।**
**काययोगेन सिद्ध्यन्ति भोगमोक्षादयः सदा।।३७।।**

**भावार्थ** : शिवज्ञानले युक्त महात्मा योगिका पनि योग मोक्ष आदि सर्वदा काय (शरीर) योगबाटै सिद्ध अर्थात् सम्पन्न हुन्छन् ।।३७।।

**काष्ठं विना यथा वह्निर्जायते न प्रकाशवान्।**
**मूर्तिं विना तथा योगी नात्मतत्त्वप्रकाशवान्।।३८।।**

**भावार्थ** : जसरी आगो दाउरा विना प्रज्वलित हुँदैन त्यसरी नै मूर्ति (शरीर) विना योगीले पनि आत्मतत्त्वको प्रकाश फैलाउन सक्दैन ।।३८।।

**मूर्त्यात्मनैव देवस्य यथा पूज्यत्वकल्पना।**
**तथा देहात्मनैवास्य पूज्यत्वं परयोगिनः।।३९।।**

**भावार्थ** : जस्ता प्रकारले मूर्तियुक्त अथवा मूर्तिमय हुनाका कारणले देवतालाई पूज्य मानिन्छ त्यस्तै प्रकारले परयोगी पनि देहधारण गर्नका कारणले नै पूज्य हुन्छ ।।३९।।

CC-0. Jangamwadi Math Digital Collection.

**निष्कलो हि महादेवः परिपूर्णः सदाशिवः।**
**जगत्सृष्ट्यादिसंसिद्ध्यै मूर्तिमानेव भासते।।४०।।**

**भावार्थ** : निष्कल रहेर पनि सबै दृष्टिले परिपूर्ण महादेव जगत्को सृष्टि आदि कार्य सम्पन्न गर्नका लागि मूर्तिमान् भएर सर्वत्र भासित हुन्छन् ।।४०।।

**ब्रह्माद्या देवताः सर्वा मुनयोऽपि मुमुक्षवः।**
**कायवन्तो हि कुर्वन्ति तपः सर्वार्थसाधकम्।।४१।।**

**भावार्थ** : ब्रह्मादि सबैदेवताहरू तथा मोक्ष चाहने समस्त मुनिगणहरू पनि शरीरधारण गरेर नै सर्वार्थ साधक तपस्या गर्दछन् ।।४१।।

**तपो हि मूलं सर्वासां सिद्धीनां यज्जगत्त्रये।**
**तपस्तत्कायमूलं हि तस्मात् कायं न सन्त्यजेत्।।४२।।**

**भावार्थ** : तीनै लोकमा सबै सिद्धिहरूको मूलकारण तप हो तथा त्यो तप कायमूल अर्थात् शरीरबाट सम्पादित हुन्छ, त्यसै कारणले शरीरको त्याग गर्नु हुँदैन ।।४२।।

### अकायस्थल - (५८)

**औपचारिकदेहित्वाज्जगदात्मत्वभावनात्।**
**मायासम्बन्धराहित्यादकायो हि परः स्मृतः।।४३।।**

**भावार्थ** : **अकायस्थल वर्णन**— पर अर्थात् सकाय परयोगी औपचारिक (गौणरूपले) शरीर धारण गर्नाले संसारलाई आफ्नै स्वरूप मान्नाले तथा माया सम्बन्ध बाट रहित हुनाले अकाय मानिएको हो ।।४३।।

**परस्य देहयोगोऽपि न देहाश्रयविक्रिया।**
**शिवस्येव यतस्तस्मादकायोऽयं प्रकीर्तितः।।४४।।**

**भावार्थ** : जस्ता प्रकारले शिव पर हुनाका कारणले उनमा देहसम्बन्धी विकार (दोष) हुँदैनन्, त्यस्तै प्रकारले पर अर्थात् शिवस्वरूप भएका योगीले शरीर धारण गरे पनि सामान्य जनका शरीर जस्तो संस्काररूप विकार हुँदैन, यसै कारणले कायधारण गरे पनि यस योगीलाई अकाय भनिएको छ ।।४४।।



**परलिङ्गे विलीनस्य परमानन्दचिन्मये।**
**कुतो देहेन सम्बन्धो देहिवद्भासनं भ्रमः।।४५।।**

**भावार्थ** : परम आनन्द स्वरूप एवं चिन्मय परलिङ्ग अर्थात् परम शिवम विलीन योगीको देह संग सम्बन्ध कसरी रहन सक्छ? अर्थात् रहँदैन । उसलाई देहधारी मान्नु भ्रम हो ।।४५।।

**देहाभिमानहीनस्य शिवभावे स्थितात्मनः।**
**जगदेतच्छरीरं स्याद् देहेनैकेन का व्यथा।।४६।।**

**भावार्थ** : देहाभिमानले रहित अतएव शिवभावमा स्थित योगीका लागि यो सम्पूर्ण संसारनै उसको शरीर हुन्छ पुनः एक दृश्यमान व्यक्तिगत शरीरबाट के लाभ? ।।४६।।

**शिवज्ञानैकनिष्ठस्य नाहंकारभवभ्रमः।**
**न चेन्द्रियभवं दुःखं त्यक्तदेहाभिमानिनः।।४७।।**

**भावार्थ** : जो शिवाद्वैत ज्ञानमा सर्वदा संलग्न छ उसलाई अहङ्कार बाट उत्पन्न भ्रम हुँदैन । जसले देहाभिमानको त्याग गरेको छ, उसलाई इन्द्रियजन्य (इन्द्रियबाट उत्पन्न हुने) दुःख हुँदैन ।।४७।।

**न मनुष्यो न देवोऽहं न यक्षो नैव राक्षसः।**
**शिवोऽहमिति यो बुद्ध्यात् तस्य किं देहकर्मणा।।४८।।**

**भावार्थ** : म न मनुष्य हूँ, न देवता हूँ, न यक्ष हूँ, न राक्षस हूँ, म केवल शिव हूँ यस्तो भावमा जो स्थित रहन्छ उसलाई शारीरिक कर्म सँग के प्रयोजन? अर्थात् शरीरद्वारा गरिएका कुनै पनि कर्मबाट ऊ लिप्त हुँदैन ।।४८।।

### परकायस्थल - (५९)

**वशीकृतत्वात् प्रकृतेर्मायामार्गातिवर्तनात्।**
**परकायोऽयमाख्यातः सत्यज्ञानसुखात्मकः।।४९।।**

CC-0. Jangamwadi Math Digital Collection.

**भावार्थ** : **परकायस्थल वर्णन**— प्रकृतिलाई आफ्ना वशमा गर्नाले एवं मायाका मार्गको अतिक्रमण गर्नाले सच्चिदानन्दस्वरूप यस योगीलाई 'परकाय' भनिन्छ ॥४९॥

**परब्रह्मवपुर्यस्य प्रबोधानन्दभासुरम्।**
**प्राकृतेन शरीरेण किमेतेनास्य जायते।।५०।।**

**भावार्थ** : जसको प्रकृष्टबोध अर्थात् परज्ञान एवं आनन्दले देदीप्यमान शरीर परब्रह्मस्वरूप भैसकेको हुन्छ उसलाई प्रकृतिका तत्त्वहरूबाट उत्पन्न यस स्थूल शरीर सँग के प्रयोजन? अर्थात् यस् शरीरबाट विहित कर्मले ऊ प्रभावित हुँदैन ॥५०॥

**सम्यग्ज्ञानाग्निसन्दग्धजन्मबीजकलेवरः।**
**शिवतत्त्वावलम्बी यः परकायः स उच्यते।।५१।।**

**भावार्थ** : सम्यक् ज्ञान अर्थात् 'सर्वं शिवमयम्' यस प्रकारको ज्ञान रूपी अग्निद्वारा जसको जन्मकारणभूत सूक्ष्म शरीर भस्म भैसकेको छ तथा जो शिवतत्त्वावलम्बी छ उसलाई ''परकाय'' भनिन्छ ॥५१॥

**इन्द्रियाणि मनोवृत्तिवासनाः कर्मसंभवाः।**
**यत्र यान्ति लयं तेन सकायोऽयं परात्मना।।५२।।**

**भावार्थ** : कर्मद्वारा उत्पन्न मानसिक भावना तथा इन्द्रिहरू जसमा लीन हुन जान्छन् उन परमात्माका कारणले यो सकाय हुन्छ अथवा कहिन्छ ॥५२॥

**पराहन्तामनुप्राप्य पश्येद् विश्वं चिदात्मकम्।**
**सदेहोऽतिभ्रमस्तस्य निश्चिता हि शिवात्मता।।५३।।**

**भावार्थ** : पर अहन्ता अर्थात् अहं परः शिवः अथवा अहं सर्वम् यस भावनालाई प्राप्त गरेर योगीले सम्पूर्ण विश्वलाई चिन्मयरूपमा देख्छ। यस्ता योगीको शिवरूपता निश्चित छ । अर्थात् यस प्रकारको व्यक्तिलाई 'सदेह' मान्नु ठूलो भ्रम हो ॥५३॥



**स्वस्वरूपं चिदाकारं ज्योतिः साक्षाद्विचिन्तयन्।**
**देहवानपि निर्देहो जीवन्मुक्तो हि साधकः।।५४।।**

**भावार्थ** : आफ्नु स्वरूपलाई चिदाकार एवं साक्षात् ज्योतिस्वरूप संझिनेवाला देहवान् (शरीरयुक्त) उनलाई चिदानन्द प्रकाशगर्ने जीवन्मुक्ति तत्काल उपलब्ध हुन्छ ॥५४॥

**देहस्तिष्ठतु वा यातु योगिनः स्वात्मबोधिनः।**
**जीवन्मुक्तिर्भवेत् सद्यश्चिदानन्दप्रकाशिनी।।५५।।**

**भावार्थ** : जसले आत्मसाक्षात्कार गर्छन् त्यस्ता योगीहरूको शरीर रहे पनि न रहे पनि उनलाई चिदानन्द प्रकाश गर्ने जीवन्मुक्ति तत्काल उपलब्ध हुन्छ ॥५५॥

**आत्मज्ञानावसानं हि संसारपरिपीडनम्।**
**सूर्योदयेऽपि किं लोकस्तिमिरेणोपरुध्यते।।५६।।**

**भावार्थ** : संसारको दुःखपीडा आत्मज्ञान प्राप्त होउञ्जेल मात्र हो । सूर्योदय भएपछि संसारमा अंधकार रहन सक्छ र? अर्थात् कदापि रहन सक्दैन ॥५६॥

**देहाभिमाननिर्मुक्तः कलातीतपदाश्रयः।**
**कथं याति परिच्छेदं शरीरेषु महाबुधः।।५७।।**

**भावार्थ** : जो देहाभिमानले रहित भएर कलातीत अर्थात् निष्कल अवस्थामा प्रतिष्ठित भएको छ, यस्तो महान् विद्वान् शरीरमा सीमित हुन सक्छ? ॥५७॥

**धर्माचारस्थल - (६०)**

**तस्यैव परकायस्य समाचारो य इष्यते।**
**स धर्मः सर्वलोकानामुपकाराय कल्पते।।५८।।**

**भावार्थ** : **धर्माचारस्थल वर्णन**— यस्ता 'परकाय' शिवयोगी को जो आचरण हुन्छ त्यसलाई कर्म भनिन्छ । यस्तो कर्म शैव जनहरूको उपकार गर्नमा समर्थ हुन्छ ॥५८॥

CC-0. Jangamwadi Math Digital Collection.

**अहिंसा सत्यमस्तेयं ब्रह्मचर्यं दया क्षमा।**
**दानं पूजा जपो ध्यानमिति धर्मस्य संग्रहः।।५९।।**

**भावार्थ** : अहिंसा, सत्य, चोरी न गर्नु, ब्रह्मचर्य, दया, क्षमा, दान, पूजा (शिवलिङ्गार्चन) जप (पञ्चाक्षर जप) ध्यान (शिवध्यान) यो धर्मको संग्रह हो ॥५९॥

**शिवेन विहितो यस्मादागमैर्धर्मसंग्रहः।**
**तस्मात्तमाचरन् विद्वान् तत्प्रसादाय कल्पते।।६०।।**

**भावार्थ** : आगमशास्त्रहरुले शिवद्वारा विहित धर्मसंग्रहको वर्णन एवं उपदेश गरेको छ अतएव त्यसको आचरण गर्ने वाला विद्वान् शिवलाई प्रसन्न गर्नमा समर्थ हुन्छ, अर्थात् उसका पूजाले शिव अवश्य प्रसन्न हुन्छन् ॥६०॥

**अधर्मं न स्पृशेत् किञ्चिद् विहितं धर्ममाचरेत्।**
**तं च कामविनिर्मुक्तं तमपि ज्ञानपूर्वकम्।।६१।।**

**भावार्थ** : अधर्मको रत्ती पनि स्पर्श हुनु हुँदैन शास्त्रद्वारा विहित धर्मको आचरण गर्नु पर्छ तथा त्यस धर्माचरणबाट हुने फलको इच्छा गर्नु हुँदैन, ज्ञानी जनले यसप्रकारको निष्कामकर्मको आचरण गर्नु पर्दछ ॥६१॥

**आत्मवत् सर्वभूतानि संपश्येद् योगवित्तमः।**
**जगदेकात्मताभावान्निग्रहादिविरोधतः ।।६२।।**

**भावार्थ** : यो जान्ने साधकले संसारलाई एकमात्र परमात्म स्वरूप मान्दै निग्रह अनुग्रह आदिबाट माथि उठेर अर्थात् पक्षपात रहित भएर समस्त प्राणिमा आत्मवत् व्यवहार गर्नु पर्छ ॥६२॥

**एक एव शिवः साक्षज्जगदेतदिति स्फुटम्।**
**पश्यतः किं न जायेत ममकारो हि विभ्रमः।।६३।।**

**भावार्थ** : एउटै शिव यस संसारमा अर्थात् संसाकारूपमा छन् यस्तो सुस्पष्ट दृष्टि भएका योगीलाई के प्राप्त हुँदैन? अर्थात् सबै कुरा प्राप्त हुन्छन्। ममकार अर्थात् यो मेरो हो, अथवा यो मेरो होइन यस प्रकारको ज्ञान भ्रमात्मक हुन्छ ॥६३॥



**धर्म एव समस्तानां यतः संसिद्धिकारणम्।**
**निस्पृहोऽपि महायोगी धर्ममार्गं च न त्यजेत्।।६४।।**

**भावार्थ** : धर्म नै सबै सिद्धिहरूको कारण हुन्छ, अतएव योगीले निस्पृह भएर पनि धर्मको परित्याग न गरोस् अर्थात् धर्माचरण सधैं गरी रहोस् ॥६४॥

**ज्ञानामृतेन तृप्तोऽपि योगी धर्मं न संत्यजेत्।**
**आचारं महतां दृष्ट्वा प्रवर्तन्ते हि लौकिकाः।।६५।।**

**भावार्थ** : ज्ञानरूपी अमृतले तृप्तभए पनि योगीले धर्ममार्गको त्याग गर्नु हुँदैन किन कि यस संसारमा ठूला ठूला व्यक्तिहरूको आचरण/व्यवहार हेरेर सामान्य जन पनि कर्ममा प्रवृत्त हुन्छन् ॥६५॥

**सदाचारप्रियः शम्भुः सदाचारेण पूज्यते।**
**सदाचारं विना तस्य प्रसादो नैव जायते।।६६।।**

**भावार्थ** : शिव सदाचार प्रिय हुनुहुन्छ अतः सदाचारद्वारानै उनको पूजा गरिन्छ। सदाचार बिना ती कदापि प्रसन्न हुँदैनन् ॥६६॥

### भावाचारस्थल - (६१)

**भाव एवास्य सर्वेषां भावाचारः प्रकीर्तितः।**
**भावो मानसचेष्टात्मा परिपूर्णः शिवाश्रयः।।६७।।**

**भावार्थ** : **भावाचारस्थल वर्णन**— यस धर्माचार स्थली योगीको भाव नै सबैका लागि भावाचार बताइएको छ। भावको अर्थ हो मानसिक चेष्टा अर्थात् विचारात्मिका क्रिया। परिपूर्ण शिवमा पूर्णरूपले आश्रित भएपछि यो स्थिति प्राप्त हुन्छ ॥६७॥

**भावनाविहितं कर्म पावनादपि पावनम्।**
**तस्माद् भावनया युक्तं परधर्मं समाचरेत्।।६८।।**

CC-0. Jangamwadi Math Digital Collection.

**भावार्थ** : भावनाका साथ गरिएको कर्म अर्थात् यस कर्मलाई गर्ने गराउने तथा स्वयं कर्म पनि शिवनै हुन्, यस्ताभावनाले गरिएको कर्म पनि शिवनै हुन्, यस्तो भावनाले गरिएको कर्म पवित्र भन्दा पनि पवित्र हुन्छ, यसकारण शिवभावनाले युक्त परधर्मको आचरण गर्नु पर्दछ ।।६८।।

**भावेन हि मनः शुद्धिर्भावशुद्धिश्च कर्मणा।**
**इति सञ्चिन्त्य मनसा योगी भावं न सन्त्यजेत्।।६९।।**

**भावार्थ** : भावद्वारा मनको शुद्धिहुन्छ तथा शिवको आराधनाले भावशुद्धि हुन्छ । यस्तो बात जानेर योगीले कहिल्यै पनि भावको त्याग न गरोस् ।।६९।।

**शिवभावनया सर्वं नित्यनैमित्तिकादिकम्।**
**कुर्वन्नपि महायोगी गुणदोषैर्न बाध्यते।।७०।।**

**भावार्थ** : महायोगी शिवभावनाका साथ समस्त नित्य नैमित्यिक आदि काम्यकर्महरूको आचरण गर्दै रहेर पनि ती कर्महरूका शुभाशुभगुणदोषहरूले प्रभावित हुँदैन ।।७०।।

**अन्तः प्रकाशमानस्य संवित्सूर्यस्य सन्ततम्।**
**भावेन यदुपस्थानं तत्सन्ध्यावन्दनं विदुः।।७१।।**

**भावार्थ** : आफुभित्र प्रकाशमान संविद्‌रूपी सूर्यको शिवभावनाद्वारा जो उपस्थान गरिन्छ, विद्वान्हरूले त्यसैलाई सन्ध्यावन्दन भन्दछन् । प्रातःकाल सूर्यलाई जलदिए पछि उद्वयम् आदि मन्त्रहरूले हात उठाएर गरिने आराधनालाई उपस्थापन भनिन्छ ।।७१।।

**आत्मज्योतिषि सर्वेषां विषयाणां समर्पणम्।**
**अन्तर्मुखेन भावेन होमकर्मेति गीयते।।७२।।**

**भावार्थ** : आत्मरूपी ज्योति अर्थात् चिदाग्निमा अन्तर्मुखी भावले समस्त विषयहरूको समर्पण अर्थात् हवनलाई कर्म भनिन्छ ।।७२।।



**भावयेत् सर्वकर्माणि नित्यनैमित्तिकानि च।**
**शिवप्रीतिकराण्येव सङ्गराहित्यसिद्धये।।७३।।**

**भावार्थ** : संसारको आसक्तिबाट रहित हुनाका लागि साधकले नित्यनैमित्यिक सबै कर्म हरूलाई शिवप्रसन्नताका लागि हुन् भन्ने ठान्नु पर्छ ।।७३।।

**शिवे निवेश्य सकलं कार्याकार्यं विवेकतः।**
**वर्तते यो महाभागः स सङ्गरहितो भवेत्।।७४।।**

**भावार्थ** : जो महाभाग्यशाली साधक विवेकपूर्वक गर्ने योग्य र नगर्ने योग्य सारा कर्महरू शिवलाई समर्पित गर्दछ, त्यो आसक्तिले रहित हुन जान्छ ।।७४।।

**आत्मानमखिलं वस्तु शिवमानन्दचिन्मयम्।**
**एकभावेन सततं संपश्यन्नेव पश्यति।।७५।।**

**भावार्थ** : आत्मा, समस्त संसार, तथा चिन्मय आनन्दस्वरूप शिवलाई (यी तीनै लाई) एकभावले निरन्तर देख्नेवालानै वास्तविकदेख्नेवाला हो, अर्थात् यही दर्शन हो, यही यथार्थरूपमा शिवदर्शन हो ।।७५।।

**ज्ञानाचारस्थल - (६२)**

**अस्य ज्ञानसमाचारो योगिनः सर्वदेहिनाम्।**
**ज्ञानाचारो यदुक्तोऽयं ज्ञानाचारः स कथ्यते।।७६।।**

**भावार्थ** : **ज्ञानाचारस्थल वर्णन**— भावाचार सम्पन्न यस योगीको ज्ञानाचार नै सबै मनुष्यहरूको ज्ञानाचार मानिएको छ । यही ज्ञानाचार स्थल पनि हो ।।७६।।

**शिवाद्वैतपरं ज्ञानं ज्ञानमित्युच्यते बुधैः।**
**सिद्धेन वाप्यसिद्धेन फलं ज्ञानान्तरेण किम्।।७७।।**

**भावार्थ** : शिवाद्वैतपरकज्ञाननै यथार्थज्ञान हो भन्ने विद्वान्हरूको कथन छ । अन्य ज्ञान सिद्धि प्रदान गरुन् या न गरुन्, शास्त्रसम्मत हुन् या न हुन्, ती ज्ञान

CC-0. Jangamwadi Math Digital Collection.

बाट के प्रयोजन? अर्थात् शिवाद्वैतपरक ज्ञान भैसके पछि अरुज्ञानको आवश्यकता पर्दैन ॥७७॥

**निर्मलं हि शिवज्ञानं निःश्रेयसकरं परम्।**
**रागद्वेषादिकलुषं भूयः संसृतिकारणम्।।७८।।**

**भावार्थ** : शिवज्ञान नै निर्मल अर्थात् आणव मायीय र कार्म यी तीन मल(दोष) हरूबाट रहित हुनाले मोक्षदायक हो । जो ज्ञान रागद्वेषआदि दोषका कारणले मलिन छ त्यो संसार अर्थात् जन्ममृत्यु बढाउने कारण हुन्छ ॥७८॥

**परिपूर्णं महाज्ञानं परतत्त्वप्रकाशकम्।**
**अवलम्ब्य प्रवृत्तो यो ज्ञानाचार स उच्यते।।७९।।**

**भावार्थ** : परतत्त्व अर्थात् परमशिवनामक तत्त्वको प्रकाशक अर्थात् आभास गराउने परिपूर्ण महाज्ञानलाई आधार बनाएर जो प्रवृत्त हुन्छ त्यसलाई 'ज्ञानाचार' भनिन्छ ॥७९॥

**निर्विकल्पे परे धाम्नि निष्कलो शिवनामनि।**
**ज्ञानेन योजयेत् सर्वं ज्ञानाचारी प्रकीर्तितः।।८०।।**

**भावार्थ** : जसले सबैलाई निष्कल निर्विकल्प शिवनामक परधाममा मिलाउँछ अर्थात् जोडी दिन्छ, उसलाई ज्ञानाचारी भनिन्छ ॥८०॥

**ज्ञानं मुक्तिप्रदं प्राप्य गुरुदृष्टिप्रसादतः।**
**कः कुर्यात् कर्मकार्पण्ये वाञ्छां संसारवर्धने।।८१।।**

**भावार्थ** : गुरुको कृपादृष्टिबाट मुक्तिदायक ज्ञान पाएर कुन समझदार व्यक्तिले कर्मद्वारा दुःखदायी संसारलाई बढाउने इच्छा गर्ला ॥८१॥

**कर्म ज्ञानाग्निना दग्धं न प्ररोहेत् कथञ्चन।**
**यदाहुः संसृतेर्मूलं प्रवाहानुगतं बुधाः।।८२।।**

**भावार्थ** : प्रवाहानुगत अर्थात् परंपराबाट प्राप्तभएका जुन कर्मलाई संसारको कारण मानेका छन् त्यो कर्म ज्ञानरूपी अग्निले भस्मभैसके पछि (डडिसकेपछि) कुनै प्रकारको संसाररूपी अङ्कुर त्यसकर्मबाट पलाउन सक्दैन ॥८२॥



**ज्ञानेन हीनः पुरुषः कर्मणा बद्ध्यते सदा।**
**ज्ञानिनः कर्मसङ्कल्पा भवन्ति किल निष्फलाः।।८३।।**

**भावार्थ** : ज्ञानशून्य अर्थात् ज्ञानले रहित मनुष्य कर्मद्वारा सधैं बन्धनमा पर्दछ यस विपरीत ज्ञानीका कर्मसंकल्पहरू (डडीकेका हुनाले) निश्चितरूपले निष्फल हुन्छन् ॥८३॥

**शुद्धाचारे शुद्धभावो विवेकी**
**ज्योतिः पश्यन् सर्वतश्चैवमेकम्।**
**ज्ञानध्वस्तप्राकृतात्मप्रपञ्चो**
**जीवन्मुक्तश्चेष्टते दिव्ययोगी।।८४।।**

**भावार्थ** : विशुद्ध ज्ञानाचार भए पछि (हुनाले) शुद्धभावना भएको अत एव विवेकपूर्ण दिव्ययोगी सबैतिर एक शिवात्मक ज्योतिको साक्षात्कार गर्दै ज्ञानद्वारा प्राकृत प्रपञ्चलाई नाश गरेर जीवन्मुक्त हुन जान्छ, तर पनि ऊ लोकमा सामान्य जन जस्तै व्यवहार गर्दछ ॥८४॥

***ॐ तत्सत् इति श्रीशिवगीतेषु सिद्धान्तागमेषु शिवाद्वैतविद्यायां शिवयोगशास्त्रे श्रीरेणुकागस्त्य संवादे वीरशैवधर्मनिर्णये श्रीशिवयोगिशिवाचार्यविरचिते श्रीसिद्धान्तशिखामणौ लिङ्गस्थलान्तर्गत माहेश्वरस्थले क्रियागमस्थलादि-नवविधस्थलप्रसङ्गो नाम षोडशः परिच्छेदः।***

**यस प्रकार श्रीसिद्धान्तशिखामणिको माहेश्वरस्थलाश्रित नवलिङ्ग प्रसङ्ग नामक षोडश परिच्छेदको आचार्य हरिप्रसादअधिकारी कृत सुबोधिनी नामक नेपाली व्याख्या पूर्णभयो ।**
**।। षोडशपरिच्छेद पूर्ण भयो ।।**



CC-0. Jangamwadi Math Digital Collection.

# सप्तदशः परिच्छेदः

लिंगस्थलांतर्गत

## प्रसादिस्थल

अगस्त्य उवाच—

**स्थलानि तानि चोक्तानि यानि माहेश्वरस्थले।**
**वदस्व स्थलभेदं मे प्रसादिस्थलसंश्रितम्।।१।।**

**भावार्थ** : **प्रसादिस्थल वर्णन**— अगस्त्यले भन्नु भयो - हे आचार्य! तपाँईले माहेश्वरस्थलमा जति पनि स्थलहरू छन् उनको वर्णन गर्नु भयो । अब प्रसादिस्थलमा आउने भेदस्थलहरूका विषयमा वर्णन गर्नुहोस् ।।१।।

रेणुक उवाच—

**स्थलभेदा नव प्रोक्ताः प्रसादिस्थलसंश्रिताः।**
**कायानुग्रहणं पूर्वमिन्द्रियानुग्रहं ततः।।२।।**

**प्राणानुग्रहणं पश्चात् ततः कायार्पितं मतम्।**
**करणार्पितमाख्यातं ततो भावार्पितं मतम्।।३।।**

**शिष्टस्थलं ततः प्रोक्तं शुश्रूषास्थलमेव च।**
**ततः सेव्यस्थलं चैषां क्रमशः शृणु लक्षणम्।।४।।**

**भावार्थ** : श्रीरेणुकाचार्यले भन्नु भयो — प्रसादिस्थल भित्र नौ स्थलभेद बताइएका छन् । ती यस प्रकार छन् — कायानुग्रहस्थल, इन्द्रियानुग्रहस्थल, प्राणानुग्रहस्थल कायार्पित स्थल, करणार्पित स्थल, भावार्पित स्थल, शिष्यस्थल, सूश्रषुस्थल र सेव्यस्थल । अब क्रमैसँग इनको लक्षण सुन्नुहोस् ।।२-४।।

### कायानुग्रहस्थल - (६३)

**अनुगृह्णति यल्लोकान् स्वकायं दर्शयन्नसौ।**
**तस्मादेष समाख्यातः कायानुग्रहनामकः।।५।।**



**भावार्थ** : **कायानुग्रहस्थल वर्णन**— ज्ञानाचार युक्त परब्रह्मस्वरूप शिवयोगी आफ्ना शरीरको दर्शन गराउँदै मनुष्यहरूमाथि अनुग्रह गर्दछन् । यसै कारण यस स्थललाई कायानुग्रह नामक स्थल भनिन्छ ।।५।।

**शिवो यथाऽनुगृह्णाति मूर्तिमाविश्य देहिनः।**
**तथा योगी शरीरस्थः सर्वानुग्राहको भवेत्।।६।।**

**भावार्थ** : जसरी शिव मूर्तिरूपी शरीरमा प्रविष्ट भएर शरीरधारीहरूमाथि अनुग्रह गर्नुहुन्छ त्यसरी नै योगी पनि शिवदीक्षा आदिबाट संस्कार गरिएका दिव्यशरीरमा स्थित भएर सबै माथि अनुग्रह गर्नुहुन्छ ।।६।।

**शिवः शरीरयोगेऽपि यथा सङ्गविवर्जितः।**
**तथा योगी शरीरस्थो निःसङ्गो वर्तते सदा।।७।।**

**भावार्थ** : जसरी शिव स्वयं शरीरधारण गरेर पनि त्यस शरीर प्रति आसक्ति राख्नु हुन्न, त्यसरी नै योगी पनि शरीर धारण गर्दै त्यस शरीरप्रति अनासक्त रहन्छ ।।७।।

**शिवभावनया युक्तः स्थिरया निर्विकल्पया।**
**शिवो भवति निर्धूतमायावेशपरिप्लवः।।८।।**

**भावार्थ** : दृढ एवं विकल्परहित शिवभावनाले युक्त योगीमा माया जन्म उपद्रव हुँदैन । मायावेश जन्य उपद्रवबाट दूर हुनाले त्यो योगी स्वयं शिवस्वरूप हुन जान्छ ।।८।।

**चित्तवृत्तिषु लीनासु शिवे चित्सुखसागरे।**
**अविद्याकल्पितं वस्तु नान्यत् पश्यति संयमी।।९।।**

**भावार्थ** : चित्आनन्दका समुद्रसमान शिवमा चित्तवृत्तिको लयभैसके पछि यस संयमी शिवयोगीले अविद्यारहित कुनै अन्य वस्तु प्रति दृष्टिपात गर्दैन ।।९।।

**नेदं रजतमित्युक्ते यथा शुक्तिः प्रकाशते।**
**नेदं जगदिति ज्ञाते शिवतत्त्वं प्रकाशते।।१०।।**

CC-0. Jangamwadi Math Digital Collection.

**भावार्थ** : 'यो चाँदी होइन' यस्तो बोध/कथन हुँदा जस्तै द्रष्टालाई शुक्ति (सीपी) को प्रतीति हुन्छ त्यस्तै प्रकारले **'यो संसार होइन'** यस्तो बोध भयेमा शिव तत्त्व प्रकाशित हुन्छ ॥१०॥

**यथा स्वप्रकृतं वस्तु प्रबोधेनैव शाम्यति।**
**तथा शिवस्य विज्ञाने संसारं नैव पश्यति।।११।।**

**भावार्थ** :जसरी स्वप्नद्वारा रहित (बनाइएको) वस्तु मिथ्या (झुट्टा) हुन्छ व्युँझिदा त्यस्को अस्तित्व रहन्न । त्यसरी नै योगीले शिवकोज्ञान भएपछि संसारलाई दैख्दैन, अर्थात् यो संसार उसलाई स्वप्नवत् प्रतीत हुन्छ ॥११॥

**अज्ञानमेव सर्वेषां संसारभ्रमकारणम्।**
**तन्निवृत्तौ कथं भूयः संसारभ्रमदर्शनम्।।१२।।**

**भावार्थ** : समस्त जीवको संसारभ्रमको कारण अज्ञान (यथार्थवस्तुको ज्ञान नहुनु) नै हो । अब अज्ञानको निवृत्ति भैसकेपछि पुनः संसारभ्रमको दर्शन कसरी हुन सक्छ? ॥१२॥

**गलिताहङ्कृतिग्रन्थिः क्रीडाकल्पितविग्रहः।**
**जीवन्मुक्तश्चरेद्योगी देहिवन्निरूपाधिकः।।१३।।**

**भावार्थ** : जसको अहङ्कारनामक ग्रन्थि (गाँठो) र म यो शरीर हूँ, मेरो नाम देवदत्त हो, इत्यादि दृढ नामरूपभावना नष्ट भएको हुन्छ तथा जसले लोकलीलाका लागि शरीर धारण गरेको हुन्छ, यस्तो उपाधिरहित योगी जीवन्मुक्त भएर संसारमा व्यवहार र विचरण गर्दछ ॥१३॥

### इन्द्रियानुग्रहस्थल - (६४)

**दर्शनात्परकायस्य करणानां विवेकतः।**
**इन्द्रियानुग्रहः प्रोक्तः सर्वेषां तत्त्ववेदिभिः।।१४।।**

**भावार्थ** : **इन्द्रियानुग्रहस्थल वर्णन**— इन्द्रियानुग्रहस्थलवर्णन - परकाययोगीको दर्शन, एवं समस्त इन्द्रियहरूको विवेक अर्थात् यीनिहरू पृथक्



वस्तु होइनन्, यी शिवस्वरूप नै हुन्, यस प्रकारको ज्ञान हुनु लाई तत्त्व वेत्ताहरूले ''इन्द्रियानुग्रह'' भन्ने नाम दिएका छन् ॥१४॥

**इन्द्रियाणां समस्तानां स्वार्थेषु सति सङ्गमे।**
**रागो वा जायते द्वेषस्तौ योगी परिवर्जयेत्।।१५।।**

**भावार्थ** : सबै इन्द्रियहरूको स्वार्थ अर्थात् आफ्नो विषय (शब्द, स्पर्श, रूप, रस, गन्ध) का साथमा सम्बन्ध हुँदा राग अथवा द्वेष उत्पन्न हुन्छ अर्थात् विषय प्राप्तिका लागि राग र प्राप्तिमा बाधा उपस्थित हुँदा द्वेष उत्पन्न हुन्छ। योगीले यी दुबैको त्याग गर्नु पर्दछ ॥१५॥

**इन्द्रियाणां बहिर्वृत्तिः प्रपञ्चस्य प्रकाशिनी।**
**अन्तः शिवे समावेशो निष्प्रपञ्चस्य कारणम्।।१६।।**

**भावार्थ** : इन्द्रियहरूको बाध्य विषयहरूमा प्रवृत्तिले प्रपञ्च अर्थात् संसार र त्यसमा मिल्ने सुख-दुःखलाई उत्पन्न गर्छ। यदि त्यही वृत्ति अन्तःस्थित शिव सँग समावेशित अर्थात् एकाकाराकारित भयेमा निष्प्रपञ्च अथवा संसारराहित्यको कारण बन्दछ ॥१६॥

**क्षणमन्तः शिवं पश्यन् केवलेनैव चेतसा।**
**बाह्यार्थानामनुभवं क्षणं कुर्वन् दृगादिभिः।।१७।।**

**सर्वेन्द्रियनिरूढोऽपि सर्वेन्द्रियविहीनवान्।**
**शिवाहितमना योगी शिवं पश्यति नापरम्।।१८।।**

**भावार्थ** : केवल चित्तद्वारा एक क्षणका लागि अर्थात् क्षणमात्र पनि आफुभित्र शिवको साक्षात्कार गर्नेवाला तथा बाह्यविषयहरूको नेत्र आदिद्वारा एक क्षण अनुभव गर्नेवाला योगी सबै इन्द्रियहरू माथि आरूढ भएर पनि सबै इन्द्रिहरूले रहित भए जस्तै भएर सर्वदा शिवप्रति समर्पित हुन्छ र सर्वत्र शिवकै दर्शन गर्छ, शिवभन्दा अतिरिक्त कुनै पदार्थ उसका दृष्टिमा हुँदैनन् ॥१७-१८॥

**न जरा मरणं नास्ति न पिपासा न च क्षुधा।**
**शिवाहितेन्द्रियस्यास्य निर्मानस्य महात्मनः।।१९।।**

CC-0. Jangamwadi Math Digital Collection.

**भावार्थ** : समस्त इन्द्रियव्यापारलाई जसले शिवमा समर्पित गरेको छ, त्यसैले जो दैहिक आदि अभिमान शून्य छ, यस्ता महात्मालाई जरा, मृत्यु, पिपासा(तिर्खा), क्षुधा (भोक) आदिको कष्ट हुँदैन, किन कि जरा र मृत्यु शरीरका धर्म तथा क्षुधा र पिपासा प्राणका धर्म हुन् ।।१९।।

**मनो यत्र प्रवर्तेत तत्र सर्वेन्द्रियस्थितिः।**
**शिवे मनसि सल्लीने क्व चेन्द्रियविचारणा।।२०।।**

**भावार्थ** : जुनविषयमा मन प्रवृत्तहुन्छ, इन्द्रियहरू पनि उसैमा रहन चाहन्छन् । जब यो मन शिवमा लीन हुन जान्छ तब आधारहीन इन्द्रियहरूको व्यवहार कसरी हुन सक्छ? ।।२०।।

**यद्यत् पश्यन् दृशा योगी मनसा चिन्तयत्यपि।**
**तत्तत् सर्वं शिवाकारं संविद्रूपं प्रकाशते।।२१।।**

**भावार्थ** : शिवयोगीले नेत्रद्वारा जुन वस्तुलाई हेर्दै मनले उसको ध्यान गर्दछ ती ती सबै वस्तु उसका सामु शिवाकार संवित् रूपमा भासित हुन्छन् ।।२१।।

**करणैः सहितं प्राणं मनस्याधाय संयमी।**
**योजयेत् स शिवः साक्षात् यत्र नास्ति जगद्भ्रमः।।२२।।**

**भावार्थ** : नेत्रादि इन्द्रियहरूका साथमा प्राणलाई मनमा समाहित गरेर शिवयोगीले जुन जुन वस्तुमा ध्यान स्थिर गर्छ त्यो वस्तु साक्षात् शिवरूपमा प्रकाशित हुन्छ । उसमा संसारको भ्रम रहँदैन ।।२२।।

**सर्वेन्द्रियप्रवृत्त्या च बहिरन्तः शिवं यजन्।**
**स्वच्छन्दचारी सर्वत्र सुखी भवति संयमी।।२३।।**

**भावार्थ** : त्यो संयमी शिवयोगी समस्त इन्द्रियहरूद्वारा आफुभित्र तथा बाहिरी संसारमा सर्वत्र शिवकै पूजा उनको ध्यान उनका लागि दान आदि गर्दछ, त्यो सर्वत्र निर्बाधरूपमा भ्रमण गर्छ तथा सुखी रहन्छ ।।२३।।



**प्राणानुग्रहस्थल - (६५)**

**शिवस्य परकायस्य यत् तात्पर्यावलोकनम्।**
**तत्प्राणानुग्रहः प्रोक्तः सर्वेषां तत्त्वदर्शिभिः।।२४।।**

**भावार्थ** : **प्राणानुग्रहस्थल वर्णन**— परकाय (अर्थात् इन्द्रियानुग्रह सम्पन्न) शिवयोगीको जो तात्पर्यविलोकन (अर्थात् प्राणवायुको निरोध) हो त्यसलाई तत्त्वद्रष्टा मनीषिहरूले सबैको प्राणानुग्रह मानेका छन् ।।२४।।

**प्राणो यस्य लयं याति शिवे परमकारणे।**
**कुतस्तस्येन्द्रियस्फूर्तिः कुतः संसारदर्शनम्।।२५।।**

**भावार्थ** : जुन योगीको प्राण परम कारण अर्थात् पञ्चकारणहरूका पनि कारण शिवमा लीन भएको हुन्छ, उसको इन्द्रिय व्यापारसँग के प्रयोजन? तथा संसारको दर्शन कसरी हुन सक्छ? ।।२५।।

**करणेषु निवृत्तेषु स्वार्थसङ्गात् प्रयत्नतः।**
**तैः समं प्राणमारोप्य स्वान्ते शान्तमतिः स्वयम्।।२६।।**

**भावार्थ** : प्रयत्न अर्थात् कुंभक आदिद्वारा इन्द्रियहरू आफ्ना-आफ्ना विषयहरूबाट निवृत्तभैसकेपछि, ती इन्द्रियहरू सँगै प्राणलाई पनि एकरूपतामा पुऱ्याएर योगी स्वयं शान्तमना अर्थात् शान्त मनवाला हुन जान्छ ।।२६।।

**शान्तत्वात् प्राणवृत्तीनां मनः शाम्यति वृत्तिभिः।**
**तच्छान्तौ योगिनां किञ्चिच्छिवादन्यन्न दृश्यते।।२७।।**

**भावार्थ** : प्राणका वृत्तिहरू श्वास प्रश्वास अथवा रेचक पूरक आदि शान्तभएपछि, ती वृत्तिहरूसँगै मन पनि शान्त हुन्छ । मन शान्त भैसकेपछि योगीहरूले शिवभन्दा अतिरिक्त केही पनि देख्दैनन् ।।२७।।

**प्राण एव मनुष्याणां देहधारणकारणम्।**
**तदाधारः शिवः प्रोक्तः सर्वकारणकारणम्।।२८।।**

CC-0. Jangamwadi Math Digital Collection.

**भावार्थ** : प्राण नै मनुष्यहरूका शरीरधारणमा सर्वप्रमुख कारण हो, तथा सबै कारणहरूका पनिकारण स्वरूप शिव त्यस प्राणका पनि कारण हुन् ॥२८॥

**निराधारः शिवः साक्षात् प्राणस्तेन प्रतिष्ठितः।**
**तदाधारा तनुर्ज्ञेया जीवो येनैव चेष्टते॥२९॥**

**भावार्थ** : शिव निराधार हुनुहुन्छ तथा प्राण शिवद्वारा प्रतिष्ठित छ। शरीर प्राणको आधार हो भन्ने तथ्य जान्नु पर्छ। जीव यसै प्राण तत्त्वका कारणले नै चेष्टाशील हुन्छ ॥२९॥

**शिवे प्राणो विलीनोऽपि योगिनो योगमार्गतः।**
**स्वशक्तिवासनायोगाद् धारयत्येव विग्रहम्॥३०॥**

**भावार्थ** : योगीको प्राण आफ्ना योगमार्गले शिवमा विलीन भए पनि आफ्ना शक्ति संस्कारका बलले शरीरको धारण गरिनै रहन्छ ॥३०॥

**स चाभ्यासवशाद्भूयः तर्वतत्त्वातिवर्तिनि।**
**निष्कलङ्के निराकारे निरस्ताशेषविक्लवे॥३१॥**
**चिद्विलासपरिस्फूर्तिपरिपूर्णसुखाद्वये ।**
**शिवे विलीनः सर्वात्मा योगी चलति न क्वचित्॥३२॥**

**भावार्थ** : तथा त्यो प्राणवायु पुनः अभ्यासद्वारा सर्वतत्त्वातिशायी निष्कलङ्क निराधार, निराकार समस्त बाधारहित चिद्शक्ति विकासका परिष्फुरणले परिपूर्ण आनन्दरूप अद्वितीय शिवमा जब विलीन हुन जान्छ, त्यस अवस्थामा यस प्रकारको सर्वात्मा योगी कहीं पनि हिड़डुलनगरी आफ्नो स्थानमा स्थित भएर नै सर्वव्यापक हुन जान्छ ॥३१-३२॥

**प्रध्वस्तवासनासङ्गात् प्राणवृत्तिपरिक्षयात्।**
**शिवैकीभूतसर्वात्मा स्याणुवद्भाति संयमी॥३३॥**

**भावार्थ** : वासनाको आसक्ति नष्ट भएपछि तथा प्राणवृत्तिको परिक्षय अर्थात् विराम हुनाका कारणले शिवसँग एकात्मभाव युक्त सर्वात्मा योगी स्थाणु (रुख को ठुटो) जस्तै प्रतीत हुन्छ। अर्थात् निश्चल हुन्छ ॥३३॥



## कायार्पितस्थल - (६६)

**शिवस्य पररूपस्य सर्वानुग्रहिणोऽर्चने।**
**त्यागो देहाभिमानस्य कायार्पितमुदाहृतम्॥३४॥**

**भावार्थ** : **कायार्पितस्थल वर्णन**— सबै माथि अनुग्रह गर्ने पररूप शिवका पूजनका समयमा देहाभिमानको त्याग गर्नुलाई कायार्पित भनिएको छ ॥३४॥

**यदा योगी निजं देहं शिवाय विनिवेदयेत्।**
**तदा भवति तद्रूपं शिवरूपं न संशयः॥३५॥**

**भावार्थ** : योगीले जब आफ्नो शरीर शिवलाई अर्पित गरिदिन्छ तब उसको त्यो रूप शिवरूप हुन जान्छ। यसमा कुनै सन्देह छैन ॥३५॥

**इन्द्रियप्रीतिहेतूनि विषयासङ्गजानि च।**
**सुखानि सुखचिद्रूपे शिवयोगी निवेदयेत्॥३६॥**

**भावार्थ** : योगीले इन्द्रियलाई आनन्द पुऱ्याउने सुख तथा विषयासङ्ग विषयहरूको पूर्ण लिप्तताबाट उत्पन्न सबै प्रकारका सुखहरूलाई चिदानन्दरूप शिवमा अर्पण गरोस् ॥३६॥

**दर्शनात् स्पर्शनात् भुक्तेः श्रवणाद् घ्राणनादपि।**
**विषयेभ्यो यदुत्पन्नं शिवे तत्सुखमर्पयेत्॥३७॥**

**भावार्थ** : योगीले दर्शन, स्पर्शन, भोजन, श्रवण एवं प्रणन तथा धनजन आदि अरू विषयहरूबाट उत्पन्न भएको जो सुख छ त्यो सुख शिवमा शिवर्पित गर्नु पर्छ ॥३७॥

**देहद्वारेण यद्यत् स्यात् सुखं प्रासङ्गमात्मनः।**
**तत्तन्निवेदयन् शम्भोर्योगी भवति निर्मलः॥३८॥**

**भावार्थ** : देहद्वारा जो जो सुख आत्मालाई प्राप्त हुन्छ योगीले त्यस त्यससुखलाई शिवमा निवेदित गर्नु पर्छ। यस्तो योगी परम निर्मल हुन जान्छ ॥३८॥

CC-0. Jangamwadi Math Digital Collection.

**करणार्पितस्थल - (६७)**

**आसङ्गनं समस्तानां करणानां परात्परे।**
**शिवे यत् तदिदं प्रोक्तं करणार्पितमागमे।।३९।।**

**भावार्थ** : **करणार्पितस्थल वर्णन**— परात्पर शिवलिङ्गमा समस्त इन्द्रियहरूको जो संयोजन हो त्यसलाई शैवागममा करणार्पित कहिन्छ ।।३९।।

**यद्यत्करणमालम्ब्य भुङ्क्ते विषयजं सुखम्।**
**तत्तच्छिवे समर्प्यैष करणार्पकः उच्यते।।४०।।**

**भावार्थ** : शिवयोगी जुन जुन इन्द्रियलाई आधार बनाएर विषयबाट उत्पन्न सुखको अनुभव गर्दछ त्यस त्यस इन्द्रियलाई शिवमा समर्पित गर्ने हुनाले यसलाई करणार्पक भनिन्छ ।।४०।।

**अहङ्कारमदोद्रिक्तमन्तःकरणवारणम् ।**
**बध्नीयाद् यः शिवालाने स धीरः सर्वसिद्धिमान्।।४१।।**

**भावार्थ** : अहङ्काररूपी मदले मत्त भएका अन्तःकरणरूपी हातीलाई जसले शिवरूपी बन्धनमा बाँध्छ त्यो धीर पुरुष सबै सिद्धि प्राप्तगर्नमा समर्थ हुन्छ । अर्थात् सबै सिद्धिहरूको स्वामित्वयुक्त त्यस योगीलाई धीर भनिन्छ ।।४१।।

**इन्द्रियाणां समस्तानां मनः प्रथममुच्यते।**
**वशीकृते शिवे तस्मिन् किमन्यैस्तद्वशानुगैः।।४२।।**

**भावार्थ** : सबै इन्द्रियहरूमा मन प्रथम अर्थात् प्रधान इन्द्रिय मानिन्छ। त्यस मनलाई शिवमा समर्पित गरे पछि त्यसका अधीनमा रहने अरू इन्द्रियहरूले के बिगार्न सक्छन्? अर्थात् तिनिहरू पनि स्वयं शिव कै वशमा हुन्छन् ।।४२।।

**इन्द्रियाणां वशीकारो निवृत्तिरिति गीयते।**
**लक्षीकृते शिवे तेषां कृतः संसारगाहनम्।।४३।।**

**भावार्थ** : इन्द्रियहरूलाई वशमा गर्नुलाई निवृत्ति भनिन्छ । जब ती इन्द्रियहरू शिवमा समर्पित भैसके तब तिनिहरू संसारमा कसरी रम्न सक्छन्? अर्थात् शिवमा अर्पित भरिए पछि ती पनि शिवमय हुन्छन् ।।४३।।



**संसारविषकान्तारसमुच्छेदकुठारिका ।**
**उपशान्तिर्भवेत् पुंसामिन्द्रियाणां वशीकृतौ।।४४।।**

**भावार्थ** : मनुष्यहरूका इन्द्रियहरू वशमा भए पछि संभाररूपी वृषवृक्षका जङ्गललाई काट्नका लागि मनुष्यलाई उपशान्तिरूपी बञ्चरो प्राप्त हुन्छ ।।४४।।

**इन्द्रियैरेव जायन्ते पापानि सुकृतानि च।**
**तेषां समर्पणादीशे कुतः कर्मनिबन्धनम्।।४५।।**

**भावार्थ** : इन्द्रियहरूद्वारा नै पाप र पुण्य दुबै हुन्छन् । तिनलाई (इन्द्रिय) ईश्वरमा समर्पित गरे पछि कर्मबन्धन कसरी हुन्छ? किन कि समर्पित इन्द्रियद्वारा गरिएका सबै कर्मको उत्तरदायित्व भगवान् शिवमै रहन्छ ।।४५।।

**प्रकाशमाने चिद्वह्नौ बहिरन्तर्जगन्मये।**
**समर्प्य विषयान् सर्वान् मुक्तवज्जायते जनः।।४६।।**

**भावार्थ** : बाह्य र आभ्यन्तर जगत् युक्त प्रकाशमान चिदग्निमा सम्पूर्णविषयहरूलाई समर्पण गरेर मनुष्य जीवन्मुक्त समान (जस्तै) हुन्छ ।।४६।।

**चित्तद्रव्यं समादाय जगज्जातं महाहविः।**
**चिद्वह्नौ जुह्वतामन्तः कुतः संसारविप्लवः।।४७।।**

**भावार्थ** : पञ्च तन्मात्रात्मक संसार भित्र रहने शब्द स्पर्श आदि विषय समूह तथा चित्तरूपी हवनीय द्रव्यको भित्ररहेका चैतन्यरूपी अग्निमा होम गर्ने साधकहरू लाई संसारका उपद्रवले कसरी बाधा पुऱ्याउन सक्छ? ।।४७।।

**आत्मज्योतिषि जिद्रूपे प्राणवायुनिबोधिते।**
**जुह्वन् समस्तविषयान् तन्मयो भवति ध्रुवम्।।४८।।**

**भावार्थ** : प्राणवायुद्वारा उद्बोधित चिद्रूप आत्मज्योति अर्थात् शिवाग्निमा सबै विषयहरूको होम गर्ने वाला निश्चितरूपले तन्मय, चिन्मय अर्थात् शिवस्वरूप हुन जान्छ ।।४८।।

CC-0. Jangamwadi Math Digital Collection.

**इन्द्रियाणि समस्तानि शरीरं भोगसाधनम्।**
**शिवपूजाङ्गभावेन भावयन् मुक्तिमाप्नुयात्।।४९।।**

**भावार्थ** : समस्त इन्द्रिय तथा भोगसाधन शरीरलाई शिवपूजाका अङ्गका रूपमा भावना गर्नेवाला साधक मोक्षको भागी हुन्छ ।।४९।।

**भावार्पितस्थल - (६८)**

**शिवे निश्चलभावेन भावानां यत्समर्पणम्।**
**भावार्पितमिदं प्रोक्तं शिवसद्भाववेदिभिः।।५०।।**

**भावार्थ** : **भावार्पितस्थल वर्णन**— शिवलिङ्गका विषयमा हठभावनाका साथ भावहरूको जो समर्पण छ, शिव सद्भावका वेत्ताहरूले यसलाई भावार्पित संज्ञा दिएका छन् ।।५०।।

**चित्तस्थसकलार्थानां मननं यत्तु मानसे।**
**तदर्पणं शिवे साक्षन्मानसो भाव उच्यते।।५१।।**

**भावार्थ** : चित्तमा स्थित समस्त विषयहरूको मनमा अथवा मनद्वारा जो मनन हुन्छ, शिवमा त्यसको साक्षात् अर्पण गरिनु मानसभाव कहलाउँछ ।।५१।।

**भाव एव हि जन्तूनां कारणं बन्धमोक्षयोः।**
**भावशुद्धौ भवेन्मुक्तिर्विपरीते तु संसृतिः।।५२।।**

**भावार्थ** : भाव नै मनुष्यका बन्धन र मोक्षको कारण हुन्छ । भाव शुद्ध भए पछि (अर्थात् शिवार्पित भए पछि) मुक्ति तथा विपरीत स्थिति भएमा अर्थात् भाव अशुद्ध भएमा संसार अर्थात् बन्धन हुन्छ ।।५२।।

**भावस्य शुद्धिराख्याता शिवोऽहमिति योजना।**
**विपरीतसमायोगे कुतो दुःखनिवर्तनम्।।५३।।**

**भावार्थ** : 'म शिव हूँ' — यस्तो विचार (अर्थात् शिव सँग सम्बन्ध) लाई भावको शुद्धि बताइएको छ । यसबाट विपरीत विचार अर्थात् म शिवदेखि भिन्न



हूँ यो संसार शिव र म देखि भिन्न हो यस्तो विचार दृढ भएमा दुःखबाट मुक्ति कसरी हुन सक्छ? अर्थात् कदापि हुन सक्दैन ।।५३।।

**भोक्ता भोग्यं भोजयिता सर्वमेतच्चराचरम्।**
**भावयन् शिवरूपेण शिवो भवति वस्तुतः।।५४।।**

**भावार्थ** : जो साधक भोक्ता जीव भोज्य विषय तथा भोजयिता शिव तथा यस समस्त चराचरको शिवरूपमा भावना गर्दछ अर्थात् सबैलाई शिव मान्दछ, त्यो वस्तुत: शिव हुन जान्छ ।।५४।।

**मिथ्येति भावयन् विश्वं विश्वातीतं शिवं स्मरन्।**
**सत्तानन्दचिदाकारं कथं बद्धुमिहार्हति।।५५।।**

**भावार्थ** : जसले विश्वलाई मिथ्या र शिवलाई विश्वतीत सच्चिदानन्दरूप मान्दछ त्यो यस संसारमा माया आदि पाशका बन्धनमा कसरी फँस्न सक्छ? ।।५५।।

**सर्वं कर्मार्चनं शम्भोर्वचनं तस्य कीर्तनम्।**
**इति भावयतो नित्यं कथं स्यात्कर्मबन्धनम्।।५६।।**

**भावार्थ** : समस्त कर्म शिवको पूजा हो, समस्त वचन उनको नाम संकीर्तन हो, सधैं यस्ता भावना राख्ने साधकलाई कर्मबन्धन कसरी हुन सक्छ? ।।५६।।

**सर्वेन्द्रियगतं सौख्यं दुःखं वा कर्मसम्भवम्।**
**शिवार्थं भावयन् योगी जीवन्मुक्तो भविष्यति।।५७।।**

**भावार्थ** : समस्त इन्द्रियहरूमा रहने अर्थात् सबै इन्द्रियहरुद्वारा भोगिने सुख अथवा दुःख कर्मबाटनै उत्पन्न हुन्छन् । ती सबै दुःख सुखहरूलाई शिवलिङ्गमा अर्पित गर्नेवाला योगी जीवन्मुक्त हुन्छ ।।५७।।

**शिष्यस्थल - (६९)**

**शासनीयो भवेद्यस्तु परकायेन सर्वदा।**
**तत्प्रसादात्तु मोक्षार्थी स शिष्य इति कीर्तितः।।५८।।**

CC-0. Jangamwadi Math Digital Collection.

**भावार्थ** : **शिष्यस्थल वर्णन**— परकाय अर्थात् परब्रह्मशरीर युक्त शिवयोगीद्वारा जो सर्वदा शासन गर्ने योग्य हुन्छ तथा उन शिवयोगी का कृपाद्वारा जो मोक्षको कामना गर्छ त्यो शिष्य कहलाउँछ ॥५८॥

**भावो यस्य स्थिरो नित्यं मनोवाक्कायकर्मभिः।**
**गुरौ निजे गुणोदारे स शिष्य इति गीयते।।५९।।**

**भावार्थ** : जसको भावना आफ्नो गुणोदार (अर्थात् ज्ञानवैराग्य आदिका कारणले उन्नत भएको) गुरुका विषयमा मन वाणी र कर्मले सदा स्थिर हुन्छ, अर्थात् मन वाणी र कर्मले सदा गुरु प्रति भक्तिभाव पूर्ण हुन्छ, त्यो शिष्य कहलाउँछ ॥५९॥

**शान्तो दान्तस्तपश्शीलः सत्यवाक् समदर्शनः।**
**गुरौ शिवे समानस्थः स शिष्याणामिहोत्तमः।।६०।।**

**भावार्थ** : शान्त (अर्थात् आफ्ना मनको नियन्त्रक) दान्त (बाध्य इन्द्रियलाई वशमा राख्ने) तपस्वी अर्थात् यम नियम आदि आठयोगाङ्गको अभ्यासगर्ने सदा सत्य बोल्ने, समदर्शी गुरु र शिष्य प्रति समान भाव राख्ने व्यक्ति यस संसारमा उत्तम शिष्य मानिन्छ ॥६०॥

**गुरुमेव शिवं पश्येच्छिवमेव गुरुं तदा।**
**नैतयोरन्तरं किञ्चिद्विजानीयाद्विचक्षणः।।६१।।**

**भावार्थ** : विद्वान् शिष्यले गुरुलाई शिवकारूपमा र शिवलाई गुरुका रूपमा हेर्नुपर्छ । उसले यी दुबैमा कुनै भेद मान्नु हुँदैन ॥६१॥

**शिवाचारे शिवध्याने शिवज्ञाने च निर्मले।**
**गुरोरादेशमात्रेण परां निष्ठामवाप्नुयात्।।६२।।**

**भावार्थ** : उक्त गुणहरूले युक्त शिष्य शिवाचार शिवध्यान र निर्मल शिवज्ञानका विषयमा मात्र गुरुका आदेशले विश्वास एवं श्रद्धामा प्राप्त हुन्छ ॥६२॥



**ब्रह्माण्डबुद्बुदोद्भूतं मायासिन्धुं महत्तरम्।**
**गुरोः कवलयत्याशु कटाक्षवडवानलः।।६३।।**

**भावार्थ** : गुरुका कृपाकटारूपी बडवानलले ब्रह्माण्डरूपी बुद्बुद् बाट उत्पन्न विशाल मायारूपी समुद्रलाई तत्काल सुकाई दिन्छ ॥६३॥

**गुरोः कटाक्षवेधेन शिवो भवति मानवः।**
**रसवेधाद् यथा लोहो हेमतां प्रतिपद्यते।।६४।।**

**भावार्थ** : जसरी रस पारा (धातु) द्वारा विद्ध हुनाले फलाम सुवर्ण बनिन्छ त्यसरी नै गुरुका कृपा कटाक्षवेधले मनुष्य शिव हुन जान्छ ॥६४॥

**न लङ्घयेद् गुरोराज्ञां ज्ञानमेव प्रकाशयन्।**
**शिवासक्तेन मनसा सर्वसिद्धिमवाप्नुयात्।।६५।।**

**भावार्थ** : गुरुका आज्ञाको उल्लंघन गर्नु हुँदैन । यस प्रकार आज्ञाधारक शिष्य शिवमा लीन मनद्वारा शिवाद्वैत ज्ञान प्राप्तगर्नमा समर्थ हुन्छ। साथै समस्तसिद्धिहरु पनि प्राप्त गर्दछ ॥६५॥

**शिवादन्यज्जगन्मिथ्या शिवः संवित्स्वरूपकः।**
**शिवस्त्वमिति निर्दिष्टो गुरुणा मुक्त एव सः।।६६।।**

**भावार्थ** : शिवदेखि भिन्न जगत् मिथ्या हो । शिव संवित् तिमी पनि शिव नै हौ, यसरी गुरुद्वारा निर्दिष्ट साधक मुक्त नै हुन्छ ॥६६॥

**गुरोर्लब्ध्वा महाज्ञानं संसारामयभेषजम्।**
**मोदते यः सुखी शान्तः स जीवन्मुक्त एव हि।।६७।।**

**भावार्थ** : जसले गुरुबाट संसाररूपी रोगको महौषधिरूप महाज्ञान प्राप्त गर्दछ, त्यो सुखी शान्त र जीवन्मुक्त हुन्छ ॥६७॥

**शुश्रूषुस्थल - (७०)**

**बोध्यमानः स गुरुणा परकायेन सर्वदा।**
**तच्छुश्रूषारतः शिष्यः शुश्रूषुरिति कीर्त्यते।।६८।।**

CC-0. Jangamwadi Math Digital Collection.

**भावार्थ** : **शुश्रूषुस्थल वर्णन**— परकाय गुरुद्वारा सर्वदा उपदिष्ट तथा उनका सेवामा सधैं संलग्न (निरत) शिष्य शुश्रूषु कहलाउँछ ॥६८॥

**किं सत्यं किं नु वासत्यं क आत्मा कः परः शिवः।**
**इति श्रवणसंसक्तो गुरोः शिष्यो विशिष्यते।।६९।।**

**भावार्थ** : कुन् सत्य हो? कुन् असत्य हो? कुन् आत्मा हो? कुन् परशिव हो? यसरी गुरुको उपदेश ग्रहण गर्ने शिष्य सेवा मात्र गर्ने शिष्य भन्दा विशेष कृपापात्र हुन्छ ॥६९॥

**श्रुत्वा श्रुत्वा गुरोर्वाक्यं शिवसाक्षात्क्रियावहम्।**
**उपशाम्यति यः स्वान्ते स मुक्तिपदमाप्नुयात्।।७०।।**

**भावार्थ** : गुरुका शिवसाक्षात्कार गराउने उपदेशवाक्यलाई बारंबार श्रवण गरेर जो शिष्य आफ्ना मनमा शान्तिको अनुभव गर्दछ त्यो मुक्तिपदमा प्राप्त हुन्छ ॥७०॥

**न बुध्यते गुरोर्वाक्यं विना शिष्यस्य मानसम्।**
**तेजो विना सहस्रांशोः कथं स्फुरति पङ्कजम्।।७१।।**

**भावार्थ** : गुरुको उपदेशवाक्य न सुनीकन शिष्यको मन प्रबुद्ध हुँदैन। सूर्यको तेज (प्रकाश) न मिले कमलको फूल कसरी फुल्न सक्छ? ॥७१॥

**सूर्यस्योदयमात्रेण सूर्यकान्तः प्रकाशते।**
**गुरोरालोकमात्रेण शिष्यो बोधेन भासते।।७२।।**

**भावार्थ** : जसरी सूर्योदयमात्रले सूर्यकान्तमणि प्रकाशित हुन थाल्छ त्यसरी नै गुरुका उपदेशरूपी आलोकले अर्थात् गुरुबाट प्राप्त ज्ञानले शिष्य प्रकाशित हुन लाग्दछ (चम्किन थाल्छ) ॥७२॥

**अद्वैतपरमानन्दप्रबोधैकप्रकाशकम् ।**
**उपायं शृणुयाच्छिष्यः सद्गुरुं प्राप्य प्राञ्जलिः।।७३।।**



**भावार्थ** : त्यस कारण शिष्यले उत्तमगुरु पाएर उनका सामुन्ने हात जोडेर श्रद्धावनत भएर अद्वैतपरमानन्दज्ञानको प्रकाशक एकमात्र उपायको श्रवण गर्नु पर्दछ ॥७३॥

**किं तत्त्वं परमं ज्ञेयं केन सर्वे प्रतिष्ठिताः।**
**कस्य साक्षात्क्रिया मुक्तिः कथयेति समासतः।।७४।।**

**भावार्थ** : शिष्यले गुरुलाई निवेदन गरोस् - हे गुरुदेव! कुन चैं तत्त्व परमतत्त्व अर्थात् श्रेष्ठ तथा ज्ञेय (जानेन योग्य) हो? कुन कारणमा समस्त चराचर स्थित छ? कसको साक्षात्कार मुक्ति कहलाँउछ? संक्षिप्तरूपमा यसको वर्णन गर्नुहोस् ॥७४॥

**इति प्रश्ने कृते पूर्वं शिष्येण नियतात्मना।**
**ब्रूयात्तत्त्वं गुरुस्तस्मै येन स्यात् संसृतेर्लयः।।७५।।**

**भावार्थ** : नियतात्मा अर्थात् एकाग्रचित्त युक्त शिष्यद्वारा यसरी प्रश्न गरिये पछि गुरुले त्यस शिष्यलाई तत्त्वको उपदेश दिनु पर्छ, जुन उपदेशले संसारको लयहोस् अर्थात् बन्धन काटियोस् ॥७५॥

**शिव एव परं तत्त्वं चिदानन्दसदाकृतिः।**
**स यथार्थस्तदन्यस्य जगतो नास्ति नित्यता।।७६।।**

**भावार्थ** : गुरुले शिष्यलाई भन्नु - सत् चित् आनन्दस्वरूप शिवनै परम अन्तिम र श्रेष्ठ तत्त्व हो । त्यही यथार्थ हो । त्यसबाट भिन्न संसार नित्य होइन ॥७६॥

**अयथार्थप्रपञ्चोऽयं प्रतितिष्ठति शङ्करे।**
**सदात्मनि यथा शुक्तौ रजतत्त्वं व्यवस्थितम्।।७७।।**

**भावार्थ** : यो मिथ्या प्रपञ्च (संसार) सत् स्वरूप शिवमा त्यसरी नै स्थित छ जसरी शुक्ति(सीपी) या रजत (चाँदी) स्थित रहन्छ ॥७७॥

**शिवोऽहमिति भावेन शिवे साक्षात्कृते स्थिरम्।**
**मुक्तो भवीत संसारान्मोहग्रन्थेर्विभेदतः।।७८।।**

CC-0. Jangamwadi Math Digital Collection.

**भावार्थ** : 'मैं शिव हूँ' यस भावले शिवको साक्षात्कार भैसके पछि संसाररूपी मोह ग्रन्थिको भेदन हुन्छ र साधक निश्चितरूपले मुक्त हुन्छ ॥७८॥

**शिवं भावय चात्मानं शिवादन्यं न चिन्तय।**
**एवं स्थिरे शिवाद्वैते जीवन्मुक्तो भविष्यसि।।७९।।**

**भावार्थ** : हे शिष्य! तिमी आफुलाई शिव मान, शिवदेखि पृथक् वस्तुलाई आफ्ना विचारको विषय न बनाउ । यसरी शिवाद्वैतमा स्थिरभावना भएपछि जीवनमुक्त हुने छौ ॥७९॥

**एवं प्रचोदितः शिष्यो गुरुणा गुणशालिना।**
**शिवमेव जगत् पश्यन् जीवन्मुक्तोऽभिजायते।।८०।।**

**भावार्थ** : यसरी गुणसम्पन्न गुरुद्वारा उपदेश प्राप्त गर्ने शिष्य संसारलाई शिवस्वरूप संझदै/मान्दै जीवन्मुक्त हुन्छ ॥८०॥

**सेव्यस्थल - (७१)**

**गुरुवाक्यामृतास्वादात् प्राप्तबोधमहाफलः।**
**शुश्रूषुरेव सर्वेषां सेव्यत्वात् सेव्य उच्यते।।८१।।**

**भावार्थ** : **सेव्यस्थल वर्णन**— सेव्य स्थल वर्णन - गुरुका उपदेश वाक्यरूपी अमृतलाई ग्रहण गर्नाले जसलाई शिवाद्वैत ज्ञानरूपी महाफल प्राप्त हुन्छ यस्तो शुश्रूषु नै समस्त सामान्यजनहरूद्वारा सेवनीय हुनाले ''सेव्य कहलाउँछ ॥८१॥

**गुरूपदिष्टे विज्ञाने चेतसि स्थिरतां गते।**
**साक्षात्कृतशिवः शिष्यो गुरुवत् पूज्यते सदा।।८२।।**

**भावार्थ** : गुरुद्वारा उपदिष्ट विशिष्टज्ञान अर्थात् शिवाद्वैत ज्ञान जब चित्तमा स्थिर हुन्छ तब शिवसाक्षात्कारकर्ता भएकाले त्यो शिष्य पनि सर्वदा गुरुका समान पूजित हुन्छ ॥८२॥



**ज्ञानादाधिक्यसम्पत्तिर्गुरोर्यस्मादुपस्थिता ।**
**तस्माज्ज्ञानागमाच्छिष्यो गुरुवत् पूज्यतां व्रजेत्।।८३।।**

**भावार्थ** : जुन कारणले शिष्यभित्र अधिकज्ञान सम्पदा (सम्पत्ति) उपस्थित हुन्छ यसै ज्ञानागमका कारणले शिष्य गुरुका समान पूजित हुन्छ ॥८३॥

**शिवोऽहमिति भावस्य नैरन्तर्याद् विशेषतः।**
**शिवभावे समुत्पन्ने शिववत् पूज्य एव सः।।८४।।**

**भावार्थ** : 'म शिव हूँ' यो भावना निरन्तर प्रवाहित हुनाकाकारणले शिष्यभित्र जब शिवभाव विशेषरूपले उत्पन्न हुन्छ तब ऊ शिवका समान पूज्य हुन जान्छ ॥८४॥

**विषयासक्तचित्तोऽपि विषयासङ्गवर्जितः।**
**शिवभावयुतो योगी सेव्यः शिव इवापरः।।८५।।**

**भावार्थ** : यस्तो शिवयोगी शिष्यहरूमा आशक्त चित्त भए पनि विषयको आसक्तिबाट रहित हुन्छ, किन कि शरीरधर्मका कारणले उसले विषयको सेवन गर्दछ, किन्तु सर्वत्र शिवदृष्टि हुनाका कारणले त्यो विषयको उपभोगबाट उत्पन्न हुने पाप-पुण्यबाट लिप्त हुँदैन । यस प्रकार शिवभावयुक्त योगी द्वितीय शिवका समान पूजनीय हुन्छ ॥८५॥

**मुक्तः संशयपाशतः स्थिरमना बोधे च मुक्तिप्रदे**
**मोहं देहभृतां दृशा विघटयन् मूलं महासंसृतेः।**
**सत्तानन्दचिदात्मके निरुपमे शैवे परस्मिन् पदे**
**लीनात्मा क्षयितप्रपञ्चविभवो योगी जनैः सेव्यते।।८६।।**

**भावार्थ** : संशयरूपी पाशबाटमुक्त, मुक्तिप्रद ज्ञानका विषयमा दृढबुद्धि भएको महासंसारको मूल कारण भएका मोहलाई आफ्ना कृपाकटाक्षले नष्ट गर्ने, तथा सत् चित् आनन्द स्वरूप निरूपम शिवपदमा लीन भएको हुनाले प्रपञ्च-(संसार)-को विस्तारलाई विनष्ट गर्नमा समर्थ योगी सबैजनद्वारा सर्वदा सेवित अथवा सेवनीय हुन्छ ॥८६॥

CC-0. Jangamwadi Math Digital Collection.

*ॐ तत्सत् इति श्रीशिवगीतेषु सिद्धान्तागमेषु शिवाद्वैतविद्यायां शिवयोगशास्त्रे श्रीरेणुकागस्त्यसंवादे वीरशैवधर्मनिर्णये श्रीशिवयोगिशिवाचार्यविरचिते श्रीसिद्धान्तशिखामणौ लिङ्गस्थलान्तर्गत प्रसादिस्थले कायानुग्रहादि-नवविधस्थलप्रसङ्गो नाम सप्तदशः परिच्छेदः।*

यस प्रकार श्रीसिद्धान्तशिखामणिको प्रसादिस्थलाश्रित नवलिङ्गप्रसङ्ग नामक सप्तदश परिच्छेदको आचार्य हरिप्रसादअधिकारी कृत 'सुबोधिनी' नेपाली व्याख्या पूर्ण भयो ।

।। सप्तदश परिच्छेद पूर्ण भयो ।।

❍❍❍

CC-0. Jangamwadi Math Digital Collection.

# अष्टदशः परिच्छेदः

लिंगस्थलांतर्गत
## प्राणलिंगीस्थल

अगस्त्य उवाच—

**प्रसादिस्थलसम्बद्धाः स्थलभेदाः प्रकीर्तिताः।**
**प्राणलिङ्गिस्थलारूढान् स्थलभेदान् वदस्व मे।।१।।**

**भावार्थ** : अगस्त्यले भन्नु भयो— हे आचार्य! तपाँइले प्रसादी स्थल सँग सम्बद्ध स्थलका भेदहरूको वर्णन गर्नु भयो । अब प्राणलिङ्गी स्थलका अन्तर्गत पर्ने स्थलभेदहरूबारे मलाई बताउनुहोस् ।।१।।

**श्रीरेणुक उवाच—**

**स्थलानां नवकं प्रोक्तं प्राणलिङ्गिस्थलाश्रितम्।**
**आदावात्मस्थलं प्रोक्तमन्तरात्मस्थलं ततः।।२।।**

**परमात्मस्थलं पश्चान्निर्देहागमसंज्ञितम्।**
**निर्भावागमसंज्ञं च ततो नष्टागमस्थलम्।।३।।**

**आदिप्रसादनामाथ ततोऽन्त्यप्रसादकम्।**
**सेव्यप्रसादकं चाथ शृणु तेषां च लक्षणम्।।४।।**

**भावार्थ** : श्री रेणुकाचार्यले भन्नु भयो— प्राणलिङ्गी स्थलमा नौ स्थल बताइएका छन् । पहिलो आत्मस्थल त्यस पछि अन्तरात्मस्थल फेरि परमात्मस्थल त्यस पछि निर्देहागमस्थल त्यस पछि निर्भावागमस्थल तत्पश्चात् नष्टागमस्थल पुनः आदिप्रसादी स्थल तथा अन्त्यप्रसादीस्थल र अन्तमा सेव्य प्रसादिस्थल नामका नौ स्थल छन् । अब इनको लक्षण सुन्नुहोस् ।।२-४।।



**आत्मस्थल - (७२)**

**जीवभावं परित्यज्य यदा तत्त्वं विभाव्यते।**
**गुरोश्च बोधयोगेन तदात्मायं प्रकीर्तितः।।५।।**

**भावार्थ** : **आत्मस्थल वर्णन**— यो सेव्यस्थल गुरुद्वारा प्रवर्तित बोधका कारणले जहिले जीवभावको त्याग गरेर तत्त्वका रूपमा जानिन्छ तहिले त्यसलाई आत्मा भनिन्छ ।।५।।

**वालाग्रशतभागेन सदृशो हृदयस्थितः।**
**अश्नन् कर्मफलं सर्वमात्मा स्फुरति दीपवत्।।६।।**

**भावार्थ** : कपाल (केश) का अग्रभाग सयभागमा एकभाग बराबर को यो जीव (आत्मा) हृदयमा स्थित भएर कर्मफलको भोग नगरी दीयो जस्तै प्रकाशित भैरहन्छ तथा अरुपदार्थलाई पनि प्रकाशित गर्दछ । यस विषयमा श्वेताश्वतर उपनिषद्मा भनिएको छ—

**वालाग्रशतभागेन सदृशो हृदयस्थितः।**
**अश्नन् कर्मफलं सर्वमात्मा स्फुरति दीपवत्।।६।।**

**आत्मापि सर्वभूतानामन्तःकरणमाश्रितः।**
**अणुभूतो मलासङ्गादादिकर्मनियन्त्रितः।।७।।**

**भावार्थ** : समस्त प्राणिहरूका अन्तःकरणमा स्थित आत्मा पनि मलले युक्त हुनाले आदि अर्थात् प्राचीनतमकर्मले नियन्त्रितभएर अणुरूपमा रहन्छ ।।७।।

**जपायोगाद्यथा रागः स्फटिकस्य मणेर्भवेत्।**
**तथाऽहङ्कारसम्बन्धादात्मनो देहमानिता।।८।।**

**भावार्थ** : जस्ता प्रकारले स्वच्छ स्फटिकमणि जपाकुसुमका साथमा संयुक्त हुनाले रातो वर्णको हुन जान्छ त्यस्तै प्रकारले अहङ्कारका सम्बन्धले आत्मा पनि देहाभिमानी हुन जान्छ । अर्थात् देहलाई नै आफ्नु स्वरूप संझिन थाल्छ ।।८।।

CC-0. Jangamwadi Math Digital Collection.

**अशरीरोऽपि सर्वत्र व्यापकोऽपि निरञ्जनः।**
**आत्मा मायाशरीरस्थः परिभ्रमति संसृतौ।।९।।**

**भावार्थ** : शरीर रहित भएर पनि सर्वत्र विद्यमान रहने व्यापक भएर पनि निरञ्जन अर्थात् दोषरहित आत्मा माया कै द्वारा कल्पित शरीरमा स्थित भएर संसारमा भ्रमणशील रहन्छ ।।९।।

**आत्मस्वरूपविज्ञानं देहेन्द्रियविभागतः।**
**अखण्डब्रह्मरूपेण तदात्मप्राप्तिरुच्यते।।१०।।**

**भावार्थ** : जहिले शरीर र इन्द्रियको विभागद्वारा (अर्थात् आत्मा शरीर र इन्द्रियबाट भिन्न हो यस्ता विचारले) अखण्ड ब्रह्मका रूपमा आत्मस्वरूपको ज्ञान हुन जान्छ, त्यसैलाई आत्मप्राप्ति भनिन्छ ।।१०।।

**न चास्ति देहसम्बन्धो निर्देहस्य स्वभावतः।**
**अज्ञानकर्मयोगेन देही भवति भुक्तये।।११।।**

**भावार्थ** : जो स्वभावतः देहरहित छ उसको देहसँग कदापि सम्बन्ध हुन्न । अज्ञान र त्यसबाट उत्पन्न आफ्ना कर्मका योगले यो आत्मा भोगगर्नका लागि शरीरधारी बन्दछ ।।११।।

**नासौ देवो न गन्धर्वो न यक्षो नैव राक्षसः।**
**न मनुष्यो न तिर्यक्च न च स्थावरविग्रहः।।१२।।**

**भावार्थ** : यो आत्मा न देव, न गन्धर्व, न यक्ष, न राक्षस हो । साथै न तिर्यक् अर्थात् पशु पक्षी न स्थावर (स्थिर) शरीर वाला वृक्ष आदि हो ।।१२।।

**नानाकर्मविपाकाश्च नानायोनिसमाश्रिताः।**
**नानायोगसमापन्नाः नानाबुद्धिविचेष्टिताः।।१३।।**

**नानामार्गसमारूढाः नानासङ्कल्पकारिणः।**
**अस्वतन्त्राश्च किञ्चिज्ञाः किञ्चित्कर्तृत्वहेतवः।।**
**लीलाभाजनतां प्राप्ताः शिवस्य परमात्मनः।।१४।।**



**भावार्थ** : यी जीवहरु नाना कर्म विपाकले युक्त हुन्छन्, त्यसैले देव, मनुष्य, पशु, पक्षी, आदि नाना योनिहरूमा उत्पन्न हुन्छन् । त्यस पछि नानाप्रकारका सुखदुःखात्मक भोगहरू प्राप्त गरेर अनेक प्रकारका विचार तथा चेष्टाहरू गर्दछन् । यी जीवहरू जैन, बौद्ध, वैष्णव आदि अनेक धर्ममार्गहरूको आश्रय लिएर अनेक प्रकारका विचारहरू गर्दछन् । अस्वतन्त्र, अल्पज्ञ तथा अल्पकर्तृत्वले युक्त यी जीवहरू परमात्मा शिवद्वारा अभिनीत लीलाका पात्र समान हुन् ।।१३-१४।।

**चोदिता परमेशेन स्वस्वकर्मानुरूपतः।।१५।।**
**स्वर्गं वा नरकं वापि प्राणिनो यान्ति कर्मिणः।**

**भावार्थ** : कर्म गर्ने प्राणिहरू परमेश्वरद्वारा आफ्ना-आफ्ना कर्म-अनुसार प्रेरित भएर स्वर्ग अथवा नरकमा प्राप्त हुन्छन् ।।१५।।

**पुनः कर्मविशेषेण जायन्ते गर्भकोटरात्।**
**जाता मृताः पुनर्जाताः पुनर्मरणभाजिनः।।**
**भ्रमन्ति घोरसंसारे विश्रान्तिकथया विना।।१६।।**

**भावार्थ** : फेरि भोगाविष्ट कर्मका कारणले यी जीवहरू गर्भमा उत्पन्न हुन्छन्, केही समय सम्म यस संसारमा रहेर पुनः मृत्युमा प्राप्त हुन्छन् । यसैगरि बारंबार जन्ममृत्युको प्रवाह चली रहन्छ । जीवहरू विश्राम नगरी यस घोर संसारमा भ्रमण गरी रहन्छन् ।।१६।।

**जीवत्वं दुःखसर्वस्वं तदिदं मलकल्पितम्।**
**निरस्यते गुरोर्बोधाज्ज्ञानशक्तिः प्रकाशते।।१७।।**

**भावार्थ** : जीव हुनुनै दुःख सर्वस्वमा प्राप्त हुनु हो तथा यो जीवत्व मलकल्पित हो । गुरुबाट दिइएका ज्ञानले जीवको मल(अज्ञान) दूर हुन्छ (हट्छ) तथा जीवलाई ज्ञानशक्ति प्राप्त हुन्छ ।।१७।।

**अन्तरात्मस्थल - (७३)**

**यदा निरस्तं जीवत्वं भवेद् गुर्वनुबोधतः।**
**तदान्तरात्मभावोऽपि निरस्तस्य भवेद् ध्रुवम्।।१८।।**

CC-0. Jangamwadi Math Digital Collection.

**भावार्थ** : **अन्तरात्मस्थल वर्णन**— गुरुका उपदेशले जब साधकको जीवभाव निरस्त हुन्छ, त्यस्ता जीवभाव निरस्त भएका मनुष्यको निश्चितरूपले आन्तरात्म भाव पनि भै जान्छ ॥१८॥

**देहस्थितोऽप्ययं जीवो देहसङ्गविवर्जितः।**
**बोधात् परात्मभावित्वादन्तरात्मेति कीर्तितः।।१९।।**

**भावार्थ** : देह भित्र रहेर पनि यो जीव जहिले देह प्रति आसक्तिले रहित हुन्छ तहिले बोध तथा परात्मभावले युक्त हुनाले उसलाई अन्तरात्मा भनिएको हो ॥१९॥

**आत्मान्तरालवर्तित्वाज्जीवात्मपरमात्मनोः।**
**योगादुभयधर्माणामन्तरात्मेति कीर्तितः।।२०।।**

**भावार्थ** : जीवात्मा र परमात्माका माझमा हुनाले पनि आत्मा ती दुबैका धर्मले युक्त हुन्छ, त्यसै कारण उसलाई अन्तरात्मा भनिएको हो ॥२०॥

**अहङ्कारस्य सम्बन्धान्मनुष्यत्वादिविभ्रमः।**
**न स्वभाव इति ज्ञानादन्तरात्मेति कथ्यते।।२१।।**

**भावार्थ** : अहङ्कार सँग सम्बन्ध हुनाका कारणले जीवलाई मनुष्यत्व आदिको भ्रम हुन्छ । मनुष्यत्व आत्माको स्वभाव होइन, यस्तो ज्ञान हुनाले साधक अन्तरात्मा कहलाउँछ ॥२१॥

**यथा पद्मपलाशस्य न सङ्गो वारिणा भवेत्।**
**तथा देहजुषोऽप्यस्य न शरीरेण सङ्गतिः।।२२।।**

**नीडस्थितो यथा पक्षी नीडाद्भिन्नः प्रदृश्यते।**
**देहस्थितस्तथात्मायं देहादन्यः प्रकाश्यते।।२३।।**

**भावार्थ** : जसरी कमलका पातको जलसँग सम्बन्ध हुँदैन, त्यसरी नै देहका साथमा रहे पनि जीवको देहका साथमा संगति हुँदैन । जसरी गुँडमा रहेको पक्षी गुँडभन्दा अलग देखिन्छ, त्यसरी नै यो आत्मा शरीरमा रहेर पनि शरीरभन्दा पृथक् रूपमा प्रकाशित हुन्छ ॥२२-२३॥



**आच्छाद्यते यथा चन्द्रो मेघैरासङ्गवर्जितैः।**
**तथात्मा देहसङ्घातैरसङ्गपरिवेष्ठितः।।२४।।**

**भावार्थ** : जसरी चन्द्रमा सम्बन्धरहित बादलबाट आच्छादित (ढाकिनु) हुन जान्छ, त्यसरी नै आत्मा पनि सम्बन्ध न भएका शरीर समूहद्वारा ढाकिन्छ ॥२४॥

**निर्ममो निरहङ्कारो निरस्तोपाधिविक्लवः।**
**देहस्थोऽपि सदा ह्यात्मा शिवं पश्यति योगतः।।२५।।**

**भावार्थ** : ममकार एवं अहङ्कारले रहित तथा शरीर इन्द्रिय आदि समस्त उपाधिहरूले रहित आत्मा देहमा स्थित रहेर पनि योगका सामर्थ्यले शिवको साक्षात्कार गर्न समर्थ हुन्छ ॥२५॥

**भोक्तृभोज्यपरित्यागात् प्रेरकस्य प्रसादतः।**
**भोक्तृताभावगलितः स्फुरत्यात्मा स्वभावतः।।२६।।**

**भावार्थ** : भोक्ता र भोज्यको परित्याग गरेर प्रेरक अर्थात् ईश्वरका कृपाले भोक्तृत्वभावले रहित भएर आत्मा आफ्नु स्वभाव अनुसार प्रकाशित हुन्छ॥२६॥

**सर्वेषां प्रेरकत्वेन शम्भुरन्तःस्थितः सदा।**
**तत्परिज्ञानयोगेन योगी नन्दति मुक्तवत्।।२७।।**

**भावार्थ** : भगवान् शिव सबै जीवहरूभित्र प्रेरकका रूपमा स्थित हुनुहुन्छ । यस परिपूर्ण ज्ञान भएको योगी मुक्त भए जस्तै आनन्दको अनुभव गर्दछ ॥२७॥

**परमात्मस्थल - (७४)**

**निर्धूते तत्प्रबोधेन मले संसारकारणे।**
**सामरस्यात् परात्मस्थात् परमात्मायमुच्यते।।२८।।**

**भावार्थ** : **परमात्मस्थल वर्णन**— शिवाद्वैत ज्ञानद्वारा संसारको कारणभूत मल(मैलो) नष्ट भएपछि परात्मामा स्थित सामरस्यका कारणले यो जीव परमात्मा कहलाउँदछ ॥२८॥

CC-0. Jangamwadi Math Digital Collection.

**सर्वेषामात्मभेदानामुत्कृष्टत्वात् स्वतेजसा।**
**परमात्मा शिवः प्रोक्तः सर्वगोऽपि प्रकाशवान्।।२९।।**

**भावार्थ** : आफ्ना तेजले प्रकाशमान तथा सर्वव्यापी शिव सबै आत्म भेदहरूमा उत्कृष्ट हुनाका कारणले परमात्मा कहिन्छन् ।।२९।।

**ब्रह्माण्डबुद्बुदस्तोमा यस्य मायामहोदधौ।**
**उन्मज्जन्ति निमज्जन्ति परमात्मा स उच्यते।।३०।।**

**भावार्थ** : जसको मायारूपी समुद्रमा ब्रह्माण्डरूपी पानीको बुद्बुद् अर्थात् थोप्लाका समूह डुब्दै उत्रिदै गर्छन्, अर्थात् क्षण-क्षणमा ब्रह्माण्डहरू उत्पन्न र नष्ट हुन्छन् उनलाई परमात्मा भनिन्छ ।।३०।।

**यस्मिन् ज्योतिर्गणाः सर्वे स्फुलिङ्गा इव पावकात्।**
**उत्पत्य विलयं यान्ति तद्रूपं परमात्मनः।।३१।।**

**भावार्थ** : जस्ता प्रकारले अग्निबाट स्फुलिङ्ग (झिल्का) को समूह उत्पन्न हुन्छन् र नष्ट हुन्छन् त्यही परमात्माको स्वरूप हो ।।३१।।

**यस्मिन् समस्तवस्तूनि कल्लोला इव वारिधौ।**
**सम्भूय लयमायान्ति तद्रूपं परमात्मनः।।३२।।**

**भावार्थ** : जसरी समुद्रका तरङ्गहरू समुद्रमा उत्पन्न भएर उसैमा विलीन हुन्छन् त्यसरी नै सबै पदार्थहरू जसमा उत्पन्न भएर विलीन हुन्छन्, त्यही परमात्माको स्वरूप हो ।।३२।।

**निरस्तमलसम्बन्धं निःशेषजगदात्मकम्।।३४।।**
**सर्वतत्त्वोपरि प्रोक्तं स्वरूपं परमात्मनः।।३३।।**

**भावार्थ** : परमात्माको स्वरूप सबै प्रकारको मल (मैलो) बाट असम्बद्ध (रहित) तथा समस्त संसारात्मक भएर पनि समस्त तत्त्वहरूभन्दा माथि बताइएको छ ।।३३।।



**यथा व्याप्य जगत्सर्वं स्वभासा भाति भास्करः।**
**तथा स्वशक्तिभिर्व्याप्य परमात्मा प्रकाशते।।३४।।**

**भावार्थ** : जसरी सूर्य आफ्ना तेजले सम्पूर्ण संसारलाई व्याप्त गरेर प्रकाशित हुन्छ, त्यसरी नै आफ्ना शक्तिहरूले समस्त संसारलाई व्याप्त गरेर परमात्माले प्रकाश फैलाउँछन् ।।३४।।

**विशेष**— यो संसार पञ्च महाभूतबाट निर्मित हो । यी भूतहरुमा परमात्माका पाँच शक्तिहरू समवेत रहेर कार्य गर्दछन् । उनको विवरण यस प्रकार छ- पृथ्वी-धूमावती शक्ति, जल-ह्लादिनी शक्ति, तेज-भास्वती, वायु-स्पन्दा, आकाश-विम्बी, यस अतिरिक्त तिरोधानमा-धूमावती, आवभासनमा-भास्वती, क्षोभमा-स्पन्दा, व्याप्तिमा-विम्बि तथा पुष्टिमा-ह्लादिनी शक्तिले कार्य गर्दछन्। यसरी परमेश्वर आफ्ना शक्तिहरुले विश्वलाई व्याप्त गरेर स्थित हुनुहुन्छ ।

**विश्वतो भासमानोऽपि विश्वमायाविलक्षणः।**
**परमात्मा स्वयंज्योतीरूपो जीवात्मनां भवेत्।।३५।।**

**भावार्थ** : परमात्मा सम्पूर्ण विश्वमा भासमान (प्रकाशमान) भएर पनि विश्वमाया बाट विलक्षण हुनुहुन्छ । वहाँ जीवहरूका लागि स्वप्रकाशस्वरूप हुनुहुन्छ ।।३५।।

### निर्देहागमस्थल - (७५)

**देहिनोऽपि परात्मत्वभाविनो निरहङ्कृतेः।**
**निरस्तदेहधर्मस्य निर्देहागम उच्यते।।३६।।**

**भावार्थ** : **निर्देहागमस्थल वर्णन**— अहङ्कार रहित परमात्मभावले युक्त शिवयोगी जहिले देहधर्मबाट रहित हुन्छ तहिले ऊ निर्देहागम कहलाउँछ ।।३६।।

**गलिते ममताहन्ते संसारभ्रमकारणे।**
**पराहन्तां प्रविष्टस्य कुतो देहः कुतो रतिः।।३७।।**

**भावार्थ** : संसारमा भ्रमको कारणभूत ममकार(मेरो मेरो) र अहङ्कार (मँ मँ) नष्ट भए पछि पराहन्तामा प्रविष्ट शिवयोगीको शरीर कहाँ? तथा त्यस शरीरमा

CC-0. Jangamwadi Math Digital Collection.

प्रेम कस्तो? अर्थात् परहन्तामा प्रविष्ट योगीमा न ता ममकारको भावना रहन्छ न त्यस प्रति प्रेम नै रहन्छ ॥३७॥

**केवले निष्प्रपञ्चौघे गम्भीरे चिन्महोदधौ।**
**निमग्नमानसो योगी कथं देहं विचिन्तयेत्।।३८।।**

**भावार्थ** : केवल अर्थात् अद्वितीय, प्रपञ्चबाट रहित, जसको मन गम्भीर चैतन्यरूपी समुद्रमा डुबेको हुन्छ, यस्ता योगीले देहको चिन्ता कसरी अथवा किन गर्छ? अर्थात् गर्दैन ॥३८॥

**अपरिच्छेद्यमात्मानं चिदम्बरमिति स्मरन्।**
**देहयोगेऽपि देहस्थैर्विकारैर्न विलिप्यते।।३९।।**

**भावार्थ** : आफुलाई असीम र चिदाकार स्वरूप मान्ने योगी शरीर सँग सम्बद्ध रहेर पनि शरीरमा रहने काम, क्रोध, लोभ, मोह, मद, मात्सर्य आदि विकारहरूबाट रत्ति पनि प्रभावित हुँदैन ॥३९॥

**अखण्डसंविदाकारमद्वितीयं सुखात्मकम्।**
**परमाकाशमात्मानं मन्वानः कुत्र मुह्यति।।४०।।**

**भावार्थ** : आफुलाई अखण्ड, चिदाकार, अद्वितीय सुखस्वरूप परमात्मा मान्नेवाला (योगी) कहिले पनि काँही पनि मोहग्रस्त हुँदैन ॥४०॥

**उपाधिविहिता भेदा दृश्यन्ते चैकवस्तुनि।**
**इति यस्य मतिः सोऽयं कथं देहमितो भवेत्।।४१।।**

**भावार्थ** : एउटै वस्तुमा जो भेद देखिन्छ, ती भेद उपाधिद्वारा निर्मित हुन् जसको यस्तो बुद्धि (मति) हुन्छ, त्यो योगी देहमा कसरी सीमित हुन सक्छ? ॥४१॥

**भेदबुद्धिः समस्तानां परिच्छेदस्य कारणम्।**
**अभेदबुद्धौ जातायां परिच्छेदस्य का कथा।।४२।।**



**भावार्थ** : समस्त परिच्छेद अर्थात् परिसीमनहरूको कारण भेदबुद्धि हो । अभेदबुद्धि अर्थात् 'सर्वं शिवमयम्' यस्तो बुद्धि भए पछि परिच्छेद(परिसीमन) को सम्भावना कहाँ हुन्छ? अर्थात् हुँदैन ॥४२॥

**शिवोऽहमिति यस्यास्ति भावना सर्वगामिनी।**
**तस्य देहेन सम्बन्धः कथं स्यादमितात्मनः।।४३।।**

**भावार्थ** : 'मँ शिव हूँ' जस्को यस्तो सर्वव्यापिनी भावना हुन्छ, उस अमितात्मा योगीको देहसँग सम्बन्ध कसरी हुन सक्छ? ॥४३॥

### निर्भावागमस्थल - (७६)

**व्यतिरेकात्स्वरूपस्य भावान्तरनिराकृतेः।**
**भावो विकारनिर्मुक्तो निर्भावागम उच्यते।।४४।।**

**भावार्थ** : **निर्भावागमस्थल वर्णन**— आफ्ना निर्देह स्वरूपबाट (अलग) तथा अन्यभावका निराकरणले विकार रहित भावलाई निर्भावागम भनिन्छ ॥४४॥

**अहं ब्रह्मेति भावस्य वस्तुद्वयसमाश्रयः।**
**एकीभूतस्य चिद्व्योम्नि तदभावो विनिश्चितः।।४५।।**

**भावार्थ** : 'मँ ब्रह्म हूँ' यो भाव दुई वस्तु (मँ र ब्रह्म) मा आधारित हुन्छ । चिदाकाशमा एक अर्थात् समरस भए पछि द्वित्वको (दुईको) निश्चितरूपले अभाव हुन्छ ॥४५॥

**एकभावनिरूढस्य निष्कलङ्के चिदम्बरे।**
**क्व जातिवासनायोगः क्व देहित्वं परिभ्रमः।।४६।।**

**भावार्थ** : निष्कलङ्क चिदाकाशमा एकभाव भएका व्यक्तिमा जातिवासना (जातिको दृष्टिले ऊचनीचको भाव) देहको भावना तथा जन्म-मृत्युको बन्धन कसरी हुन सक्छ? ॥४६॥

**शून्ये चिदम्बरे स्थाने दूरे वाङ्मानसाध्वनः।**
**विलीनात्मा महायोगी केन किं वापि भावयेत्।।४७।।**

CC-0. Jangamwadi Math Digital Collection.

**भावार्थ** : वाणी(बोली) र मनको सीमाबाट टाडा अर्थात् शून्य चिदाकाशमा जसको आत्मा विलीन भैसकेको छ, यस्ता योगीले कुनसाधनले कुन साध्यको भावना गरोस् ? ॥४७॥

**अविशुद्धे विशुद्धे वा स्थले दीप्तिर्यथा रवेः।**
**पतत्येवं सदाद्वैती सर्वत्र समवृत्तिमान्॥४८॥**

**भावार्थ** : जसरी सूर्यका किरणहरू शुद्ध अशुद्ध सबै वस्तुहरूमा समान-रूपले प्रकाशित हुन्छन् (पर्दछन्) त्यसरी नै अद्वैती सर्वत्र समान दृष्टिले युक्त हुन्छ ॥४८॥

**न बिभेति जरामृत्योर्न क्षुधया वशं व्रजेत्।**
**परिपूर्णनिजानन्दं समास्वादन् महासुखी॥४९॥**

**भावार्थ** : यस्तो शिवयोगी जरा-मृत्युबाट डराउँदैन । त्यो भोक-तिर्खाको वशमा पनि हुँदैन । परिपूर्ण निजानन्दको आस्वादनमा निमग्न हुँदै त्यो महासुखी हुन्छ ॥४९॥

### नष्टागमस्थल - (७७)

**भेदशून्ये महाबोधे ज्ञात्रादित्रयहीनकः।**
**ज्ञानस्य नष्टभावेन नष्टागम इहोच्यते॥५०॥**

**भावार्थ** : **नष्टागमस्थल वर्णन**— भेदरहित महाबोध उत्पन्न भए पछि योगी ज्ञाता ज्ञान र ज्ञेय यी तीनै बाट रहित हुन्छ । त्यस निर्भावागम योगीको भेदमूलक ज्ञान नष्ट भएकाले उसलाई नष्टागम भनिन्छ । ज्ञाता ज्ञान र ज्ञेयरूप त्रिपुटीको नाश भए पछि मेरो यो त्रिपुट्यात्मक ज्ञान नष्ट भयो भन्ने बोध पनि नष्ट हुनुपर्दछ, यस अवस्थालाई नष्टागम भनिन्छ ॥५०॥

**अद्वैतवासनाविष्टचेतसां परयोगिनाम्।**
**पश्यतामन्तरात्मानं ज्ञातृत्वं कथमन्यथा॥५१॥**



**भावार्थ** : अद्वैतवासनाले परिपूर्णचित्त भएका अन्तरात्माको निरन्तर साक्षात्कार गर्ने परयोगिहरूमा अरु ज्ञातृता (ज्ञान) कसरी हुनसक्छ? अर्थात् उनीहरूले अन्तरात्मादेखि अलग विषयको ज्ञान कसरी गर्न सक्छन् ?॥५१॥

**अकर्ताऽहमवेत्ताहमदेहोऽहं निरञ्जनः।**
**इति चिन्तयतः साक्षात् संविदेव प्रकाशते॥५२॥**

**भावार्थ** : 'मँ कर्ता हुँईन', मँ ज्ञाता हुँईन, मँ देह हुँईन, म निरंजन हूँ यस्तो यस्तो चिन्तन गर्ने शिवयोगी लाई साक्षात् 'संवित्' (परबोध) को मात्र प्रकाश हुन्छ । अर्थात् संवित् सर्वदा प्रकाशित रहन्छ ॥५२॥

**निरस्तभेदजल्पस्य निरीहस्य प्रशाम्यतः।**
**स्वे महिम्नि विलीनस्य किमन्यज्ज्ञेयमुच्यते॥५३॥**

**भावार्थ** : भेदमूलकवाक्य (कथन) लाई हटाउने, इच्छा रहित, शमदमादि युक्त तथा आफ्नु महिमामा विलीन रहने शिवयोगीका लागि अर्को कुन चैं पदार्थ ज्ञेय (जानिने लायक) हुन सक्छ? ॥५३॥

**एकीभूते निजाकारे संविदा निष्प्रपञ्चया।**
**केन किं वेदनीयं तद्वेत्ता कः परिभाष्यते॥५४॥**

**भावार्थ** : स्वस्वरूपको निष्प्रपञ्च संविदाकारको साथमा एकरूपता भै सकेपछि कसद्वारा के वेदनीय होला? तथा कसलाई त्यसको वेत्ता (जाननेवाला) भन्न सकियेला? ॥५४॥

**महासत्ता महासंविद् विश्वरूपा प्रकाशते।**
**तद्विना नास्ति वस्त्वेकं भेदबुद्धिं विमुञ्चतः॥५५॥**

**भावार्थ** : महासत्ता महासंवित् विश्वका रूपमा प्रकाशित भैरहेको छ । भेदबुद्धिले रहित भएका योगीका लागि त्यस अतिरिक्त अर्को कुनै वस्तु शेष रहँदैन ॥५५॥

CC-0. Jangamwadi Math Digital Collection.

### आदिप्रसादिस्थल - (७८)

**सर्वाधिष्ठातृकः शम्भुरादिस्तस्य प्रसादतः।**
**आदिप्रसादीत्युक्तोऽयं निर्विकारपदे स्थितः।।५६।।**

**भावार्थ** : **आदिप्रसादीस्थल वर्णन**— सबैका अधिष्ठाता शिव आदि अर्थात् सृष्टि आदि प्रपञ्चका मूलकारण हुनुहुन्छ। उनका कृपाले निर्विकार पदमा प्रतिष्ठित योगी आदि प्रसादी कहलाउँछ ॥५६॥

**अनेकजन्मशुद्धस्य निरहङ्कारभाविनः।**
**अप्रपञ्चस्यादिदेवः प्रसीदति विमुक्तये।।५७।।**

**भावार्थ** : अनेक जन्ममा साधनाले जो शुद्ध भएको छ, अहङ्कारभावनाले रहित छ, तथा प्रपञ्चबाटहीन (टाडा) छ, यस्ता मनुष्यका मुक्तिका लागि भगवान् शिव प्रसन्न हुनुहुन्छ। श्रीमद्भगवद्गीतामा पनि **'अनेक जन्म संसिद्धस्ततो याति परां गतिम्'** भनिएको छ ॥५७॥

**शिवप्रसादसम्पत्त्या शिवभावमुपेयुषि।**
**शिवादन्यज्जगज्जालं दृश्यते न च दृश्यते।।५८।।**

**भावार्थ** : शिवानुग्रह (शिवकृपा) प्राप्तिद्वारा शिवभावमा प्राप्तभएका योगीका लागि यो संसार शिवबाट भिन्न देखिन्छ पनि तथा देखिन्न पनि अर्थात् यो योगीका इच्छामा निर्भर छ कि ऊ व्यवहार जगत्मा उत्रिएर संसारलाई ईश्वरबाट अगल अनुभवगरोस् (देखोस्) या संसारभन्दा माथि उठेर जगत्लाई शिवस्वरूप या आत्मस्वरूप देखोस् ॥५८॥

**शम्भोः शिवप्रसादेन संसारच्छेदकारिणा।**
**मोहग्रन्थिं विनिर्भिद्य मुक्तिं यान्ति विवेकिनः।।५९।।**

**भावार्थ** : नित्य र अनित्यको भेद जान्ने जनहरू संसारको छेदनगर्ने भगवान् शिवका कल्याणमय कृपा कटाक्षद्वारा मोहग्रन्थिको भेदन गरेर मुक्तिमा प्राप्त हुन्छन् ॥५९॥



**विना प्रसादमीशस्य संसारो न निवर्तते।**
**विना सूर्योदयं लोके कुतः स्यात् तमसो लयः।।६०।।**

**भावार्थ** : ईश्वरको कृपा नभै संसारको निवृत्ति हुँदैन। सूर्योदय न भै संसारमा अन्धकारको लय (नाश) कसरी हुन सक्छ? ॥६०॥

**सर्वानुग्राहकः शम्भुः केवलं कृपया प्रभुः।**
**मोचयेत् सकलान् जन्तून् न किञ्चिदिह कारणम्।।६१।।**

**भावार्थ** : प्रभु अर्थात् सर्वसमर्थहुनाले सबै माथि कृपा गर्ने भगवान् शिव कृपाद्वारा समस्त प्राणिहरूलाई मुक्त गर्नु हुन्छ। यसमोक्षका विषयमा अर्को कुनै कारण छैन ॥६१॥

### अन्त्यप्रसादिस्थल - (७९)

**लयः सर्वपदार्थानामन्त्य इत्युच्यते बुधैः।**
**प्रसादोऽनुभवस्तस्य तद्वानन्त्यप्रसादवान्।।६२।।**

**भावार्थ** : **अन्त्यप्रसादीस्थल वर्णन**— विद्वान्हरू समस्तपदार्थहरूको जय हुनुलाई 'अन्त्य' भन्दछन्। त्यस लयको अनुभव 'प्रसाद' कहलाउँछ। यो प्रसाद जस्मा हुन्छ यो अन्त्यप्रसादी हुन्छ ॥६२॥

**देवतिर्यङ्मनुष्यादिव्यवहारविकल्पना ।**
**मायाकृता परे तत्त्वे तल्लये तत्क्षयो भवेत्।।६३।।**

**भावार्थ** : देवता तिर्यक् अर्थात् पशुपक्षी मनुष्य आदिको व्यवहार विकल्पना मायाद्वारा निर्मित हो। पर तत्त्वमा लय भए पछि मायाको पनि क्षय(नाश) हुन्छ ॥६३॥

**साक्षात्कृते परे तत्त्वे सच्चिदानन्दलक्षणे।**
**क्व पदार्थपरिज्ञानं कुतो ज्ञातृत्वसंभवः।।६४।।**

**भावार्थ** : सत् चित् आनन्द स्वरूप परतत्त्वको साक्षात्कार भए पछि, पदार्थको ज्ञान कसरी हुन सक्छ? तथा ज्ञाताको संभावना कहाँ रहन्छ? अर्थात्

CC-0. Jangamwadi Math Digital Collection.

मायाको सीमा भित्र ज्ञातृज्ञेय सम्बन्ध हुन्छ। माया हटि सके पछि ज्ञाता ज्ञेय आदि पदार्थहरूको अस्तित्व स्वत: समाप्त हुन्छ ॥६४॥

**सुषुप्तस्य यथा वस्तु न किञ्चिदपि भासते।**
**तथा मुक्तस्य जीवस्य न किञ्चिद्वस्तु दृश्यते।।६५।।**

**भावार्थ** : जसरी गहिरो निद्रामा सुतेका व्यक्तिलाई कुनै प्रकारको भान हुँदैन, त्यसरी नै मुक्त भैसकेका जीवलाई कुनै वस्तुको आभास हुँदैन, कि न कि ऊ स्वस्वरूपमा प्रतिष्ठित भै सकेको हुन्छ ॥६५॥

**यथाकाशमविच्छिन्नं निर्विकारं स्वरूपत:।**
**तथा मुक्तस्य जीवस्य स्वरूपमवशिष्यते।।६६।।**

**भावार्थ** : जसरी आकाश स्वरूपत: निर्विकार र अपरिच्छिन्न छ, त्यसरी नै मुक्त जीवको स्वरूप मात्र अवशिष्ट रहन्छ ॥६६॥

**न किञ्चदपि मुक्तस्य दृश्यं कर्तव्यमेव वा।**
**सुखस्फूर्तिस्वरूपेण निश्चला स्थितिरुच्यते।।६७।।**

**भावार्थ** : मुक्त जीवका लागि न कुनै दर्शनीय पदार्थ हुन्छ न ता कुनै कर्तव्य शेष रहन्छ। परमानन्दका स्फुरणले उसको निश्चल स्थिति रहन्छ अथवा हुन्छ ॥६७॥

**शिवाद्वैतपरिज्ञानशिथिलाशेषवस्तुन: ।**
**केवलं संविदुल्लासदर्शिन: केन को भवेत्।।६८।।**

**भावार्थ** : शिवाद्वैतका परिज्ञानले जसको सबै वस्तुहरूमा भेदभाव समाप्त भै सकेको हुन्छ, तथा जसले मात्र संवित् शक्तिको उल्लासको सर्वत्र दर्शन गर्छ, त्यस्ता शिवयोगीलाई इन्द्रिय व्यापार सँग के प्रयोजन? अर्थात् कुनै प्रयोजन अवशिष्ट रहन्न ॥६८॥

**सेव्यप्रसादिस्थल - (८०)**

**सेव्यो गुरु: समस्तानां शिव एव न संशय:।**
**प्रसादोऽस्य परानन्दप्रकाश: परिकीर्त्यते।।६९।।**



**भावार्थ** : **सेव्यप्रसादीस्थल वर्णन**— सेव्य प्रसादी स्थल वर्णन - सबैका लागि शिवमात्र सेव्य गुरु हुनुहुन्छ। सेव्यगुरुको प्रसाद अर्थात् अनुग्रह (कृपा) नै परानन्द प्रकाश कहलाँउछ ॥६९॥

**सेव्यो गुरु: स्मृतो ह्यस्य प्रसादोऽनुभवो मत:।**
**तदेकावेशरूपेण तद्वान् सेव्यप्रसादवान्।।७०।।**

**भावार्थ** : त्यसरी नै शिवयोगी पनि सेव्यगुरु बताइएका छन्। उनको अनुभव प्रसाद कहलाउँछ। जसले यी दुबै गुरु तथा प्रसादलाई एक मान्दछ उसलाई 'सेव्यप्रसादवान्' भनिन्छ ॥७०॥

**गुरुदेव: परं तत्त्वं परतत्त्वं गुरु: स्मृत:।**
**तदेकत्वानुभावेन न किञ्चिदवशिष्यते।।७१।।**

**भावार्थ** : गुरुदेव परं तत्त्व हुनुहुन्छ तथा परतत्त्व नै गुरु हुनुहुन्छ। यी दुबैलाई एकै सम्झे या जाने पछि शेष केही पनि अवशिष्ट रहन्न ॥७१॥

**अपरिच्छेद्यमात्मस्थमवाङ्मानसगोचरम्।**
**आनन्दं पश्यतां पुंसां रतिरन्यत्र का भवेत्।।७२।।**

**भावार्थ** : असीम आत्मा भित्र निवास गर्ने, वाणी र मनको सीमाना भन्दा बाहिर आनन्दको साक्षात् अनुभवगर्ने मनुष्यहरूको अन्य सांसारिक विषयहरूमा प्रीति कसरी हुन सक्छ ? ॥७२॥

**ज्ञानामृतेन तृप्तस्य किमन्यैर्भोज्यवस्तुभि:।**
**ज्ञानादेव परानन्दं प्रकाशयति सच्छिव:।।७३।।**

**भावार्थ** : ज्ञानरूपी अमृतले तृप्त भएका (अघाएका) मनुष्यका लागि अन्य खाद्य पदार्थको के आवश्यकता? सदा शिवज्ञानद्वारा नै परानन्दो प्रकाश फैलाउँनु हुन्छ ॥७३॥

**मुक्तिरेव परा तृप्ति: सच्चिदानन्दलक्षणा।**
**नित्यतृप्तस्य मुक्तस्य किमन्यैर्भोगसाधनै:।।७४।।**

CC-0. Jangamwadi Math Digital Collection.

**भावार्थ** : सच्चिदानन्दस्वरूप मुक्तिनै अन्तिम एवं सर्वोत्कृष्ट तृप्ति हो । जो नित्यतृप्त एवं नित्यमुक्त छ उसलाई भोगका अन्य साधनहरू सँग के प्रयोजन? ॥७४॥

**न बाह्यकर्म तस्यास्ति न चान्तर्नैव कुत्रचित्।**
**शिवैक्यज्ञानरूढस्य देहभ्रान्तिं विमुञ्चतः।।७५।।**

**भावार्थ** : जो शिवैक्य ज्ञानले रूढ अर्थात् परिपूर्ण छ, शिवैक्य ज्ञानका प्रभावले देहभ्रम अर्थात् शरीरलाई नै आत्मा मान्ने भ्रम बाट रहित छ, यस्ता मुक्त पुरुष लागि कहीं पनि बाह्य (बाहिरी) तथा आन्तर (भित्री) कर्म करणीय (गर्ने योग्य) हुँदैन ॥७५॥

**न कर्मबन्धे न तपोविशेषे न मन्त्रयोगाभ्यसने तथैव।**
**ध्याने न बोधे च तथात्मतत्त्वे मनःप्रवृत्तिः परयोगभाजाम्।।७६।।**

**भावार्थ** : जस्ले परयोगमा उच्चस्तर प्राप्त गरेको छ, उनका मनको प्रवृत्ति कर्मबन्धन विशिष्ट तप, मन्त्र योगाभ्यास, ध्यान, बोध आदिमा होइन अपितु आत्मतत्त्वमा हुन्छ ॥७६॥

***ॐ तत्सत् इति श्रीशिवगीतेषु सिद्धान्तागमेषु शिवाद्वैतविद्यायां शिवयोगशास्त्रे श्रीरेणुकागस्त्य संवादे वीरशैवधर्मनिर्णये श्रीशिवयोगिशिवाचार्यविरचिते श्रीसिद्धान्तशिखामणौ लिङ्गस्थलान्तर्गत प्राणलिङ्गीस्थले आत्मस्थलादि-नवविधस्थलप्रसङ्गो नाम अष्टादशः परिच्छेदः।***

**यस प्रकार श्रीसिद्धान्तशिखामणिको प्राणलिङ्गीस्थलविषयक नवविधलिङ्ग प्रसङ्ग नामक अष्टादश परिच्छेदको आचार्य हरिप्रसादअधिकारी कृत सुबोधिनी नामक नेपाली व्याख्या पूर्णभयो ।**

**।। अष्टादशपरिच्छेद पूर्ण भयो ।।**

OOO

CC-0. Jangamwadi Math Digital Collection.

# एकोनविंशः परिच्छेदः

## लिंगस्थलांतर्गत
## शरणस्थल

अगस्त्य उवाच—

**स्थलभेदाः समाख्याताः प्राणलिङ्गिस्थलाश्रिताः।**
**कथय स्थलभेदं मे शरणस्थलसमाश्रितम्।।१।।**

**भावार्थ** : **शरणस्थल वर्णन**— अगस्त्यले भन्नु भयो— हे आचार्य! तपाँइले प्राणलिङ्गी स्थल अन्तर्गत पर्ने गणनीय स्थल भेदहरू बताउनु भयो। अब शरणस्थलमा पर्ने स्थलभेदहरू बताउनु होस् ।।१।।

**शरणस्थलमाश्रित्य स्थलद्वादशकं मया।**
**उच्यते नाम सर्वेषां स्थलानां शृणु तापस ।।२।।**

**भावार्थ** : श्रीरेणुकाचार्यले भन्नु भयो— हे तपस्वी! शरणस्थलमा आश्रित रहने बाह्र स्थलभेदहरू छन्। मँ ती सबैस्थलहरूको नाम बताउँछु। तपाँई श्रवण गर्नुहोस् ।।२।।

**दीक्षापादोदकं पूर्वं शिक्षापादोदकं ततः।**
**ज्ञानपादोदकं चाथ क्रियानिष्पत्तिकं ततः।।३।।**
**भावनिष्पत्तिकं चाथ ज्ञाननिष्पत्तिकं ततः।**
**पिण्डाकाशस्थलं चाथ बिन्द्वाकाशस्थलं ततः।।४।।**
**महाकाशस्थलं चाथ क्रियायाश्च प्रकाशनम्।**
**भावप्रकाशनं पश्चात् ततो ज्ञानप्रकाशनम्।।**
**स्वरूपं पृथगेतेषां कथयामि यथाक्रमम्।।५।।**

**भावार्थ** : ती स्थलहरूको नाम यस प्रकार छ— प्रथम-दीक्षापादोदक, द्वितीय-शिक्षापादोदक, तृतीय-ज्ञानपादोदक, चतुर्थ-क्रियानिष्पत्ति, पञ्चम-भावनिष्पत्ति, षष्ठ-ज्ञाननिष्पत्ति, सप्तम-पिण्डाकाशस्थल, अष्टम-विन्द्वाकाशस्थल, नवम-महाकाशस्थल, दशम-क्रियाप्रकाशस्थल, एकादश-भावप्रकाशस्थल र अन्तमा ज्ञानप्रकाशस्थल हुन्छ। यस पछि इनका स्वरूपको अलग अलग विवरण गर्नें छु - ।।३-५।।

### दीक्षापादोदकस्थल - (८१)

**दीक्षयाऽपगतद्वैतं यज्ज्ञानं गुरुशिष्ययोः।**
**आनन्दस्यैक्यमेतेन दीक्षापादोदकं स्मृतम्।।६।।**

**भावार्थ** : **दीक्षापादोदकस्थल वर्णन**— दीक्षाद्वारा द्वैतभान हटि सके पछि, गुरुशिष्यमा जो उपाधिरहित ज्ञान हुन्छ, त्यसद्वारा दुबैमा आनन्दको दृष्टिले पूर्ण ऐक्य हुन्छ। यस स्थितिलाई ''दीक्षापादोदक'' भनिन्छ ।।६।।

**अथवा पादशब्देन गुरुरेव निगद्यते।**
**शिष्यश्चोदकशब्देन तयोरैक्यं तु दीक्षया।।७।।**

**भावार्थ** : अथवा पादशब्दले गुरुको बोध हुन्छ, तथा उदक शब्दले शिष्यको बोध गराउँछ। दीक्षाद्वारा यी दुबैको ऐक्य हुन्छ ।।७।।

**परमानन्द एवोक्तः पादशब्देन निर्मलः।**
**ज्ञानं चोदकशब्देन तयोरैक्यं तु दीक्षया।।८।।**

**भावार्थ** : पादशब्द निर्मल परमानन्दको वाचक पनि हो तथा उदक पदद्वारा ज्ञानको बोध पनि हुन्छ। दीक्षाद्वारा यी दुबैको ऐक्य हुन्छ ।।८।।

**परसंवित्प्रकाशात्मा परमानन्दभावनाम्।।९।।**
**अधिगम्य महायोगी न भेदं क्वापि पश्यति।।९।।**

**भावार्थ** : परासंवित् प्रकाशरूप भएर परमानन्दभावमा प्राप्त भएका महायोगीले काँही पनि भेद दैख्दैन ।।९।।

CC-0. Jangamwadi Math Digital Collection.

**देशकालाद्यवच्छेदविहीनं　　नित्यनिर्मलम्।**
**आनन्दं प्राप्य बोधेन नान्यत् काङ्क्षति संयमी।।१०।।**

**भावार्थ** : संयमशील योगी देशकाल आदिका सीमा भन्दा बाहिर नित्य निर्मल आनन्दमा मग्न रहने हुनाले कुनै अन्य सांसारिक वस्तुको इच्छा गर्दैन ।।१०।।

**ज्ञानामृतमपि　स्वच्छं　गुरुकारुण्यसम्भवम्।**
**आस्वाद्य　रमते　योगी　संसारामयवर्जितः।।११।।**

**भावार्थ** : केवल गुरुकृपाबाट अत्यन्त निर्मल ज्ञानामृतको आस्वादन गरेर योगी संसाररूपी आमय अर्थात् रोगबाट रहित भएर आत्मस्वरूपमा रमण गर्दछ ।।११।।

**शिक्षापादोदकस्थल - (८२)**

**गुरुशिष्यमयं　ज्ञानं　शिक्षा　योगिनमीर्यते।**
**तयोः　समरसत्वं　हि　शिक्षापादोदकं　स्मृतम्।।१२।।**

**भावार्थ** : **शिक्षापादोदकस्थल वर्णन**— शिक्षा अर्थात् पूर्वोक्त ज्ञानको मनन र गुरुशिष्यको एकरूपताको ज्ञानले योगीलाई प्रेरणाप्राप्त हुन्छ। शिक्षा र ज्ञानको समरसता ''शिक्षापादोदक'' कहलाउँछ ।।१२।।

**मथिताच्छास्त्रजलधेर्युक्तिमन्थानवैभवात्।**
**गुरुणा　लभ्यते　बोधसुधा　सुमनसां　गणैः।।१३।।**

**भावार्थ** : तर्करूपी मन्थन दण्ड (मथानी) ले गुरुद्वारा मथिएका निगमागमशास्त्र-रूपी समुद्रबाट निस्किएको शिवाद्वैतरूपी बोधसुधा विद्वान्हरूद्वारा प्राप्त गरिन्छ ।।१३।।

**ज्ञानचन्द्रसमुद्भूतां　　परमानन्दचन्द्रिकाम्।**
**पश्यन्ति　परमाकाशे　मुक्तिरात्रौ　महाधियः।।१४।।**



**भावार्थ** : महान् बुद्धिमान् योगीजन मुक्तिरात्रिमा (मुक्तिको रात्रिमा) ज्ञानरूपी चन्द्रमाबाट उत्पन्न परमानन्दरूपी चन्द्रिका (चन्द्रमाको प्रकाश) को परमाकाश अर्थात् चिदाकाशमा साक्षात्कार गर्दछन् ।।१४।।

**दृष्टे　तस्मिन्　परानन्दे　देशकालादिवर्जिते।**
**द्रष्टव्यं　विद्यते　नान्यच्छ्रोतव्यं　ज्ञेयमेव　वा।।१५।।**

**भावार्थ** : देशकाल आदिबाट रहित त्यस परानन्दको साक्षात्कार भैसकेपछि, शिवयोगीका लागि कुनै पनि कुरा श्रवणीय अथवा जानने योग्य शेष रहन्न ।।१५।।

**आत्मानन्देन　तृप्तस्य　का　स्पृहा　विषये　सुखे।**
**गङ्गाजलेन　तृप्तस्य　कूपतोये　कुतो　रतिः।।१६।।**

**भावार्थ** : आत्मानन्दले तृप्त शिवयोगीमा विषयसुखको इच्छा कसरी हुन सक्छ? किनकि विषयसुख परिणाममा दुःखदायी हुन्छ तथा आत्मानन्द नित्यनिरन्तर सुखमय हुन्छ । जो मान्छे गङ्गाजनपान गरेर तृप्त भएको छ त्यसले कुवा (इनार) को पानीको चाहना कसरी गर्छ? ।।१६।।

**यस्मिन्नप्राप्तकल्लोले　सुखसिन्धौ　निमज्जति।**
**सामरस्यान्महायोगी　तस्य　सीमा　कुतो　भवेत्।।१७।।**

**भावार्थ** : राग, द्वेष, काम, क्रोध आदि तरङ्ग रहित जुन सुखरूपी समुद्रमा सामरस्यका साथ महायोगी डूबी रहन्छ त्यस समुद्र या आनन्दको सीमा कसरी पत्ता लाग्न सक्छ? अर्थात् त्यस आनन्दलाई सीमित गर्न सकिन्न? ।।१७।।

**गुरुप्रसादचन्द्रेण　　निष्कलङ्केन　　चारुणा।**
**यन्मनःकुमुदं　नित्यबोधितं　तस्य　को　भ्रमः।।१८।।**

**भावार्थ** : निष्कलङ्क एवं सुन्दर गुरुका अनुग्रहरूपी चन्द्रले जसको मनरूपी कुमुद(कमल) नित्य प्रकाशित रहन्छ त्यस मनमा भेदको भ्रान्ति कसरी हुन सक्छ? ।।१८।।

CC-0. Jangamwadi Math Digital Collection.

**ज्ञानपादोदकस्थल - (८३)**

**तदैक्यसम्पदानन्दज्ञानं ज्ञानगुरुर्मत:।।१९।।**
**तत्सामरस्यं शिष्यस्य ज्ञानपादोदकं विदु:।।१९।।**

**भावार्थ** : **ज्ञानपादोदकस्थल वर्णन**— विद्वान्हरूले आनन्दज्ञानलाई ज्ञानगुरु (सबैज्ञानमा श्रेष्ठ) मान्दछन् । त्यस ऐक्य सम्पत्तियुक्त शिष्यको त्यस ज्ञान-सामरस्यलाई 'ज्ञानपादोदक' मानिएको छ ॥१९॥

**अविद्याराहुनिर्मुक्तो ज्ञानचन्द्र: सुनिर्मल:।**
**प्रकाशते पराकाशे परानन्दमहाद्युति:।।२०।।**

**भावार्थ** : अविद्यारूपी राहुबाट निर्मुक्तहुनाले अत्यन्त स्वच्छ तथा परानन्दरूपी महाद्युतियुक्त ज्ञानचन्द्र पराकाश अर्थात् चिदाकाशमा प्रकाशित भैरहन्छ ॥२०॥

**अज्ञानमेघनिर्मुक्त: पूर्णज्ञानसुधाकर:।**
**आनन्दजलधेर्वृद्धिमनुपश्यन् विभासते।।२१।।**

**भावार्थ** : अज्ञानरूपी मेघबाट निर्मुक्त पूर्वज्ञानरूपी चन्द्रमा आत्मरूपी समुद्रको वृद्धि देखेर विशेषरूपले प्रकाशित हुन्छ अर्थात् चम्किन्छ ॥२१॥

**ज्ञानचन्द्रोदये जाते ध्वस्तमोहतमोभरा:।**
**पश्यन्ति परमां काष्ठां योगिन: सुखरूपिणीम्।।२२।।**

**भावार्थ** : ज्ञानरूपी चन्द्रमा उदाये पछि जस्को मोहान्धकार समूह नष्ट भैसकेको छ, यस्ता महायोगीले सुखको पराकाष्ठा अर्थात् आनन्दको अन्तिम सीमाको दर्शन गर्दछन् ॥२२॥

**मायारजन्या विरमे बोधसूर्ये प्रकाशिते।**
**निरस्तसर्वव्यापारश्चित्रं स्वपिति संयमी।।२३।।**

**भावार्थ** : मायारूपी रात्रिको समापन तथा ज्ञानरूपी सूर्यको उदय भए पछि संयमी अर्थात् योगी समस्त व्यवहार बाट रहित भएर सुषुप्ति (गाढनिद्रा मा) स्थित जीवका समान परमानन्दको अनुभव गरीरहन्छन् । सामान्य जनहरूको



व्यवहार दिनमा हुन्छ, यो आश्चर्यको विषय छ कि योगी हरूको व्यवहार निशामा (रात्रिमा) हुन्छ । यस्तै प्रकारको समुल्लेख श्रीमद्भगवद्गीतामा पनि **या निशा सर्वभूतानाम्** .... यस श्लोकमा गरिएको छ ॥२३॥

**अनाद्यविद्याविच्छित्तिवेलायां परयोगिन:।**
**प्रकाशते परानन्द: प्रपञ्चेन विना कृत:।।२४।।**

**भावार्थ** : अनादि अविद्या (अज्ञान) को निवृत्तिकालमा योगीलाई प्रपञ्च रहित परानन्दके भान हुन्छ । शैवशास्त्रमा आनन्द दुईप्रकारको बताइएको छ - सप्रपञ्चानन्द र निष्प्रपञ्चानन्द । सप्रपञ्चानन्द विषयानन्दको अर्को नाम हो । यसैगरि निष्प्रपञ्चानन्द पनि परापरभेदले दुईप्रकारको हुन्छ ॥२४॥

**नित्यानन्दे निजाकारे विमले परतेजसि।**
**विलीनचेतसां पुंसां कुतो विश्वविकल्पना।।२५।।**

**भावार्थ** : नित्य आनन्दस्वरूप निर्मल निजस्वरूप परतेज अर्थात् चिदादित्यमा जस्को चित्त लीन भएको हुन्छ, त्यस्ता योगिजनहरूका लागि विश्वकल्पना कसरी हुन सक्छ? २५॥

**कुतो ब्रह्मा कुतो विष्णु: कुतो रुद्र: कुतो रवि:।**
**साक्षात्कृतपरानन्दज्योतिष: साम्यकल्पना।।२६।।**

**भावार्थ** : काहाँ ब्रह्मा, काहाँ विष्णु, काहाँ रुद्र, र काहाँ सूर्य? जसले परानन्दतेजको साक्षात्कार गरेको छ उसको तुलना कुनै सँग पनि हुन सक्दैन ॥२६॥

**अपरोक्षपरानन्दविलासस्य महात्मन:।**
**ब्रह्मविष्ण्वादयो देवा विशेषा: सुखबिन्दव:।।२७।।**

**भावार्थ** : जो अपरोक्ष परानन्दका विलासले परिपूर्ण छ यस्ता महात्मा अर्थात् शिवयोगीको तुलनामा ब्रह्मा विष्णु आदि देवगण सुख का विशिष्ट बिन्दु (थोपा) समान मात्र हुन्छन् ॥२७॥

CC-0. Jangamwadi Math Digital Collection.

**यन्मात्रासहितं लोके वाञ्छन्ति विषयं नराः।**
**तदप्रमेयमानन्दं परमं को न वाञ्छति।।२८।।**

**भावार्थ** : यस संसारमा मनुष्यहरू जसको एकमात्रा अर्थात् एकांश मात्र आनन्दको कामना गर्दछन्, त्यस परम अप्रमेय आनन्दलाई कसले चाहन्न? ।।२८।।

**क्रियानिष्पत्तिस्थल - (८४)**

**परकाये क्रियापत्तिः कल्पितैव प्रकाशते।**
**रज्जौ भुजङ्गवद् यस्मात् क्रियानिष्पत्तिमानयम्।।२९।।**

**भावार्थ** : **क्रियानिष्पत्तिस्थल वर्णन**— परकाय अर्थात् परब्रह्मस्वरूप शिवयोगीमा क्रिया कल्पित रूपमा देखिन्छ । त्यसकारण रज्जुमा (डोरिमा) सर्प जस्तै (सर्पको भान भये जस्तै) शिवयोगी पनि क्रियाको कर्ता जस्तो देखिन्छ अर्थात् शिवयोगीका शरीरमा क्रियाको दर्शन भ्रममात्र हो । वस्तुतः शिवस्वरूप हुनाले शिवयोगी निष्कल निष्क्रिय र शान्त स्थितिमा प्राप्त हुन्छ ।।२९।।

**ज्ञानिनां यानि कर्माणि तानि नो जन्महेतवः।**
**अग्निदग्धानि बीजानि यथा नाङ्कुरकारणम्।।३०।।**

**भावार्थ** : ज्ञानिहरूद्वारा गरिएका कर्महरू जन्मका हेतु बन्दैनन्, जस्तै आगामा डडेका बीज अङ्कुरोत्पत्तिको कारण हुन सक्दैनन् ।।३०।।

**कर्मणा किं कृतेनापि ज्ञानिनो निरहङ्कृतेः।**
**विक्रिया प्रतिबिम्बस्था किं करोति हिमद्युतेः।।३१।।**

**भावार्थ** : अलङ्कार रहित ज्ञानी द्वारा गरिएका कर्मले के हुन्छ? अर्थात् ती कर्महरूको ज्ञानीमा कुनै प्रभाव पर्दैन । हिमद्युति अर्थात् चन्द्रमाका प्रतिबिम्बमा घटित हुने विकारले के हुन्छ? ।।३१।।

**चन्द्रस्य मेघसम्बन्धाद् यथा गमनकल्पना।**
**तथा देहस्य सम्बन्धादारोप्या स्यात् क्रियात्मनः।।३२।।**



**भावार्थ** : जसरी मेघका साथमा सम्बन्ध हुनाले चन्द्रमा चल्दैगरेका जस्ता देखिन्छन्/त्यसरी नै देहसँग सम्बन्ध हुनाले, आत्मामा क्रिया आरोपित हुन्छ ।।३२।।

**ज्ञानी कर्मनिरूढोऽपि लिप्यते न क्रियाफलैः।**
**घृतादिना यथा जिह्वा भोक्त्री चापि न लिप्यते।।३३।।**

**भावार्थ** : जस्ताप्रकारले घृत आदि पदार्थको भोग गर्ने जिह्वा (जिभ्रो) घृत आदि पदार्थहरूबाट उपलिप्त (प्रभावित) हुँदैन, त्यसै प्रकारले ज्ञानीजन पनि सम्पूर्णकर्महरू गर्दै रहे पनि उनका फलद्वारा उपलिप्त हुँदैन ।।३३।।

**निरस्तोपाधिसम्बन्धे जीवे या या क्रियास्थितिः।**
**सा सा प्रतीतिमात्रेण निष्फला चात्र लीयते।।३४।।**

**भावार्थ** : अहङ्कार र ममकार रूप सम्बन्धले रहित भएका जीवका जो जो क्रिया हुन्छन् ती ती प्रतीति मात्र अर्थात् निष्फल हुन्छन् ।।३४।।

**गच्छंस्तिष्ठन् स्वपन् वापि न निष्कर्मास्ति कश्चन।**
**स्वभावो देहिनां कर्म ज्ञानिनां तत्तु निष्फलम्।।३५।।**

**भावार्थ** : हिंड्दै बस्दै तथा सुत्दै रहेर पनि कुनै शरीरी कर्मरहित हुन सक्दैन किनकि सबै अवस्थामा देहधारीहरुद्वारा कर्म भैनै रहन्छन् किन कि कर्म गर्नु शरीरधारीको स्वभाव हो । अन्तर यतिमात्र छ कि - अज्ञानीहरूका कर्मले समय पुगेपछि फल दिन्छन्, किन्तु ज्ञानीहरूद्वारा गरिएका कर्महरू फलदिनमा समर्थ हुँदैनन् । अर्थात् असमर्थ हुन्छन् ।।३५।।

**परिपूर्णमहानन्दभाविनः शुद्धचेतसः।**
**न भवेत् कर्मकार्पण्यं नानाभोगफलप्रदम्।।३६।।**

**भावार्थ** : जो शुद्धचित्त हुनाले परिपूर्ण महानन्दभावनाले ओतप्रोत छन् तिनलाई भोगरूपी फल दिने कर्मले तथा कर्मजन्य दुःख आदिले छुँदैन ।।३६।।

CC-0. Jangamwadi Math Digital Collection.

**भावनिष्पत्तिस्थल - (८५)**

**भावः प्रतीयमानोऽपि परकाये तु कल्पितः।**
**शुक्तौ रजतवद् यस्माद्भावनिष्पत्तिमानयम्।।३७।।**

**भावार्थ** : **भावनिष्पत्तिस्थल वर्णन**— परकाय अर्थात् परब्रह्मशरीरधारी शिवयोगी भित्र प्रतीत हुने वाला भाव पनि कल्पित हुन्छ (वास्तविक हुँदैन) यो ज्ञान शुक्तिमा रजत ज्ञान जस्तै भ्रमात्मक हुन्छ । यस कारण यस योगीलाई भावनिष्पत्तिमान् 'भनिन्छ' ।।३७।।

**भावेन नास्ति सम्बन्धः केवलज्ञानयोगिनः।**
**तथापि भावं कुर्वीत शिवे संसारमोचके।।३८।।**

**भावार्थ** : यद्यपि केवल ज्ञानयोगीको भाव सँग कुनै सम्बन्ध हुँदैन तथापि शिवयोगीले संसारबन्धनबाट मुक्तिदिलाउने शिवप्रति आराध्यको भावना गर्नु पर्दछ ।।३८।।

**परिपूर्णप्रबोधेऽपि भावं शम्भौ न वर्जयेत्।**
**भावो हि निहितस्तस्मिन् भवसागरतारकः।।६९।।**

**भावार्थ** : प्रबोध परिपूर्ण भए छँदामा पनि शिव प्रति सेव्यसेवकभावको त्याग गर्नु हुँदैन किन कि भवसागरबाट पार गराउने भाव शिवमा निहित हुन्छ ।।३९।।

**निवर्त्य जन्मजं दुःखं भावः शैवो निवर्तते।**
**यथा काष्ठादिकं दग्ध्वा स्वयं शाम्यति पावकः।।४०।।**

**भावार्थ** : शैवभावको आवश्यकता जन्मजन्य दुःखको निवृत्ति सम्म मात्र हुन्छ जन्म हेतुक दुःखको निराकरण गरे पछि शैवभाव त्यसरी नै शान्त हुन्छ, जसरी दाउरा आदिलाई जलाई सके पछि अग्नि शान्त हुन्छ ।।४०।।

**प्रकाशिते शिवानन्दे तद्भावैः किं प्रयोजनम्।**
**सिद्धे साध्ये चिरेणापि साधनैः किं प्रयोजनम्।।४१।।**



**भावार्थ** : शिवानन्द प्रकटभएपछि त्यसको भाव अर्थात् शिवप्रति आराध्य आराधक भावको के प्रयोजन? अर्थात् ती सबै निष्फल हुन्छन् । धेरै विलम्बले भए पनि साध्य सिद्धभैसके पछि साधनहरूको के प्रयोजन? ।।४१।।

**एकीकृते शिवे भावे ज्ञानेन सह संयमी।**
**विस्मितात्मसमावेशः शिवभावे विभासते।।४२।।**

**भावार्थ** : ज्ञानका साथ शिवभावना एक भये पछि शिवसमावेशानन्दमा निमग्न आश्चर्य चकित संयमी शिवका रूपमा विशेषरूपले प्रकाशित हुन्छ ।।४२।।

**न भावेन विना ज्ञानं न भावो ज्ञानमन्तरा।**
**मोक्षाय कारणं प्रोक्तं तस्मादुभयमाश्रयेत्।।४३।।**

**भावार्थ** : भाव बिना ज्ञान हुँदैन तथा ज्ञान बिना भाव पनि हुँदैन त्यसकारण मोक्षप्रति कारण भएका यी दुबैको आश्रय ग्रहण गर्नु पर्दछ ।।४३।।

**ज्ञाननिष्पत्तिस्थल - (८६)**

**ज्ञानस्य व्यवहारेऽपि ज्ञेयाभावात् स्वभावतः।**
**स्वप्नवज्ज्ञाननिष्पत्त्या ज्ञाननिष्पन्न इत्यसौ।।४४।।**

**भावार्थ** : **ज्ञाननिष्पत्तिस्थल वर्णन**— शिवज्ञानसम्पन्न शिवयोगीका व्यवहारमा पनि उसका ज्ञानको विषय स्वभावतः केही हुँदैन किनकि जीवदेखि अतिरिक्त उसलाई केही पनि प्रतीत हुँदैन । फलतः उसका ज्ञानको निष्पत्ति स्वप्नवत् हुन्छ यस्तो शिवयोगी 'ज्ञान-निष्पन्न' कहलाउँछ ।।४४।।

**स्वप्नजातं यथा ज्ञानं सह स्वार्थैर्निवर्तते।**
**तथात्मनि प्रकाशे तु ज्ञानं ज्ञेयं निवर्तते।।४५।।**

**भावार्थ** : जसरी स्वप्नमा उत्पन्न ज्ञान आफ्ना घटपट आदि विषयहरूका साथमा नष्ट हुन्छ, त्यसरी नै आत्मस्वरूप प्रकाशित भैसके पछि ज्ञान र ज्ञेय यी दुवै निवृत्त हुन्छन् ।।४५।।

CC-0. Jangamwadi Math Digital Collection.

**परिपूर्णे महानन्दे परमाकाशलक्षणे।**
**शिवे विलीनचित्तस्य कुतो ज्ञेयान्तरे कथा।।४६।।**

**भावार्थ** : परिपूर्ण महानन्दस्वरूप अतएव परमाकाशलक्षणयुक्त शिवमा जसको चित्तविलीन भएको हुन्छ, यस्ता शिवयोगीका लागि अन्य ज्ञेयविषयहरूको चर्चा किन गर्नु? अर्थात् उसका लागि अन्य ज्ञेयविषय शेष रहँदैन ॥४६॥

**अखण्डानन्दसंवित्तिस्वरूपं ब्रह्म केवलम्।**
**मिथ्या तदन्यदित्येषा स्थितिर्ज्ञानमिहोच्यते।।४७।।**

**भावार्थ** : अखण्ड आनन्द र अखण्ड ज्ञानस्वरूप ब्रह्मनै एकमात्र सत्य हो। त्यस देखि भिन्न सबै वस्तुहरू मिथ्या हुन् । यस संसार अथवा यस विषयमा यस प्रकारको स्थिति उत्पन्न हुनुलाई ज्ञान भनिन्छ ॥४७॥

**सत्तात्मनानुवृत्तं यद् घटादिषु परं हि तत्।**
**व्यावर्तमाना मिथ्येति स्थितिर्ज्ञानमिहोच्यते।।४८।।**

**भावार्थ** : जो घटादि सत्ताका रूपमा अनुवृत्त अर्थात् व्याप्त छ - घटोऽस्ति, पटोऽस्ति, मठोऽस्ति आदि सबैतिर अस्तित्वका रूपमा जो भासित छ, त्यही परतत्त्व अर्थात् शिव हुन् जो व्यावर्तमान हुन्छ अर्थात् एक उपस्थित भएमा अर्को रहन्न जस्तै घट रहँदा पट रहँदैन। ती सबै मिथ्या हुन् । स्तो स्थिति उत्पन्न हुनुलाई ज्ञान भनिन्छ ॥४८॥

**अकारणमकार्यं यदशेषोपाधिवर्जितम्।**
**तद्ब्रह्म तदहं चेति निष्ठा ज्ञानमुदीर्यते।।४९।।**

**भावार्थ** : जो कारण कार्य आदि सबै उपाधिहरूले शून्य छ त्यो ब्रह्म हो तथा म पनि त्यही हूँ । यस्तो भावना दृढ हुनु लाई ज्ञान भनिन्छ ॥४९॥

**ज्ञाताप्यहं ज्ञेयमिदमिति व्यवहृतिः कुतः।**
**अभेदब्रह्मस्वारस्ये निरस्ताखिलवस्तुनि।।५०।।**

**भावार्थ** : समस्त सांसारिक प्रपञ्चबाट रहित अभेद ब्रह्मका सामरस्यमा म ज्ञाता हूँ यो ज्ञेय (जानने योग्य हो) यस्तो व्यवहार कसरी संभव हुन सक्छ?॥५०॥



**पिण्डाकाशस्थल - (८७)**

**यथा पिण्डस्थ आकाशस्तथात्मा पूर्ण उच्यते।**
**एतदर्थविवेको यः पिण्डाकाशस्थलं विदुः।।५१।।**

**भावार्थ** : **पिण्डाकाशस्थल वर्णन**— जसरी यस पिण्ड अर्थात् शरीरमा स्थित आकाश पूर्ण मानिन्छ अथवा बताइन्छ त्यसरी नै यस पिण्डमा स्थित आत्मा पनि पूर्ण कहलाउँछ यस अर्थको विशिष्ट ज्ञान नै पिण्डाकाशस्थल कहलाउँछ ॥५१॥

**घटोपाधिर्यथाकाशः परिपूर्णः स्वरूपतः।**
**तथा पिण्डस्थितो ह्यात्मा परिपूर्णः प्रकाशते।।५२।।**

**भावार्थ** : जसरी घटरूप उपाधिले युक्त आकाश स्वरूपतः परिपूर्ण हुन्छ त्यसरी नै शरीरमा स्थित परिपूर्ण आत्मा प्रकाशित हुन्छ ॥५२॥

**अन्तःस्थितं पराकाशं शिवमद्वैतलक्षणम्।**
**भावयेद् यः सुमनसा पिण्डाकाशः स उच्यते।।५३।।**

**भावार्थ** : अद्वैत लक्षणयुक्त शिवको जसले अन्तःस्थित पराकाशका रूपमा शुद्धमनले भावना गर्दछ त्यसलाई **'पिण्डाकाश'** भनिन्छ ॥५३॥

**शिवागारमिदं प्रोक्तं शरीरं बोधदीपितम्।**
**षट्त्रिंशत्तत्त्वघटितं सुमनःपद्मपीठकम्।।५४।।**

**भावार्थ** : छत्तीस तत्त्वबाट रचित शुद्धमनरूपी कमलपीठले युक्त तथा शिवज्ञानात्मक बोधद्वारा दीपित (प्रकाशित) यो शरीर शिवको आगार अर्थात् आवासस्थल मानिएको छ ॥५४॥

**पराकाशस्वरूपेण प्रकाशः परमेश्वरः।**
**हृदाकाशगुहालीनो दृश्यतेऽन्तः शरीरिणाम्।।५५।।**

**भावार्थ** : पराकाशरूपमा प्रकाशित अथवा प्रकाशमान परमेश्वर जीवहरूभित्र रहने हृदयाकाशरूपी गुफामा लीन देखिनु हुन्छ ॥५५॥

CC-0. Jangamwadi Math Digital Collection.

**एतच्छिवपुरं प्रोक्तं सप्तधातुसमावृतम्।**
**अत्र हृत्पङ्कजं वेश्म सूक्षाम्बरमनोहरम्।।५६।।**
**तत्र सन्निहितं साक्षात् सच्चिदानन्दलक्षणम्।**
**नित्यसिद्धं प्रकाशात्मा जलस्थाकाशवच्छिवः।।५७।।**

**भावार्थ** : सप्तधातु(रस, रुधिर, माँस, चर्बी(बोसो) हड्डी, मज्जा र वीर्य) बाट निर्मित यो शरीर शिवको पुर बताइएको छ । यसमा सूक्ष्माकाशयुक्त मनोहरहृदयकमल शिवको अन्त:पुर हो त्यसमा साक्षात् सच्चिादानन्दस्वरूप नित्य सिद्ध प्रकाशमान शिव जलमा स्थित आकाशका समान सर्वदा विराजमान रहनुहुन्छ ।।५६-५७।।

**अन्तराकाशबिम्बस्थमशेषोपाधिवर्जितम् ।।५८।।**
**घटाकाश इव च्छिन्नं भावयेच्चिन्मयं शिवम्।।५८।।**

**भावार्थ** : योगीले हृदयाकाश बिम्बमा स्थित समस्त उपाधिहरूबाट रहित, चिन्मय शिवको घटाकाशसमान परिच्छिन्नरूपमा भावना गर्नु पर्छ। जसरी महाकाश घडाबाट अवच्छिन्न भएर पनि आकाशनै हो त्यसरी नै शिव हृदयले अवच्छिन्न भए पनि शिवनै हुन् यस्तो भावना गर्नु पर्दछ ।।५८।।

### बिन्द्वाकाशस्थल - (८८)

**यथाकाशो विभुर्ज्ञेयः सर्वप्राण्युपरि स्थितः।**
**तथात्मेत्युपमानार्थं बिन्द्वाकाशस्थलं विदुः।।५९।।**

**भावार्थ** : **बिन्द्वाकाशस्थल वर्णन**— सबै प्राणिहरूभन्दा माथि रहने आकाश जसरी व्यापक मानिन्छ त्यसैगरि आत्मा पनि समस्त प्राणिका शरीरभित्र परिच्छिन्नरूपले रहेर पनि व्यापक छ, यस तुलनाको अर्थलाई विद्वान्हरू विन्द्वाकाशस्थल भन्दछन् ।।५९।।

**यथैको वायुराख्यातः सर्वप्राणिगतो विभुः।**
**तथात्मा व्यापकः साक्षात् सर्वप्राणिगतः स्वयम्।।६०।।**



**भावार्थ** : जसरी एउटै व्यापक वायु समस्त प्राणिहरूमा रहन्छ त्यसरी नै एक आत्मा नै साक्षात् स्वयं समस्त प्राणिहरूमा रहन्छ तथा व्यापक छ । अर्थात् प्राणिहरू भित्र एवं बाहिर सर्वत्र आत्मा स्थित छ ।।६०।।

**यथा वह्निरमेयात्मा सर्वत्रैकोऽपि भासते।।६१।।**
**तथा शम्भुः समस्तात्मा परिच्छेदविवर्जितः।।६१।।**

**भावार्थ** : जसरी अपरिमेय अग्नि एउटै भये पनि सर्वत्र भासित (प्रकाशित) हुन्छ त्यसरी नै सबैका आत्मस्वरूप शिव पनि एक भएर पनि अपरिसीम छन्, अर्थात् परिसीमन भन्दा बाहिर छन् ।।६१।।

**सर्वेषां देहिनामन्तश्चित्ततोऽयं प्रकाशते।**
**तस्मिन् प्रतिफलत्यात्मा शिवो दर्पणवद् विभुः।।६२।।**

**भावार्थ** : सबै जीवहरूभित्र चित्तरूपी जल प्रकाशित भैरहन्छ । दर्पण जस्तै गरी चित्तरूपी जलमा आत्मारूपी शिव प्रतिबिम्बित हुनुहुन्छ । त्यसै कारण चित्तलाई स्वच्छ पवित्र राख्नु पर्छ ।।६२।।

**एको वशीकृतः संवित्प्रकाशात्मा परात्परः।।६३।।**
**सर्वप्राणिगतो भाति तथापि विभुरुच्यते।।६३।।**

**भावार्थ** : परात्पर हुनाले अवशीकृत अर्थात् कसैको नियन्त्रणमा न रहने अर्थात् सर्वतन्त्रस्वतन्त्र प्रकाश स्वरूप परमेश्वर समस्त प्राणिहरूमा प्रकाशित भैरहेको छ । यसरी अव्यापक देखिए पनि परमात्मा सर्वव्यापक छ, उसको दृश्यमान अव्यापकता उपाधि हेतुकी हो।।६३।।

**एक एव यथा सूर्यस्तेजसा भाति सर्वगः।**
**तथात्मा शक्तिभेदेन शिवः सर्वगतो भवेत्।।६४।।**

**भावार्थ** : जस्तै एउटै सर्वगामी सूर्य आफ्ना तेजले भासित हुन्छ, त्यसरी नै परमात्मा शिवपनि शक्तिभेदले सर्वव्यापी हुनुहुन्छ ।।६४।।

CC-0. Jangamwadi Math Digital Collection.

महाकाशस्थल - (८९)

**पिण्डाण्डस्थं महाकाशं न भिन्नं तद्वदात्मनः।**
**अभिन्नः परमात्मेति महाकाशस्थलं विदुः।।६५।।**

**भावार्थ** : **महाकाशस्थल वर्णन**— जसरी पिण्ड अर्थात् शरीर एवं अण्ड अर्थात् ब्रह्माण्ड (प्राकृताण्ड अथवा मायाण्ड) मा स्थित आकाश परस्पर भिन्न हुँदैन त्यसरी नै जीवात्मा देखि परमात्मा अभिन्न छन् इनलाई जान्नु महाकाशस्थल कहलाउँछ ।।६५।।

**यथा न भिन्नमाकाशं घटेषु च मठेषु च।**
**तथाण्डेषु पिण्डेषु स्थितो ह्यात्मा न भिद्यते।।६६।।**

**भावार्थ** : जसरी घट(घडा) र मठ आदिमा रहेको आकाश भिन्न हुँदैन त्यसरी नै ब्रह्माण्ड र ब्रह्माण्डभित्र रहने व्यक्तिको शरीरहरूमा रहेको आत्मा पनि भिन्न हुँदैन ।।६६।।

**अनिर्देश्यमनौपम्यमवाङ्मानसगोचरम्।**
**सर्वतोमुखसम्पन्नं सत्तानन्दं चिदात्मकम्।।६७।।**

**कालातीतं कलातीतं क्रमयोगादिवर्जितम्।**
**स्वानुभूतिप्रमाणस्थं ज्योतिषामुदयस्थलम्।।६८।।**

**शिवाख्यं परमं ब्रह्म परमाकाशलक्षणम्।**
**लिङ्गमित्युच्यते सद्भिर्यद्विना न जगत्स्थितिः।।६९।।**

**भावार्थ** : अनिर्देश्य, अतुलनीय, वाणी र मनको विषय न हुने, सर्वतोमुखी सच्चित् आनन्दस्वरूप, कालातीत, कलातीत अर्थात् अड्तीस कलाहरूले रहित, उत्पत्ति आदि क्रमबाट रहित, आफ्नो अनुभवनै जस्मा प्रमाण हुन्छ यस्ता नक्षत्र चन्द्र सूर्य आदिका उत्पत्तिको मूल कारण परमाकाश स्वरूप शिवनामक परब्रह्म लाई सत्पुरुषहरूद्वारा लिङ्ग भनिन्छ । त्यस लिङ्ग बिना संसारको सत्ता संभव छैन ।।६७-६९।।



**परमाकाशमव्यक्तं प्रबोधानन्दलक्षणम्।**
**लिङ्गं ज्योतिर्मयं प्राहुर्लीयन्ते यत्र योगिनः।।७०।।**

**भावार्थ** : जसमा योगीजनहरू लीन हुन्छन् त्यस परमाकाश अव्यक्त चिदानन्द स्वरूप ज्योतिर्मय तत्त्वलाई विद्वान्हरूले लिङ्ग भन्दछन् ।।७०।।

**संविदेव परा काष्ठा परमानन्दरूपिणी।**
**तामाहुः परमाकाशं मुनयो मुक्तसंशयाः।।७१।।**

**भावार्थ** : परमानन्दरूपिणी संविद् नै पराकाष्ठा अर्थात् अंतिम सीमा हो । संशय रहित मुनिगणहरू उसलाई परमाकाश भन्दछन् ।।७१।।

**तरङ्गादि यथा सिन्धोः स्वरूपान्नातिरिच्यते।**
**तथा शिवाच्चिदाकाशाद् विश्वमेतन्न भिद्यते।।७२।।**

**भावार्थ** : जस्ता प्रकारले समुद्रमा उठ्ने तरङ्गहरू समुद्रका स्वरूपदेखि भिन्न हुँदैनन्, त्यस्तै प्रकारले चिदाकाशरूपी शिवबाट उत्पन्न हुने यो विश्व शिवबाट भिन्न हुँदैन ।।७२।।

**यथा पुष्पपलाशादि वृक्षरूपान्न भिद्यते।**
**तथा शिवात् पराकाशाज्जगतो नास्ति भिन्नता।।७३।।**

**भावार्थ** : जसरी रुखका फूलपातहरू वृक्षबाट भिन्न हुँदैनन्, त्यसरी नै जगत् पराकाशरूप शिवबाट भिन्न हुँदैन ।।७३।।

**यथा ज्योतींषि भासन्ते भूताकाशे पृथक् पृथक्।**
**तथा भान्ति पराकाशे ब्रह्माण्डानि विशेषतः।।७४।।**

**भावार्थ** : जसरी भूताकाशमा नक्षत्रगण अलग-अलग प्रकाशित हुन्छन् त्यसरी नै पराकाशमा ब्रह्माण्डहरू असंख्यरूपमा घूमीरहेका हुन्छन् ।।७४।।

**निरस्तोपाधिसम्बन्धं निर्मलं संविदात्मकम्।**
**पराकाशं जगच्चित्रविलासालम्बभित्तिकाम्।।७५।।**

CC-0. Jangamwadi Math Digital Collection.

**भावार्थ** : उपाधिसम्बन्धबाटरहित निर्मल संवित् स्वरूप आकाश जगत्को चित्रविचित्र विलास अर्थात् विस्तारको आधारभित्ति हो ॥७५॥

**क्रियाप्रकाशस्थल - (९०)**

**शिवस्य परिपूर्णस्य चिदाकाशस्वरूपिणः।**
**आत्मत्वेनानुसन्धनात् क्रियाद्योतनवान् यमी।।७६।।**

**भावार्थ** : **क्रियाप्रकाशस्थल वर्णन**— चिदाकाशस्वरूप परिपूर्ण शिवको आत्माका रूपमा अनुसन्धान गर्नाले संयमी क्रियाप्रकाशवान् हुन्छ ॥७६॥

**निष्कलङ्कचिदानन्दगगनोपमरूपिणः ।**
**शिवस्य परिपूर्णस्य वृत्तिश्चैतन्यरूपिणी।।७७।।**

**भावार्थ** : निष्कलङ्क चिदानन्द आकाशरूप परिपूर्ण शिवको वृत्ति अर्थात् म शिव हूँ, यो भावना चित्स्वरूप हो ॥७७॥

**निष्कलङ्के निराकारे नित्ये परमतेजसि।**
**विलीनचित्तवृत्तस्य तथा शक्तिः क्रियोच्यते।।७८।।**

**भावार्थ** : निष्कलङ्क निराकार नित्य एवं परमतेजःस्वरूपशिवमा चित्तवृत्ति विलीन भएका शिवयोगीको त्यस प्रकारको शक्ति क्रिया कहिन्छ ॥७८॥

**सर्वज्ञः सर्वकर्ता च सर्वगः परमेश्वरः।**
**तदैक्यचिन्तया योगी तादृशात्मा प्रकाशते।।७९।।**

**भावार्थ** : परमेश्वर सर्वज्ञाता सर्वकर्ता र सर्वव्यापी छन् । उनका साथका ऐक्यभावनाद्वारा योगी तादृशात्मा अर्थात् सर्वज्ञाता सर्वकर्ता आदिका रूपमा प्रकाशित हुन्छ ॥७९॥

**सर्वेन्द्रियाणां व्यापारे विद्यमानेऽपि संयमी।**
**प्रत्युन्मुखेन मनसा शिवं पश्यन् प्रमोदते।।८०।।**

**भावार्थ** : संयमी शिवयोगी आफ्ना एवं इन्द्रियहरूका सबै व्यापार विद्यमान भए छँदामा पनि प्रत्युन्मुख अर्थात् त्यसबाट विपरीत स्थितिमा स्थित भएर मनद्वारा शिवको साक्षात्कार गर्दै प्रमुदित हुन्छ ॥८०॥



**कूटस्थमचलं प्राज्ञं गुणातीतं गुणोत्तरम्।**
**शिवतत्त्वस्वरूपेण पश्यन् योगी प्रमोदते।।८१।।**

**भावार्थ** : कूटस्थ अचल प्रकृष्ट ज्ञानवान् गुण देखि टाडा शिवतत्त्वलाई स्वरूपमा हेर्दै अर्थात् उक्तगुणवाला शिव म नै हूँ यस्तो बोध भएको शिवयोगी सर्वदा आनन्दमा निमग्न रहन्छ ॥८१॥

**परात्मनि क्रिया सर्वा गन्धर्वनगरीमुखा।**
**प्रकाशत इति प्रोक्तं क्रियायास्तु प्रकाशनम्।।८२।।**

**भावार्थ** : जब परमात्मामा घटित हुने सबै क्रियाहरू गन्धर्व नगरी का समान प्रकाशित हुन्छन्, यसलाई क्रियाप्रकाशन भनिन्छ ॥८२॥

**भावप्रकाशस्थल - (९१)**

**तरङ्गाद्या यथा सिन्धौ न भिद्यन्ते तथात्मनि।**
**भावा बुद्ध्यादयः सर्वे यत्तद् भावप्रकाशनम्।।८३।।**

**भावार्थ** : **भावप्रकाशस्थल वर्णन**— भावप्रकाशनस्थलवर्णन - जसरी समुद्रमा उठ्ने तरङ्गहरू समुद्रबाट भिन्न (पृथक्) हुँदैनन्, त्यसरी नै आत्मामा उठ्ने बुद्धि आदि सबै भावहरू आत्माबाट भिन्न हुँदैनन्, यस प्रकारको बोध ''भावप्रकाशन'' हुन्छ ॥८३॥

**शिव एव जगत्सर्वं शिव एवाहमित्यपि।**
**भावयन् परमो योगी भावदोषैर्न बाध्यते।।८४।।**

**भावार्थ** : 'यो सम्पूर्ण संसार शिव नै हो म पनि शिव नै हूँ' यस्तो भावनाले युक्त रहने योगी सांसारिक जन्मादि दोषहरूबाट उपलिप्त हुँदैन ॥८४॥

**शिवभावे स्थिरे जाते निर्लेपस्य महात्मनः।**
**ये ये भावाः समुत्पन्नास्ते ते शिवमयाः स्मृताः।।८५।।**

**भावार्थ** : सांसारिक विषयवासनाहरूबाट निर्लिप्त महात्मा शिवयोगी भित्र जो जो भाव उत्पन्न हुन्छन् ती सबै शिवमय मानिएका छन् ॥८५॥

CC-0. Jangamwadi Math Digital Collection.

**अद्वितीयशिवाकारभावनाध्वस्तकर्मणा ।**
**न किञ्चिद्भाव्यते साक्षात् शिवादन्यन्महात्मना।।८६।।**

**भावार्थ** : अद्वितीय शिवाकारको भावनाले समस्तकर्महरूलाई नाशगर्ने महात्मा शिवयोगीलाई शिवबाट अतिरिक्त प्रत्यक्षत: न ता केही देखिन्छ न अनुभवनै हुन्छ ॥८६॥

**गलिताज्ञानबन्धस्य केवलात्मानुभाविन:।**
**यत्र यत्र इन्द्रियासक्तिस्तत्र तत्र शिवात्मता।।८७।।**

**भावार्थ** : जसको अज्ञान बन्धन नष्ट भै सकेको छ, यस्ता केवलात्माको अनुभवगर्ने शिवयोगीको जुन जुन विषयमा इन्द्रियासक्ति (इन्द्रियको आसक्ति) हुन्छ उस उस विषयमा शिवत्व नै अनुभूत हुन्छ ॥८७॥

**रागद्वेषादयो भावा: संसारक्लेशकारणम्।**
**तेषामुपरमो यत्र तत्र भाव: शिवात्मक:।।८८।।**

**भावार्थ** : राग-द्वेष आदि भावनाहरू संसाररूपी क्लेशका कारण हुन्छन्। जुन भक्तिमा यी भावहरू नष्ट अथवा शान्त भै सकेका हुन्छन् त्यसमा शिवात्मकभाव उत्पन्न हुन्छ ॥८८॥

**यथा सूर्यसमाक्रान्तौ न शक्नोति तम: सदा।**
**तथा प्रकाशमात्मानं नाविद्याक्रामति स्वयम्।।८९।।**

**भावार्थ** : जसरी सूर्य प्रकाशका सामुन्ने अन्धकार ठहर्न सक्दैन त्यसरी नै प्रकाशमान आत्मा माथि अविद्या(अज्ञान)को आक्रमण हुन सक्दैन ॥८९॥

### ज्ञानप्रकाशस्थल - (९२)

**मुख्यार्थेऽसम्भवे जाते लक्षणायोगसंश्रयात्।**
**तज्ज्ञानयोजनं यत्तदुक्तं ज्ञानप्रकाशनम्।।९०।।**

**भावार्थ** : **ज्ञानप्रकाशस्थल वर्णन**— वाच्यार्थ असंभव अर्थात् बाधित भएपछि लक्षणाको सहायताले त्यसज्ञान अर्थात् अङ्गलिङ्गज्ञानको जो योजना हुन्छ त्यसलाई 'ज्ञानप्रकाशन' भनिन्छ ॥९०॥



**मुक्तस्य ज्ञानसम्बन्धो ज्ञेयाभाव: स्वभावत:।**
**उपाधिसहितं ज्ञानं न भेदमतिवर्तते।।९१।।**

**भावार्थ** : मुक्तजीवको ज्ञानसम्बन्ध अर्थात् लक्ष्यार्थरूप ज्ञान सँग समन्वय स्वाभाविक हो । फलत: ज्ञेयको अभाव पनि स्वाभाविक हो। उपाधि युक्त ज्ञानका भेदको अभाव हुन्न अर्थात् भेद रहन्छ नै ॥९१॥

**ज्ञानमित्युच्यते सद्भि: परिच्छेदोऽपि वस्तुन:।**
**परात्मन्यपरिच्छेदे कुतो ज्ञानस्य सम्भव:।।९२।।**

**भावार्थ** : विद्वान्हरुले वस्तुको परिच्छेदलाई ज्ञान भन्दछन् (घटत्वावच्छिन्न घटमा घटत्वावच्छेद नै ज्ञान हो) त्यसैले घट (घडालाई) लाई अवच्छिन्न या परिच्छिन्न गर्दछ, परमात्मा परिच्छेदबाट रहित छ उसमा विषय-विषयीभाव अर्थात् सम्बन्ध कसरी सम्भव हुन सक्छ ॥९२॥

**ज्ञानस्याविषये तत्त्वे शिवाख्ये चित्सुखात्मनि।**
**आत्मैकत्वानुसन्धानं ज्ञानमित्युच्यते बुधै:।।९३।।**

**भावार्थ** : ज्ञानको अविषयभूत चिदानन्दस्वरूप शिवनामक तत्त्वसँग आत्मैकत्वको अनुसन्धान गर्नुलाई विद्वान्हरूले 'ज्ञान' भनेका छन् ॥९३॥

**अपरिच्छिन्नमानन्दं सत्ताकारं जगन्मयम्।**
**ब्रह्मेति लक्षणं ज्ञानं ब्रह्मज्ञानमिहोच्यते।।९४।।**

**भावार्थ** : ब्रह्म, अखण्डआनन्दरूप, सत्ताकार अर्थात् सद्रूप तथा जगन्मय अर्थात् विश्वरूप छ । संसारमा यस प्रकारको ज्ञान ब्रह्मज्ञान कहलाउँछ ॥९४॥

**ब्रह्मज्ञाने समुत्पन्ने विश्वोपाधिविवर्जिते।**
**सर्वं संविन्मयं भाति तदन्यन्नैव दृश्यते।।९५।।**

**भावार्थ** : विश्वरूप उपाधिले रहित ब्रह्मज्ञान उत्पन्न भए पछि सबै अर्थात् सबकुछ चिन्मय अर्थात् ज्ञानस्वरूप भासित हुन्छ । उसबाट अतिरिक्त केही पनि देखिन्न ॥९५॥

CC-0. Jangamwadi Math Digital Collection.

**तस्माद्द्वैतविज्ञानमपवर्गस्य कारणम्।।९६।।**
**भावयन् सततं योगी संसारेण न लिप्यते।।९६।।**

**भावार्थ** : यसकारण 'अद्वैत विज्ञान अपवर्ग अर्थात् मोक्षको कारण हो' यस्तो भावना निरन्तररूपमा गर्नेवाला योगी संसारदोषबाट लिप्त (प्रभावित) हुँदैन ।।९६।।

**नित्ये निर्मलसत्त्वयोगिषु परे निर्वासने निष्कले**
**सर्वातीतपदे चराचरमये सत्तात्मनि ज्योतिषि।**
**संविद्व्योम्नि शिवे विलीनहृदयस्तद्भेदवैमुख्यतः**
**साक्षात् सर्वगतो विभाति विगलद्विश्वः स्वयं संयमी।।९७।।**

**भावार्थ** : नित्य, निर्मल सत्त्वयोगीहरूका पर अर्थात् प्रधान वासनारहित निष्कल, सर्वातीत, चराचरमय, सत्स्वरूप, तेजोमय, चिदाकाशरूपी शिवमा विलीन हृदय भएको भेदभावनाले रहित संसारको तिरस्कार गर्ने संयमी अर्थात् शिवयोगी स्वयं साक्षात् सर्वव्यापीरूपमा प्रकाशित हुन्छ ।।९७।।

***ॐ तत्सत् इति श्रीशिवगीतेषु सिद्धान्तागमेषु शिवाद्वैतविद्यायां शिवयोगशास्त्रे श्रीरेणुकागस्त्य संवादे वीरशैवधर्मनिर्णये श्रीशिवयोगिशिवाचार्यविरचिते श्रीसिद्धान्तशिखामणौ शरणस्थले दीक्षापादोदकस्थलादिद्वादशविधस्थल-प्रसङ्गो नाम एकोनविंशतितमः परिच्छेदः।***

**यस प्रकार श्रीसिद्धान्तशिखामणिको शरणस्थलविषयक द्वादशविध लिङ्गप्रसङ्ग नामक उन्नाइसौं परिच्छेदको आचार्य हरिप्रसादअधिकारी कृत सुबोधिनी नामक नेपाली व्याख्या पूर्णभयो ।**
**।। एकोनशिंपरिच्छेद पूर्ण भयो ।।**



CC-0. Jangamwadi Math Digital Collection.

# विंशः परिच्छेदः

लिंगस्थलांतर्गत

## ऐक्यस्थल

**अगस्त्य उवाच—**

**स्थलभेदास्त्वया प्रोक्ताः शरणस्थलसंश्रिताः।**
**ऐक्यस्थलगतान् ब्रूहि स्थलभेदान् गणेन्द्र मे।।१।।**

**भावार्थ** : **ऐक्यस्थल वर्णन**— अगस्त्यले भन्नुभयो— हे गणेश्वर! तपाँइले शरणस्थलमा पर्ने अवान्तरस्थलभेदहरूको वर्णन गर्नुभयो । अब मलाई ऐक्यस्थलअन्तर्गतपर्ने स्थलभेदहरू बताउनु होस् ।।१।।

**श्रीरेणुक उवाच—**

**स्थलानां नवकं चैक्यस्थलेऽस्मिन् प्रकीर्त्यते ।।२।।**

**तत्स्वीकृतप्रसादैक्यस्थलमादौ प्रकीर्तितम्।।३।।**
**शिष्टोदनस्थलं चाथ चराचरलयस्थलम्।।३।।**

**भाण्डस्थलं ततः प्रोक्तं भाजनस्थलमुत्तमम्।।४।।**
**अङ्गालेपस्थलं पश्चात् स्वपराज्ञस्थलं ततः।।४।।**

**भावाभावविनाशं च ज्ञानशून्यस्थलं ततः।।५।।**
**तदेषां क्रमशो वक्ष्ये शृणु तापस लक्षणम्।।५।।**

**भावार्थ** : रेणुकाचार्यले भन्नु भयो— यस ऐक्यस्थलमा नौ स्थलहरूको चर्चा गरिन्छ— ती नौ स्थलहरूको नाम क्रमशः यस प्रकार छ— स्वीकृतप्रसादैक्यस्थल, शिष्टौदनस्थल, चराचरलयस्थल, भाण्डस्थल, भाजनस्थल, अङ्गालेपस्थल, स्वपराज्ञस्थल, भावाभावविनाशस्थल, र अन्तमा ज्ञानशून्य स्थलको वर्णन छ। हे तपस्विन् ! अब क्रमै सँग इनको लक्षण बताउँदैछु - सुन ।।२-५।।



**स्वीकृतप्रसादिस्थल - (९३)**

**मुख्यार्थो लक्षणार्थश्च यत्र नास्ति चिदात्मनि।।६।।**
**विशृङ्खलतया तस्य प्रसादः स्वीकृतो भवेत्।।६।।**

**भावार्थ** : **स्वीकृतप्रसादैक्यस्थलवर्णन**— चिदात्मा अर्थात् ज्ञानप्रकाशसम्पन्न जसमा मुख्यार्थ र लक्ष्यार्थ विशृंखलरूपमा अर्थात् अलग अलग हुँदैनन् (अर्थात् दुबै अर्थ एकै भएको हुन्छ) उसको प्रसाद पूर्णज्ञानप्रसादका रूपमा स्वीकृत हुन्छ ।।६।।

**मातृमेयप्रमाणादिव्यवहारे विहारिणीम्।**
**संवित्साक्षात्कृतिं लब्ध्वा योगी स्वात्मनि तिष्ठति।।७।।**

**भावार्थ** : प्रमाता प्रमेय र प्रमाण आदिका व्यवहारमा रमण गर्ने संवित्को साक्षात्कार गरेर ज्ञानप्रकाश सम्पन्न शिवयोगी आफ्ना स्वरूपमा स्थित हुन्छ ।।७।।

**अद्वैतबोधनिर्धूतभेदावेशस्य योगिनः।**
**साक्षात्कृतमहासंवित्प्रकाशस्य क्व बन्धनम्।।८।।**

**भावार्थ** : अद्वैतबोधद्वारा द्वैत आवेशलाई हटाउने, महासंवित् प्रकाशको साक्षात्कार गर्ने योगारूका लागि बन्धन कहाँ? अर्थात् त्यस्तो योगी सर्वथा मुक्त हुन्छ ।।८।।

**चिदात्मनि शिवे न्यस्तं जगदेतच्चराचरम्।**
**जायते तन्मयं सर्वमग्नौ काष्ठदिकं यथा।।९।।**

**भावार्थ** : जसरी अग्निमा (आगोमा) हालेका दाउरा आदि तन्मय अर्थात् अग्नि स्वरूप हुन्छन्, त्यसरी नै चित्स्वरूपशिवमा समर्पित यो समस्त चराचर जगत् शिवमय हुन जान्छ ।।९।।

**न भाति पृथ्वी न जलं न तेजो नैव मारुतः।**
**नाकाशो न परं तत्त्वं शिवे दृष्टे चिदात्मनि।।१०।।**

CC-0. Jangamwadi Math Digital Collection.

**भावार्थ** : चिदात्मा शिवको साक्षात्कार भएपछि पृथिवी जल तेज वायु आकाश या अन्य कुनै पदार्थ भासित (प्रकाशित) हुँदैनन् । अर्थात् शिवदेखि भिन्न रूपमा केही पनि देखिदैन ॥१०॥

**ज्योतिर्लिङ्गे चिदाकारे ज्वलत्यन्तर्निरन्तरम्।**
**विलीनं निखिलं तत्त्वं पश्यन् योगी न लिप्यते।।११।।**

**भावार्थ** : आफ्ना हृदयभित्र चित्स्वरूप ज्योतिर्लिङ्ग निरन्तरप्रकाशित हुनाले अर्थात् भए पछि सबै तत्त्वहरूलाई चिदाकारमा विलीन देख्ने वाला योगी सांसारिकताका मूलभूत छत्तीस तत्त्वहरूबाट लिप्त हुँदैन ॥११॥

**अन्तर्मुखेन मनसा स्वात्मज्योतिषि चिन्मये।**
**सर्वानप्यर्थविषयान् जुह्वन् योगी प्रमोदते।।१२।।**

**भावार्थ** : चिन्मय आत्मारूपी तेज अर्थात् अग्निमा अन्तर्मुखी मनले समस्त विषयहरूको हवन-गर्नेवाला योगी सदा आनन्दित हुन्छ ॥१२॥

**सच्चिदानन्दजलधौ शिवे स्वात्मनि निर्मलः।**
**समर्प्य सकलान् भुङ्क्ते विषयान् तत्प्रसादतः।।१३।।**

**भावार्थ** : निर्मलयोगी सात्विक् आनन्दस्वरूप स्वात्मशिवमा सम्पूर्ण विषयहरूको समर्पण गरेर पुनः शिवका कृपाले ती वस्तुहरूको भोगगर्दछ ॥१३॥

### शिष्टोदनस्थल - (९४)

**प्रकाशते या सर्वेषां माया सैवोदनाकृतिः।**
**लीयते तत्र चिल्लिङ्गे शिष्टं तत्परिकीर्तितम्।।१४।।**

**भावार्थ** : **शिष्टोदनस्थल वर्णन**— जो माया समस्त अर्थात् विज्ञानाकल प्रलयाकल आदि समस्त जीवहरूमा प्रकाशित हुन्छ, अर्थात् तत् तत् शरीर इन्द्रियरूपमा व्यवहारको विषय बन्दछ । त्यो ओदन अर्थात् भात जस्तो हुन्छ । उसको चित्स्वरूपशिवलिङ्गमा लय हुनुलाई शिष्ट भनिन्छ ॥१४॥

**जगदङ्गे परिग्रस्ते मायापाशविजृम्भिते।**
**स्वात्मज्योतिषि बोधेन तदेकमवशिष्यते।।१५।।**



**भावार्थ** : मायाको पाश अर्थात् माया का कला, विद्या, राग, काल, नियति रूपी पाँच कञ्चुक तथा त्यसबाट उत्पन्न प्रकृति देखि लिएर भूमि सम्मका तीस तत्त्वरूपी पाशले बाँधिएको जगद्रूपी शरीर आत्मज्योतिमा विलीन भैसकेपछि एकमात्र माया तत्त्व शेष रहन्छ ॥१५॥

**अखण्डसच्चिदानन्दपरब्रह्मस्वरूपिणः ।**
**जीवन्मुक्तस्य धीरस्य माया कैङ्कर्यवादिनी।।१६।।**

**भावार्थ** : यो माया अखण्ड सत् चित् आनन्दरूप ब्रह्म ब्रह्मस्वरूपमा प्राप्त भैसकेका जीवन्मुक्त शिवयोगी की दासी (नौकरानी) बनेर रहन्छे ॥१६॥

**विश्वसंमोहिनी माया बहुशक्तिनिरङ्कुशा।**
**शिवैकत्वमुपेतस्य न पुरः स्थातुमीहति।।१७।।**

**भावार्थ** : संसारलाई मोहमा पार्ने असीमित शक्ति सम्पन्न हुनाले निरंकुश माया पनि शिवैकत्वमा प्राप्त भएका योगीका सामुन्ने उभिने साहस गर्दिन ॥१७॥

**ज्योतिर्लिङ्गे चिदाकारे निमग्नेन महात्मना।**
**भुज्यमाना यथायोगं नश्यन्ति विषयाः स्वतः।।१८।।**

**भावार्थ** : चिद्रूप ज्योतिर्लिङ्गमा निमग्न महात्मा शिवयोगीद्वारा यथाभोग अर्थात् आफ्नो भोग्यता र क्रमअनुसार भोग गरिने विषयहरू स्वयं नष्टं हुन्छन् । अर्थात् योगी भित्रै विलीन हुन्छन् ॥१८॥

**शब्दादयोऽपि विषया भुज्यमानास्तदिन्द्रियैः।**
**आत्मन्येव विलीयन्ते सरितः सागरे यथा।।१९।।**

**भावार्थ** : शब्द, स्पर्श, रूप रस गन्ध विषयहरू योगीका इन्द्रियद्वारा भुज्यमान भएर आत्मामा त्यसरीनै विलीन हुन्छन् जसरी नदीहरू समुद्रमा मिलेर विलीन हुन्छन् ॥१९॥

**अर्थजातमशेषं तु ग्रसन् योगी प्रशाम्यति।**
**स्वात्मनैवास्थितो भानुस्तेजोजालमशेषतः।।२०।।**

CC-0. Jangamwadi Math Digital Collection.

**भावार्थ** : योगी समस्त विषय समूहको उपभोग गरेर आत्मामा स्थित हुन जान्छ । जसरी सूर्य सबैलाई प्रकाशित गरेर आफ्ना तेज समूहलाई आफैंमा समेटेर स्वयं शान्त हुन्छन् ।।२०।।

**चराचरलयस्थल - (९५)**

**लिङ्गैक्ये तु समापन्ने चरणाचरणे गते।**
**निर्देही स भवेद्योगी चराचरविनाशकः।।२१।।**

**भावार्थ** : **चराचरलयस्थल वर्णन**— चर तथा अचर जब लिङ्गका साथमा एक हुन जान्छन् तब त्यो योगी देह रहित भएर चराचरको विनाशक हुन जान्छ ।।२१।।

**अनाद्यविद्यामूला हि प्रतीतिर्जगतामियम्।**
**स्वात्मैकबोधात्तन्नाशे कुतो विश्वप्रकाशनम्।।२२।।**

**भावार्थ** : जगत्को यो भान (ज्ञान) अनादि कालिक अविद्या (अज्ञान) का कारणले भएको हो । संसारको आफ्नो आत्मा अर्थात् शिवका साथमा ऐक्य ज्ञान भए पछि त्यस अविद्याको नाश हुन्छ । अविद्या नाश भए पछि विश्वको आभास कहाँ या कसरी हुन सक्छ? ।।२२।।

**यथा मेघाः समुद्भूता विलीयन्ते नभस्थले।**
**तथात्मनि विलीयन्ते विषयाः स्वानुभाविनः।।२३।।**

**भावार्थ** : जसरी आकाशमा उत्पन्न मेघ आकाशमै विलीन हुन जान्छ त्यसरी नै स्वस्वरूपको अनुभव गर्ने शिवयोगीका आत्मामा सबै विषयहरू विलीन हुन जान्छन् ।।२३।।

**स्वप्ने दृष्टं यथा वस्तु प्रबोधे लयमश्नुते।**
**तथा सांसारिकं सर्वमात्मज्ञाने विनश्यति।।२४।।**

**भावार्थ** : जसरी स्वप्नमा देखिने वस्तु जागे पछि लीन हुन जान्छ त्यसरी नै संसारका सबै पदार्थ आत्मज्ञान भए पछि लुप्त हुन जान्छन् ।।२४।।



**जाग्रत्स्वप्नसुषुप्तिभ्यः परावस्थामुपेयुषः।**
**किं वा प्रमाणं किं ज्ञेयं किं वा ज्ञानस्य साधनम्।।२५।।**

**भावार्थ** : जाग्रत स्वप्न सुषुप्ति देखि टाडा अर्थात् तुरीय एवं तुरीयातीत अवस्थामा प्राप्त भैसकेका शिवयोगीका लागि के प्रमाण? र के ज्ञेय? तथा के ज्ञानको साधन? अर्थात् ज्ञाता ज्ञान र ज्ञेयको यो त्रिपुटी ज्ञान नष्ट हुन जान्छ ।।२५।।

**तुर्यातीतपदं यत्तद् दूरं वाङ्मनसाध्वनः।**
**अनुप्रविश्य तद्योगी न भूयो विश्वमीक्षते।।२६।।**

**भावार्थ** : जो तुरीयातीत अवस्थामा छ, त्यो वाणी र मनका पहुँच देखि टाडा छ । त्यसमा प्रवेश गरेर योगीले विश्वपटि फर्किएर हेर्दैन ।।२६।।

**नान्यत् पश्यति योगीन्द्रो नान्यज्जानाति किञ्चन।**
**नान्यच्छृणोति सन्दृष्टे चिदानन्दमये शिवे।।२७।।**

**भावार्थ** : शिवयोगीले जहिले चिदानन्दमय शिवको सम्यक् दर्शन अर्थात् साक्षात्कार गर्दछ तहिले अर्थात् तब देखि उसले शिवदेखि अथवा आफुदेखि भिन्न कुनै अरुलाई देख्दैन, जान्दैन र सुन्दैन पनि। अर्थात् मलशक्तिनाश भैसकेपछि उसलाई मायाको रूप रस आदिको अनुभव हुँदैन ।।२७।।

**असदेव जगत्सर्वं सदिव प्रतिभासते।**
**ज्ञाते शिवे तदज्ञानं स्वरूपमुपपद्यते।।२८।।**

**भावार्थ** : शिवज्ञान हुनु भन्दा पहिलेको सम्पूर्ण असत् जगत् सत् जस्तो प्रतीत हुन्छ, शिवको ज्ञान भएपछि त्यो अज्ञान अर्थात् भेदात्मकज्ञान स्वरूपमा प्राप्त हुन्छ । परिणामतः शिवयोगीको मनमा शिवातिरिक्त कुनै वस्तुको विमर्श(विचार) हुँदैन ।।२८।।

**भाण्डस्थल - (९६)**

**ब्रह्माण्डशतकोटीनां सर्गस्थितिलयान् प्रति।**
**स्थानभूतो विमर्शो यस्तद्भाण्डस्थलमुच्यते।।२९।।**

CC-0. Jangamwadi Math Digital Collection.

**भावार्थ** : **भाण्डस्थल वर्णन**— सयौं करोड ब्रह्माण्डहरूको सृष्टिस्थित र प्रलयको जो आधार छ अर्थात् जो आधारभूत विमर्श छ, त्यसलाई भाण्डस्थल भनिन्छ ॥२९॥

**विमर्शाख्या पराशक्तिर्विश्वोद्भासनकारिणी।**
**साक्षिणी सर्वभूतानां समिन्धे सर्वतोमुखी।।३०।।**

**भावार्थ** : ईश्वरको विमर्श नामक पराशक्ति जो विश्वरचनाको कारण छ, समस्त भूतहरूको साक्षी भएर/बनेर सर्वतोमुखी (सबैतिरबाट) हुँदै नानारूपमा प्रकाशित भैरहेको छ ॥३०॥

**विश्वं यत्र लयं याति विभात्यात्मा चिदाकृतिः।**
**सदानन्दमयः साक्षात् सा विमर्शमयी कला।।३१।।**

**भावार्थ** : जसमा सम्पूर्ण विश्व लीन हुन्छ, जस्का कारणले आत्मा चित् एवं आनन्दमय स्वरूपमा भासित हुन्छ, त्यो साक्षात् विमर्शमयी कला हो ॥३१॥

**पराहन्तासमावेशपरिपूर्णविमर्शवान् ।**
**सर्वज्ञः सर्वगः साक्षी सर्वकर्ता महेश्वरः।।३२।।**

**भावार्थ** : महेश्वर पराहन्ताका समावेशले परिपूर्ण विमर्शवाला सर्वज्ञ, सर्वव्याप्ति, साक्षी र सबैको रचयिता पनि हुन् ॥३२॥

**विश्वाधारमहासंवित्प्रकाशपरिपूरितम् ।**
**पराहन्तामयं प्राहुर्विमर्शं परमात्मनः।।३३।।**

**भावार्थ** : विश्वको आधारभूत जो महाशक्ति छ, त्यसका प्रकाशले परिपूर्ण विमर्शलाई विद्वानहरू 'पराहन्तामय' मान्दछन् ॥३३॥

**विमर्शभाण्डविन्यस्तविश्वतत्त्वविजृम्भणः।**
**अनन्यमुखसम्प्रेक्षी मुक्तः स्वात्मनि तिष्ठति।।३४।।**

**भावार्थ** : विश्वतत्त्वको विजृम्भा अर्थात् विस्तारलाई विमर्शरूपी भाण्ड अर्थात् पात्रमा राख्ने अर्काको अपेक्षा न गर्ने मुक्त शिवयोगी आफ्ना स्वरूपमा स्थित रहन्छ ॥३४॥



**भाजनस्थल - (९७)**

**समस्तजगदण्डानां सर्गस्थित्यन्तकारणम्।**
**विमर्शो भासते यत्र तद्भाजनमिहोच्यते।।३५।।**

**भावार्थ** : **भाजनस्थल वर्णन**— समस्त जगत् अर्थात् ब्रह्माण्डहरूको सृष्टि स्थिति र संहारको कारणभूत विमर्श जसमा भासित हुन्छ यस संसारमा त्यसलाई भाजन भनिन्छ। अर्थात् पञ्चकञ्चुकले ढाकिएका पुरुषको तीन मल जब समाप्त हुन जान्छन् तब त्यसलाई 'भाजन' अर्थात् पात्र भनिन्छ ॥३५॥

**विमर्शाख्या पराशक्तिर्विश्ववैचित्र्यकारिणी।**
**यस्मिन् प्रतिष्ठितं ब्रह्म तदिदं विश्वभाजनम्।।३६।।**

**भावार्थ** : विश्वको विचित्र रचना गर्ने विमर्शनामक शक्ति जसमा स्थित रहन्छ त्यो परिपूर्ण ब्रह्म विश्वको भाजन कहलाउँछ ॥३६॥

**अन्तःकरणरूपेण जगदङ्कुररूपतः।**
**यस्मिन् विभाति चिच्छक्तिर्ब्रह्मभूतः स उच्यते।।३७।।**

**भावार्थ** : परमशिवमा समवेत चित्शक्ति जगत्का अङ्कुरका रूपले अन्तःकरण अर्थात् मूल अहङ्कारका रूपमा जसमा भासित हुन्छ, त्यो परमशिव ब्रह्मभूत कहलाउँछ ॥३७॥

**यथा चन्द्रे स्थिरा ज्योत्स्ना विश्ववस्तुप्रकाशिनी।**
**तथा शक्तिविमर्शात्मा प्रकारे ब्रह्मणि स्थिता।।३८।।**

**भावार्थ** : चन्द्रमामा रहने किरणले जसरी सबै वस्तुहरूलाई प्रकाशित गर्दछ, त्यसरी नै ब्रह्ममा रहने विमर्शरूपा शक्तिले विशेषणका रूपमा स्थित भएर विश्वको प्रकाशन गर्दछ ॥३८॥

**अकारः शिव आख्यातो हकारः शक्तिरुच्यते।**
**शिवशक्तिमयं ब्रह्म स्थितमेकमहंपदे।।३९।।**

**भावार्थ** : अहं पदमा रहने अकार शिवको बोधक हो, हकार शक्ति स्वरूप हो, यसरी 'अहम्' पदमा शिवशक्तिमय एक ब्रह्म स्थित रहन्छ ॥३९॥

CC-0. Jangamwadi Math Digital Collection.

**अहन्तां परमां प्राप्य शिवशक्तिमयीं स्थिराम्।**
**ब्रह्मभूयंगतो योगी विश्वात्मा प्रतिभासते।।४०।।**

**भावार्थ** : पूर्ण अतएव स्थित शिवशक्तिमयी 'अहन्तालाई प्राप्त गरेर ब्रह्मस्वरूप भएर विश्वका रूपमा प्रकाशित हुन्छ ।।४०।।

**वृक्षस्थं पत्रापुष्पादि वटबीजस्थितं यथा।**
**तथा हृदयबीजस्थं विश्वमेतत् परात्मनः।।४१।।**

**भावार्थ** : जसरी वृक्षमा रहेको पत्र पुष्प आफ्नु स्पष्ट अस्तित्व भन्दा पहिले बीजमा गुप्तरूपले रहेको हुन्छ त्यसरी नै परात्मा अर्थात् भाजन स्थल सम्पन्न शिवयोगीका हृदयबीजमा यो विश्व स्थित रहन्छ ।।४१।।

### अङ्गालेपस्थल - (९८)

**दिक्कालाद्यनवच्छिन्नं चिदानन्दमयं महत्।**
**यस्य रूपमिदं ख्यातं सोऽङ्गालेप इहोच्यते।।४२।।**

**भावार्थ** : **अङ्गालेपस्थल वर्णन**— जसको रूप देशकाल आदिको सीमाबाट रहित चिदानन्दमय महान् बताइएको छ, तद्भाजनस्थल सम्पन्न शिवयोगी यहाँ 'अङ्गालेप' नामले कहिएको छ ।।४२।।

**समस्तजगदात्मापि संविद्रूपो महामतिः।**
**लिप्यते नैव संसारैर्यथा धूमादिभिर्नभः।।४३।।**

**भावार्थ** : समस्त जगत्स्वरूप भएर पनि संविद्रूप महामतिमान् शिवयोगी सांसारिकता बाट त्यसरी नै प्रभावित हुँदैन जसरी धूम (धुवाँ) आदिबाट आकाश प्रभावित हुँदैन ।।४३।।

**न विधिर्न निषेधश्च न विकल्पो न वासना।**
**केवलं चित्स्वरूपस्य गलितप्राकृतात्मनः।।४४।।**

**भावार्थ** : प्रकृतिका समस्त गुणहरूबाट रहित मात्र चित्स्वरूप योगीका लागि न कुनै विधि छ न निषेध । न विकल्प छ न वासना ।।४४।।



**घटादिषु पृथग्भूतं यथाऽऽकाशं न भिद्यते।**
**तथोपाधिगतं ब्रह्म नानारूपं न भिद्यते।।४५।।**

**भावार्थ** : जसरी घडा आदिमा अलग अलग रूपले रहे पनि आकाश भिन्न हुँदैन, त्यसरी नै शरीर आदि अनेक उपाधियुक्त भएर नानारूपमा विभक्त देखिए पनि ब्रह्म भिन्न हुँदैन ।।४५।।

**अनश्वरमनिर्देश्यं यथा व्योम प्रकाशते।**
**तथा ब्रह्मापि चैतन्यमत्र वैशेषिकी कला।।४६।।**

**भावार्थ** : जसरी आकाश अनश्वर अनिर्देश्य तथा अतुलनीय रूपमा प्रकाशित हुन्छ, त्यसरी नै ब्रह्म पनि प्रकाशित हुन्छ । यस ब्रह्ममा चैतन्य एउटा विशेषप्रकारको कला हो ।।४६।।

**न देवत्वं न मानुष्यं न तिर्यक्त्वं न चान्यथा।**
**सर्वाकारत्वमाख्यातं जीवन्मुक्तस्य योगिनः।।४७।।**

**भावार्थ** : जीवन्मुक्त योगी न देव हुन्छ न मनुष्य, न पक्षी न त अरु कुनै जीव । ऊ सर्वाकार बताइएको छ ।।४७।।

### स्वपराज्ञस्थल - (९९)

**अप्रमेये चिदाकारे ब्रह्मण्यद्वैतवैभवे।**
**विलीनः किं नु जानाति स्वात्मानं परमेव वा।।४८।।**

**भावार्थ** : **स्वपराज्ञस्थल वर्णन**— अप्रेय चित्स्वरूप अद्वितीय ब्रह्ममा विलीन शिवयोगीले न आफुलाई जान्दछ न परमात्मा लाई ।।४८।।

**यत्र नास्ति भिदायोगादहं त्वमिति विभ्रमः।**
**न संयोगो वियोगश्च न ज्ञेयज्ञातृकल्पना।।४९।।**

**न बन्धो न च मुक्तिश्च न देवाद्यभिमानिता।**
**न सुखं नैव दुःखं च नाज्ञानं ज्ञानमेव वा।।५०।।**

CC-0. Jangamwadi Math Digital Collection.

**नोत्कृष्टत्वं न हीनत्वं नोपरिष्टान्न चाप्यधः।**
**न पश्चान्नैव पुरतो न दूरे किञ्चिदन्तरे।।५१।।**

**सर्वाकारे चिदानन्दे सत्यरूपिणि शाश्वते।**
**पराकाशमये तस्मिन् परे ब्रह्मणि निर्मले।।५२।।**

**एकीभावमुपेतानां योगिनां परमात्मनाम्।**
**परापरपरिज्ञानपरिहासकथा कुतः।।५३।।**

**भावार्थ** : जहाँ भेदका साथमा योग हुनाले (अर्थात् जीव र ब्रह्म भेदबुद्धि हुनाले) अहम् यस्तो भ्रम हुँदैन वस्तुतः तत्त्वदर्शी शिवयोगीका दृष्टिमा संयोग वियोग ज्ञाता ज्ञेय आदिको परिकल्पना नै हुँदैन । साथै बन्ध र मोक्ष तथा स्वविषयमा अथवा परविषयमा देवत्वआदिको अभिमान नै हुन्छ । न उसका दृष्टिमा सुखदुःख ज्ञानअज्ञान उत्कृष्टत्व अपकृष्टत्व माथि तल अगाडी पछाडि टाडा नजीक आदिको स्थिति बन्न सक्छ । सर्वरूप चिदानन्द सत्यस्वरूप शाश्वत पर आकाश अर्थात् चिदाकाशमय त्यस निर्मल ब्रह्मका साथमा एकत्वमा प्राप्तभएका महात्मा योगीहरूका विषयमा परापर परिज्ञानरूप परिहासको चर्चा कसरी हुन सक्छ? ॥४९-५३॥

**देशकालानवच्छिन्नतेजोरूपसमाश्रयात् ।**
**स्वपरज्ञानविरहात् स्वपराज्ञस्थलं विदुः।।५४।।**

**भावार्थ** : देशकालको सीमाभन्दा टाडा तेजस् रूप परब्रह्मको आश्रयण अर्थात् सामरस्य स्वपरज्ञानशून्य शिवयोगीको अवस्थालाई विद्वद्जनहरू ‘स्वपराज्ञस्थल’ भन्दछन् ॥५४॥

**भावाभावलयस्थल - (१००)**

**त्वन्ताहन्ताविनिर्मुक्ते शून्यकल्पे चिदम्बरे।**
**एकीभूतस्य सिद्धस्य भावाभावकथा कुतः।।५५।।**



**भावार्थ** : **भावाभावलयस्थल वर्णन**— त्वम् र अहम् भावले रहित शून्यकल्प चिदाकाशमा एकीभूत शिवयोगीका लागि भाव र अभाव को कथा कसरी हुन सक्छ? अर्थात् त्यस् अवस्थामा भाव र अभाव दुबै हुँदैनन् ॥५५॥

**अहंभावस्य शून्यत्वादभावस्य तथात्मनः।**
**भावाभावविनिर्मुक्तो जीवन्मुक्तः प्रकाशते।।५६।।**

**भावार्थ** : अहं भाव तथा आत्माका अभावले शून्य हुँनाले भाव र अभावबाट विनिर्मुक्त जीवन्मुक्त प्रकाशित हुन्छ ॥५६॥

**सुखदुःखादिभावेषु नाभावो भाव एव वा।**
**विद्यते चित्स्वरूपस्य निर्लेपस्य महात्मनः।।५७।।**

**भावार्थ** : निर्लेप अर्थात् पाप पुण्य आदि द्वन्द्वभन्दा टाडा महान् आत्मा चित् स्वरूप शिवयोगीका लागि सुख दुःख आदि भावहरूका विषयमा न भाव रहन्छ न अभाव ॥५७॥

**यस्मिन् ज्योतिषि चिद्रूपे दृश्यते नैव किञ्चन।**
**सद्रूपं वाप्यसद्रूपं भावाभावं विमुञ्चतः।।५८।।**

**भावार्थ** : भाव र अभावको त्याग गर्ने अर्थात् त्यसबाट माथि उठेका (द्वन्द्वातीत) चित्स्वरूप तेजोमय शिवयोगीलाई सद्रूप अथवा असद्रूप केही पनि देखिदैन ॥५८॥

**प्रतीयमानौ विद्येते भावभावौ न कुत्रचित्।।५९।।**
**लिङ्गैक्ये सति यत्तस्माद्भावाभावलयस्थलम्।।५९।।**

**भावार्थ** : जसकारणले शिवलिङ्गका साथमा एकत्व अर्थात् सामरस्य मा प्राप्त भएका शिवयोगीका लागि सर्वसाधारणमा प्रतीयमान भाव अभाव केही रँहदैन, त्यसै कारणले त्यस दशालाई भावाभावलयस्थल भनिन्छ ॥५९॥

**ज्ञानशून्यस्थल - (१०१)**

**परापरसमापेक्षभावाभावविवेचनम् ।**
**ज्ञानं ब्रह्मणि तन्नास्ति ज्ञानशून्यस्थलं विदुः।।६०।।**

CC-0. Jangamwadi Math Digital Collection.

**भावार्थ** : **ज्ञानशून्यस्थल वर्णन**— ब्रह्म अर्थात् परब्रह्मस्वरूप शिवयोगीमा पर र अपर को अपेक्षा राख्ने भावाभावविवेचनरूप ज्ञान रहँदैन । यसैकारण विद्वान्हरूले यस स्थितिलाई ज्ञानशून्यस्थल भनेका छन् ।।६०।।

**जले जलमिव न्यस्तं वह्नौ वह्निरिवार्पितम्।**
**परे ब्रह्मणि लीनात्मा विभागेन न दृश्यते।।६१।।**

**भावार्थ** : जलमा जल अथवा अग्निमा अग्नि मिले जस्तै पर ब्रह्ममा लीन आत्मावाला शिवयोगी अलग देखिदैन ।।६१।।

**सर्वात्मनि परे तत्त्वे भेदशङ्काविवर्जिते।**
**ज्ञात्रादिव्यवहारोत्थं कुतो ज्ञानं विभाव्यते।।६२।।**

**भावार्थ** : भेदका शङ्काबाट रहित विश्वरूप परतत्त्वमा ज्ञाता ज्ञेय र ज्ञानको व्यवहारबाट उत्पन्न त्रिपुटी ज्ञानको अनुभव कसरी हुन सक्छ ।।६२।।

**निर्विकारं निराकारं नित्यं सीमाविवर्जितम्।**
**व्योमवत् परमं ब्रह्म निर्विकल्पतया स्थितम्।।६३।।**

**न पृथ्व्यादीनि भूतानि न ग्रहा नैव तारकाः।**
**न देवा न मनुष्याश्च न तिर्यञ्चो न चापरे ।।६४।।**

**तस्मिन् केवलचिन्मात्रसत्तानन्दैकलक्षणे।**
**त्वन्ताहन्तादिसंरूढं विज्ञानं केन भाव्यते।।६५।।**

**भावार्थ** : विकारबाट शून्य, आकाररहित, नित्य, असीम आकाश समान सर्वव्यापी पर ब्रह्म निर्विकल्प रूपमा वर्तमान छ । पृथिवी आदि पञ्च महाभूत चन्द्रसूर्य आदि नौग्रह, अश्विनी आदि ताराहरू देवता, मनुष्य पक्षी यी सबै वास्तविकरूपमा प्रतीत हुँदैनन् । केवल सत् चित् आनन्दस्वरूप उस ब्रह्मभूत शिवयोगीमा त्वम् र अहम् आदि भावनाले बलियो भएको ज्ञान अर्थात् भेदज्ञान कसले गर्न सक्छ?।।६३-६५।।

**ज्ञेयाभावाद्विशेषेण शून्यकल्पं विभाव्यते।**
**ज्ञातृज्ञेयादिभिः शून्यं शून्यं ज्ञानादिभिर्गुणैः।।६६।।**



**आदावन्ते च मध्ये च शून्यं सर्वत्र सर्वदा।।६७।।**
**द्वितीयेन पदार्थेन शून्यं शून्यं विभाव्यते।।६७।।**

**भावार्थ** : विशेषरूपले ज्ञेयको अभाव हुनाले शून्यज्ञानको अनुभव हुन्छ । यो अनुभव ज्ञाताज्ञेय आदिबाट शून्य (रहित) तथा ज्ञान इच्छा आदि गुणहरूबाट पनि रहित हुन्छ । यो आदि मध्य र अन्त्यमा सदा सर्वदा शून्य हुन्छ । यो शून्य ब्रह्म देखि अतिरिक्त कुनै द्वितीय (दोस्रो) पदार्थले शून्यको अनुभव हुन्छ ।।६६-६७।।

**केवलं सच्चिदानन्दप्रकाशाद्वयलक्षणम्।**
**शून्यकल्पं पराकाशं परब्रह्म प्रकाशते।।६८।।**

**भावार्थ** : केवल सत्चित् आनन्दप्रकाश र अद्वितीय लक्षणयुक्त शून्यसदृश पराकाश परब्रह्म प्रकाशित हुन्छ ।।६८।।

**शून्यज्ञानादिसङ्कल्पे शून्यसर्वार्थसाधने।**
**ज्योतिर्लिङ्गे चिदाकारे स्वप्रकाशे निरुत्तरे।।**
**एकीभावमुपेतस्य कथं ज्ञानस्य सम्भवः।।६९।।**

**भावार्थ** : जो ज्ञान आदि संकल्पले शून्य समस्त पुरुषार्थ साधनहरूबाट रहित निरुत्तर अर्थात् सर्वोपरि चित्स्वरूप स्वप्रकाश ज्योतिर्लिङ्गका साथमा एकाकारित भै सक्यो उसलाई ज्ञान कसरी हुने? ऊ ता स्वयं ज्ञानस्वरूप भयो ।।६९।।

**यस्य कार्यदशा नास्ति कारणत्वमथापि वा।**
**शेषत्वं नैव शेषित्वं स मुक्तः पर उच्यते।।७०।।**

**भावार्थ** : जसको न कार्यावस्था छ न कारणावस्था, जसमा न शेषत्व (अङ्गत्व) छ न शेषीत्व अर्थात् अङ्गीत्व ऊ यी सबै द्वन्द्वबाट पर अर्थात् मुक्त कहलाउँछ ।।७०।।

CC-0. Jangamwadi Math Digital Collection.

## शिवैक्यस्थल (उपदेशोपसंहारवर्णन)

**एतावदुक्त्वा परमप्रबोधमद्वैतमानन्दशिवप्रकाशम्।**
**देव्यै पुरा भाषितमीश्वरेण तूष्णीमभूद् ध्यानपरो गणेन्द्रः।।७१।।**

**भावार्थ** : **उपदेशोपसंहारवर्णन**— गणेश्वर रेणुकाचार्य ईश्वर अर्थात् शिवद्वारा सर्वप्रथम देवी पार्वतीलाई उपदिष्ट अद्वैतानन्दप्रकाशित गर्ने परमप्रबोध (उत्तमज्ञान) को यस प्रकार उपदेश गरेर ध्यानस्थ अर्थात् मौन हुनुभयो ।।७१।।

**एवमुक्त्वा समासीनं शिवयोगपरायणम्।**
**रेणुकं तं समालोक्य बभाषे प्राञ्जलिर्मुनिः।।७२।।**

**भावार्थ** : यति भनेर आसनमा मौनरूपले विराजमान रेणुकाचार्यलाई प्रणतिपूर्वक अगस्त्यमुनिले भन्नुभयो - ।।७२।।

**शिवयोगविशेषज्ञ शिवज्ञानमहोदधे।**
**समस्तवेदशास्त्रादिव्यवहारधुरन्धर ।।७३।।**

**आलोकमात्रनिर्धूतसर्वसंसारबन्धनः ।**
**स्वच्छन्दचरितोल्लास स्वप्रकाशात्मवच्छिव।।७४।।**

**अवतीर्णमिदं शास्त्रमनवद्यं त्वदाननात्।**
**श्रुत्वा मे मोदते चित्तं ज्योतिः पश्ये शिवाभिधम्।।७५।।**

**भावार्थ** : हे शिवयोगका विशेषज्ञ! हे शिवज्ञानका महासागर! हे! समस्त वेदशास्त्र आदि व्यवहारका धुरन्धर हे! समस्तसंसाररूपी बन्धनलाई अवलोकन मात्रले अपवारित गर्नमा अर्थात् हटाउनमा समर्थ! हे! स्वच्छन्द चरित्रले उल्लासयुक्त! हे स्वप्रकाश शिव! तपाँईका मुखारविन्दबाट निःसृत यस निर्मलशास्त्रको श्रवण गरेर मेरो चित्त परमानन्दले पूर्ण भयो । फलतः म शिवनामक ज्योतिको साक्षात्कार गरीरहेको छु ।।७३-७५।।

**अद्य मे सफलं जन्म गतो मे चित्तविभ्रमः।**
**सञ्जाता पाशविच्छित्तस्तपांसि फलितानि च।।७६।।**



**भावार्थ** : आज मेरो जन्म सफल भयो । मेरो मनको सन्देह पनि समाप्त भयो । माया मोहको पाश अर्थात् बन्धन काटियो तथा मेरो तपस्या फलीभूत भयो ।।७६।।

**इदानीमेव मे जातं मुनिराजोत्तमोत्तमम्।**
**इतः परं मया नास्ति सदृशो भुवनत्रये।।७७।।**

**भावार्थ** : यसै समयमा ममा मुनिश्रेष्ठता उत्पन्न भयो । यस पछि तीनै भुवनमा मेरा समान कोई छैन ।।७७।।

**शास्त्रं तव मुखोद्गीर्णं शिवाद्वैतपरम्परम्।**
**मां विना कस्य लोकेषु श्रोतुमस्ति तपः शुभम्।।७८।।**

**तपसां परिपाकेन शङ्करस्य प्रसादतः।**
**आगतस्त्वं महाभाग मां कुतार्थयितुं गिरा ।।७९।।**

**भावार्थ** : हजूरका मुखारविन्दबाट निस्किएको शिवाद्वैतपरंपरा प्रदर्शक शुभशास्त्र सुन्नका लागि म देखि अतिरिक्त कसको तपस्या हुन सक्छ? हे महाभाग! मेरो तपस्याका परिपाकले प्रसन्न भएका शङ्करका कृपाले नै आफ्नु पवित्रवाणीद्वारा मलाई कृत कृत्य गर्नका लागि तपाँई अवतीर्ण हुनभएको हो ।।७८-७९।।

**इति स्तुवन्तं विनयादगस्त्यं मुनिपुङ्गवम्।।८०।।**
**आलोक्य करुणादृष्ट्या बभाषे स गणेश्वरः।।८०।।**

**भावार्थ** : यसरी विनयपूर्वक स्तुतिगर्दै गरेका अगस्त्य मुनिलाई कृपापूर्णदृष्टिले हेर्दै गणेश्वर रेणुकाचार्यले भन्नु भयो ।।८०।।

**अगस्त्य मुनिशार्दूल तपःसिद्धमनोरथ।।८१।।**
**त्वां विना शिवशास्त्रस्य कः श्रोतुमधिकारवान्।।८१।।**

**भावार्थ** : हे तपस्याद्वारा सिद्ध मनोरथ (इच्छापूर्ण गर्ने) मुनिश्रेष्ठ अगस्त्यजी! तपाईलाई छोडेर यस शिवशास्त्रलाई सुन्ने अधिकारी को हुन सक्छ? अर्थात् हुन सक्दैन ।।८१।।

CC-0. Jangamwadi Math Digital Collection.

**पात्रं शिवप्रसादस्य भवानेको न चापरः।**
**इति निश्चित्य कथितं मया ते तन्त्रमीदृशम्।।८२।।**

**भावार्थ** : शिवको कृपाका एकमात्र पात्र तपाँई हुनुहुन्छ, अर्को कुनै छैन यस्तो निश्चय गरेर मैले यस तन्त्रको तिमीलाई उपदेश गरे ।।८२।।

**स्थाप्यतां सर्वलोकेषु तन्त्रमेतत् त्वया मुने।**
**ईदृशं शिवबोधस्य साधनं नास्ति कुत्रचित्।।८३।।**

**भावार्थ** : हे अगस्त्य मुनि जी! तपाँई यस तन्त्रको समस्त संसारका सबै जनहरूमा प्रचार-प्रसार र स्थापना गर्नुहोस् । शिवज्ञानको यस्तो उत्तम साधन अरु काँही छैन ।।८३।।

**रहस्यमेतत् सर्वज्ञः सर्वानुग्राहकः शिवः।**
**अवादीत् सर्वलोकानां सिद्धये पार्वतीपतिः।।८४।।**

**भावार्थ** : सर्वज्ञ सर्वानुग्रहकर्ता पार्वतीपति शिवले सबैका सिद्धिका लागि यो रहस्य अर्थात् तन्त्रोपनिषद् बताउनुभयो ।।८४।।

**तदिदं शिवसिद्धान्तसाराणामुत्तमोत्तमम्।**
**वेदवेदान्तसर्वस्वं विद्याचारप्रवर्तकम्।।८५।।**

**वीरमाहेश्वरग्राह्यं शिवाद्वैतप्रकाशकम्।**
**परीक्षितेभ्यो दातव्यं शिष्येभ्यो नान्यथा क्वचित्।।८६।।**

**भावार्थ** : अट्ठाईस शैवागमहरूका तत्त्वमा उत्तम, वेद र वेदान्तको सर्वस्व विद्याचारको प्रवर्तक वीरमाहेश्वरद्वारा स्वीकार्य शिवाद्वैतको प्रकाशक यो शास्त्र परीक्षित शिष्यलाई मात्र दिनुपर्छ । परीक्षण विना कसैलाई पनि यो विद्या बतलाउँनु हुँदैन ।।८५-८६।।

**एतच्छ्रवणमात्रेण सर्वेषां पापसंक्षयः।**
**अवतीर्णं मया भूमौ शास्त्रस्यास्य प्रवृत्तये।।**
**प्रवर्तय शिवाद्वैतं त्वमपि ज्ञानमीदृशम्।।८७।।**



**भावार्थ** : केवल यस विद्यालाई सुन्नाले सबैको पाप नष्ट हुन जान्छ । यस शास्त्रको विस्तारका लागि नै मैले पृथिवीमा अवतार ग्रहण गरेको हूँ । हजूरले पनि यस शिवाद्वैत ज्ञानको प्रचार गर्नुहोस् ।।८७।।

***ॐ तत्सत् इति श्रीशिवगीतेषु सिद्धान्तागमेषु शिवाद्वैतविद्यायां शिवयोगशास्त्रे श्रीरेणुकागस्त्य संवादे वीरशैवधर्मनिर्णये श्रीशिवयोगिशिवाचार्यविरचिते श्रीसिद्धान्तशिखामणौ लिङ्गस्थलान्तर्गत ऐक्यस्थले स्वीकृतप्रसादिस्थलादि-नवविधस्थलप्रसङ्गो नाम विंशतितमः परिच्छेदः।***

**यस प्रकार श्रीसिद्धान्तशिखामणिको लिङ्गस्थलान्तर्गत ऐक्यस्थले स्वीकृतप्रसादिस्थलादि-नवविधलिङ्गप्रसङ्ग नामक विसौं परिच्छेदको आचार्य हरिप्रसादअधिकारी कृत सुबोधिनी नामक नेपाली व्याख्या पूर्णभयो ।**

**।। विंशपरिच्छेद पूर्ण भयो ।।**

 OOO

CC-0. Jangamwadi Math Digital Collection.

# एकविंश परिच्छेद

## विभीषणाभीष्टदान

**इत्युक्त्वा पश्यतस्तस्य पुरस्तादेव रेणुकः।**
**अन्तर्दधे महादेवं चिन्तयन्नन्तरात्मना।।१।।**

**भावार्थ** : विभीषणलाई अभीष्टदान— यति भनेर रेणुकगणेश्वर अन्तरात्मामा महादेवको ध्यान गर्दै अगस्त्यमुनिका सामुन्नेमा नै अन्तर्हित अर्थात् अदृश्य हुनभयो ।।१।।

**य इदं शिवसिद्धान्तं वीरशैवमतं परम्।**
**शृणोति शुद्धमनसा स याति परमां गतिम्।।२।।**

**भावार्थ** : जसले वीरशैव मतसम्मत शिवसिद्धान्तलाई शुद्धमनले सुन्दछ त्यो परमगतिमा प्राप्त हुन्छ ।।२।।

**स्वच्छन्दाचाररसिकः स्वेच्छानिर्मितविग्रहः।**
**आससाद पुरीं लङ्कां रेणुको गणनाथकः।।३।।**

**भावार्थ** : स्वच्छन्द आचरणमा आनन्दको अनुभव गर्ने तथा आफ्नु इच्छानुसार शरीर धारण गर्ने गणेश्वर रेणुक अन्तर्हित (अदृश्य) भए पछि लङ्कामा पुग्नु भयो ।।३।।

**समागतं महाभागं सर्वागमविशारदम्।**
**विभीषणः समालोक्य गेहं प्रवेशयन्निजम्।।४।।**

**भावार्थ** : कामिकागम देखि वातुलागम पर्यन्त समस्त दिव्य आगमहरूमा विशारद ती रेणुकाचार्य महाभागलाई आउँदैगरेको देखेर विभीषणले आदरपूर्वक उनलाई आफ्नु निवासस्थानमा प्रवेश गराये ।।४।।



**भद्रासने निजे रम्ये निवेश्य गणनायकम्।**
**अर्घ्यपाद्यादिभिः सर्वैरुपचारैरपूजयत्।।५।।**

**भावार्थ** : आफ्नै रमणीय सिंहासनमा गणेश्वरलाई बसाएर विभीषणले पाद्य, अर्घ्य, आदि सबै उपचार सहित उनको पूजन गरे ।।५।।

**पूजितेन प्रसन्नेन रेणुकेन निरूपितः।**
**निषसाद तदभ्याशे स निजासनमाश्रितः।।६।।**

**भावार्थ** : पूजाद्वारा प्रसन्न रेणुकाचार्यको आज्ञा प्राप्त गरेर विभीषण उनका छेउमा रहेका आफ्ना आसनमा बसे ।।६।।

**आबभाषे गणेन्दं तं कृताञ्जलिर्विभीषणः।**
**मानुषाकारसम्पन्नं साक्षाच्छिवमिवापरम्।।७।।**

**भावार्थ** : यस पछि मनुष्यको आकारधारण गरेका साक्षात् द्वितीय शिव समान ती गणेश्वरका सामु विभीषणले अत्यन्त नम्रतापूर्वक निवेदन गरे ।।७।।

**रेणुक त्वां गणाधीश शिवज्ञानपरायण।**
**अवतीर्णं महीमेनामिति सम्यक् श्रुतं मया।।८।।**

**भावार्थ** : हे शिवज्ञानपरायण गणेश्वर रेणुक! हजूरले यस धराधाममा अवतार लिनु भएको छ भन्ने कुरा मैले सुनेको छु ।।८।।

**मद्भाग्यगौरवादद्य समायास्त्वं पुरीमिमाम्।**
**कथं भाग्यविहीनानां सुलभाः स्युर्भवादृशाः।।९।।**

**भावार्थ** : मेरा अहोभाग्यले आज तपाँई यस लङ्कानगरीमा पाल्नुभया। भाग्यहीन जनले हजूरको दर्शन कसरी पाउन सक्छन् ? ।।९।।

**मत्समो नास्ति लोकेषु भाग्यातिशयवत्तया।**
**यस्य गेहं स्वयं प्राप्तो भवान् साक्षान्महेश्वरः।।१०।।**

**भावार्थ** : यस संसारमा म जस्तो अतिशय भाग्यशाली अर्को कुनै छैन। किनकि आज मेरा घरमा साक्षात् महेश्वरस्वरूप तपाई विराजमान हुनुहुन्छ ।।१०।।

CC-0. Jangamwadi Math Digital Collection.

**कृतार्था मे पुरी ह्येषा कृतार्थो राक्षसान्वयः।**
**जीवितं च कृतार्थं मे यस्य त्वं दृष्टिगोचरः।।११।।**

**भावार्थ** : हजूरका दर्शनले आज मेरो लङ्का पुरी, राक्षस कुल र मेरो जीवन पनि कृतकृत्य अर्थात् कृतार्थ भयो ॥११॥

**इति ब्रुवाणं कल्याणं राक्षसेन्द्रं गणेश्वरः।**
**बभाषे सस्मितो वाणीं विश्वोल्लासकरीं शुभाम्।।१२।।**

**भावार्थ** : यस्तो कल्याणयुक्त वचन बोल्ने राक्षसेन्द्र (विभीषण) सँग मन्दहास्यको साथमा विश्वोल्लास कारिणी शुभवाणीमा गणेश्वरले आज्ञा गर्नु भयो ॥१२॥

**विभीषण महाभाग जाने त्वां धर्मकोविदम्।**
**त्वां विना कस्य लोकेषु जायते भक्तिरीदृशी।।१३।।**

**भावार्थ** : हे महाभाग! विभीषण! तपाँईलाई म धर्मज्ञाताका रूपमा जान्दछु। यस लोकमा तपाँई देखि अतिरिक्त अरु कुनमा यस प्रकारको भक्ति हुन सक्छ? ॥१३॥

**समस्तशास्त्रसारज्ञं सर्वधर्मपरायणम्।**
**अध्यात्मविद्यानिरतमाहुस्त्वां राक्षसेश्वर।।१४।।**

**भावार्थ** : हे राक्षसेश्वर! विद्वान्हरू तपाँईलाई सबै शास्त्रको रहस्य जान्ने सर्वधर्मपरायण तथा अध्यात्म विद्यामा निरत मान्दछन् ॥१४॥

**त्वदीयधर्मसम्पत्तिं श्रुत्वाहं विस्मिताशयः।**
**व्रजन् कैलासमचलं त्वदन्तिकमुपागतः।।१५।।**

**भावार्थ** : तपाँइको धर्माचरणको प्रवृत्तिलाई सुनेर विस्मित भएर म कैलासतिर जाँदा जाँदै तपाँईका पासमा आई पुगें ॥१५॥

**प्रीतोऽस्मि तव चारित्रैः शोभनैर्लोकविश्रुतैः।**
**दास्यामि ते वरं साक्षात् प्रार्थयस्व यथेप्सितम्।।१६।।**



**भावार्थ** : म तपाँईका लोकविश्रुत चरित्रहरूले प्रसन्न छु । म तपाँईलाई साक्षात् वरदान दिन चाहन्छु । यथेप्सित वर माग्नुहोस् ॥१६॥

**इति प्रसादसुमुखे भाषमाणे गणेश्वरे।**
**प्रणम्य परया प्रीत्या व्याजहार विभीषणः।।१७।।**

**भावार्थ** : प्रसन्नतायुक्त गणेश्वरबाट यति आज्ञा भए पछि विभीषण पनि परमप्रसन्नताका साथमा प्रणतिपूर्वक निवेदन गर्न लाग्नुभयो ॥१७॥

**आगमानुग्रहादेव भवतः शिवयोगिनः।**
**दुर्लभाः सर्वलोकानां समपद्यान्त सम्पदः।।१८।।**

**भावार्थ** : हजूर जस्ता शिवयोगीका आगमन रूपी कृपाले नै सबैलाई दुर्लभ सम्पत्तिहरूको उपलब्धि हुन्छ ॥१८॥

**तथापि प्रार्थनीयं मे किञ्चिदस्ति गणेश्वर।**
**सुकृते परिपक्वे हि स्वयं सिद्ध्यति वाञ्छितम्।।१९।।**

**भावार्थ** : तर पनि हे गणेश्वर! मेरो केही प्रार्थना छ । पुण्य परिपक्व भए पछि अभीष्टको सिद्धि स्वतः भैहाल्छ ॥१९॥

**रावणो हि मम भ्राता माहेश्वरशिखामणिः।**
**अदृष्टशत्रुसम्बाधं शशास हि जगत्त्रयम्।।२०।।**

**भावार्थ** : मेरा दाज्यु रावण जो शिवभक्तहरूमा शिखामणि समान श्रेष्ठ थिये तथा जो सँग शत्रुरूपी बाधा थियेन, वहाँको तीनै लोकमा शासन थियो ॥२०॥

**यस्य प्रतापमतुलं सोढुमक्षमशक्तयः।**
**इन्द्रादयः सुराः सर्वे राज्यलक्ष्म्या वियोजिताः।।२१।।**

**भावार्थ** : जसको अतुलप्रतापलाई सहन गर्नमा असमर्थ इन्द्र आदि समस्त गणहरू पनि राज्यलक्ष्मीले रहित भये ॥२१॥

**स तु कालवशेनैव स्वचरित्रविपर्ययात्।**
**रणे विष्ण्वतारेण रामेण निहतोऽभवत्।।२२।।**

CC-0. Jangamwadi Math Digital Collection.

**भावार्थ** : ती अत्यन्त पराक्रमी रावण पनि काल प्रभाववश आफ्नु विपरीत चरित्रका कारणले विष्णुका अवतार श्रीरामचन्द्रजी द्वारा मारिये ॥२२॥

**स तु रामशराविद्धः कण्ठस्खलितजीवितः।**
**अवशिष्टं समालोक्य मामवादीत् सुदुःखितः।।२३।।**

**भावार्थ** : रामका बाणहरूले पूर्णतया बिद्ध (छेडिएका) र कण्ठगणप्राण ती रावणले रावणवंशका एकमात्र अवशिष्ट मलाई देखेर दुःखी हुँदै भने- ॥२३॥

**विभीषण विशेषज्ञ महाबुद्धे सुधार्मिक।**
**अवशिष्टोऽसि वंशस्य रक्षसां भाग्यगौरवात् ।।२४।।**

**भावार्थ** : हे धर्माचरणशील! महाबुद्धिमान् विशेषज्ञ अर्थात् विशिष्टज्ञानयुक्त विभीषण! राक्षसहरूका महाभागले आज तिमी एकमात्र राक्षसवंशमा अवशिष्ट (बँचेका) छौ ॥२४॥

**वयमज्ञानसम्पन्ना महत्सु द्रोहकारिणः।**
**ईदृशीं तु गतिं प्राप्ता दुस्तरा हि विधिस्थितिः।।२५।।**

**भावार्थ** : महान् जनहरूको विरोध गर्ने अज्ञानी म आज यसप्रकारको गतिमा प्राप्त भयें भाग्यको स्थिति अनुल्लंघनीय (उल्लंघन गर्न न सकिने) हुँदो रहेछ ॥२५॥

**नवकं लिङ्गकोटीनां प्रतिष्ठाप्यमिह स्थले।**
**इति सङ्कल्पितं पूर्वं मया तदवशिष्यते।।२६।।**

**भावार्थ** : यस लङ्का नगरीमा नौ करोड शिवलिङ्गको स्थापना गर्ने संकल्प मैले गरेको थियें, त्यसमा केही काम बाँकी छ ॥२६॥

**कोटिषट्कं तु लिङ्गानां मया साधु प्रतिष्ठितम्।**
**कोटित्रयं तु लिङ्गानां स्थापनीयमतस्त्वया।।२७।।**

**भावार्थ** : मैले ६करोड़ शिवलिङ्गको राम्रो सँग प्रतिष्ठा गरें। बँचेका तीन करोड शिवलिङ्गको स्थापना तिमीले गर्नु छ ॥२७॥



**इति तस्य वचः श्रुत्वा दीनबुद्धेर्मरिष्यतः।**
**तथा साधु करोमीति प्रतिज्ञातं मया तथा।।२८।।**

**भावार्थ** : दीनबुद्धि तथा मरणासन्न (मर्नलागेको) रावणको वचन सुनेर ''मँ हजूरका आज्ञाको पालन अवश्य गर्नेछु, भनेर मैले प्रतिज्ञा गरें'' ॥२८॥

**युगपच्छिवलिङ्गानां कोटित्रयमनुत्तमम्।**
**प्रतिष्ठाप्यं यथाशास्त्रमिति मे निश्चयोऽभवत्।।२९।।**

**भावार्थ** : तत् पश्चात् उत्तमोत्तम तीन करोड शिवलिङ्गहरूको शास्त्रविधान अनुसार स्थापना गर्ने मैले निश्चय गरें ॥२९॥

**लिङ्गकोटित्रयस्येह युगपत् स्थापनाविधौ।**
**अविदन्नेकमाचार्यमहमेवमवस्थितः ।।३०।।**

**भावार्थ** : तीन करोड शिवलिङ्गको स्थापना गर्नमा समर्थ आचार्य न भेटाउनाले म उक्त कार्य सम्पन्न न गराई बसेको छु ॥३०॥

**शिवशास्त्रविशेषज्ञ शिवज्ञाननिधिर्भवान्।**
**आचार्यभावमासाद्य मम पूरय वाञ्छितम्।।३१।।**

**भावार्थ** : तपाँई शैवशास्त्रका विशेषज्ञ तथा शिवज्ञानका निधि हुनुहुन्छ। तीन करोड शिवलिङ्ग स्थापना गर्ने कार्यमा आचार्यत्व स्वीकारेर मेरो अभिलाषा पूर्ण गर्नुहोस् ॥३१॥

**तस्येति वचनं श्रुत्वा राक्षसेन्द्रस्य धीमतः।**
**तथेति प्रतिशुश्राव सर्वज्ञो गणनायकः।।३२।।**

**भावार्थ** : बुद्धिमान् राक्षसेन्द्र विभीषणको यस प्रकारको वचन सुनेर सर्वज्ञगणेश्वरले 'ठीक छ' भनेर स्वीकारोक्ति प्रकट गर्नु भयो ॥३२॥

**ततः सन्तुष्टचित्तस्य पौलस्त्यस्येष्टसिद्धये।**
**कोटित्रयं तु लिङ्गानां यथाशास्त्रं यथाविधि।।**
**त्रिकोट्याचार्यरूपेण स्थापितं तेन तत्क्षणे।।३३।।**

CC-0. Jangamwadi Math Digital Collection.

**भावार्थ** : सन्तुष्टचित्त विभीषणको इष्टसिद्धिका लागि त्रिकोटि आचार्यका रूपमा रेणुकले तीनकरोड शिवलिङ्गहरूको शास्त्रीय विधिविधान अनुसार तत्काल स्थापना गरिदिनु भयो ।।३३।।

**तादृशं तस्य माहात्म्यं समालोक्य विभीषणः।।३४।।**
**प्रणनाम मुहुर्भक्त्या पादयोस्तस्य विस्मितः।।३४।।**

**भावार्थ** : विभीषण ती रेणुकाचार्यको यस्तो अलौकिक महिमा देखेर आश्चर्य चकित हुनु भयो तथा भक्तिपूर्वक बारंबार उनका चरणमा प्रणाम गर्न लाग्नु भयो ।।३४।।

**प्रणतं विनयोपेतं प्रहृष्टं राक्षसेश्वरम्।।३५।।**
**अनुगृह्य स्वमाहात्म्याद् रेणुकोऽन्तर्हितोऽभवत्।।३५।।**

**भावार्थ** : विनयले युक्त प्रसन्न तथा प्रणामनिरत राक्षसेन्द्रमाथि अनुग्रह गरेर श्रीरेणुकाचार्यजी आफ्नुमहिमाले अन्तर्ध्यान (लुप्त) हुनुभयो ।।३५।।

**विभीषणोऽपि हृष्टात्मा रेणुकस्य प्रसादतः।**
**शिवभक्तिरसासक्तः स्थिरराज्यमपालयत्।।३६।।**

**भावार्थ** : श्रीरेणुकाचार्यको कृपा प्राप्त गरी विभीषण पनि प्रसन्नचित्त तथा शिवभक्ति रसले आप्लावित भएर स्थिरराज्यको रक्षामा संलग्न भये ।।३६।।

**रेणुकोऽपि महातेजाः सञ्चरन् क्षितिमण्डले।**
**प्रच्छन्नश्च प्रकाशश्च परमाद्वैतभावितः।।३७।।**

**कांश्चिद् दृष्टिनिपातेन करुणारसवर्षिणा।**
**अपरानुपदेशेन शिवाद्वैताभिमर्शिना।।३८।।**

**अन्यांश्च सहवासेन समस्तमलहारिणा।**
**कृतार्थयन् जनान् सर्वान् कृतिनः पक्वकर्मिणः।।३९।।**

**दर्शयित्वानिजाधिक्यं शिवदर्शनलालसः।**
**खण्डयित्वा दुराचारान् पाषण्डान् भिन्नदर्शनान्।।४०।।**



**यन्त्रमन्त्रकलासिद्धान् विमतान् सिद्धमण्डलान्।**
**विजित्य स्वप्रभावेण स्थापयित्वा शिवागमान्।।**
**आजगाम निजावासं कोल्लिपाक्यभिधं पुरम्।।४१।।**

**भावार्थ** : महातेजस्वी रेणुकाचार्य पनि पृथ्वी मण्डलमा सञ्चरण गर्दै कहिले प्रकट, कहिले तिरोहित, कहिले परमाद्वैतभावले युक्त भएर करुणापूर्णदृष्टिले अनुग्रह गर्दै, कुनैलाई शिवाद्वैत विषयक उपदेश गर्दै, कुनैलाई समस्तमलहरण गर्ने सहवासद्वारा कृतकृत्य गर्दै, पक्वकर्ममलाशय सुकृती जनहरूलाई आफ्नु महिमाको दर्शन गराएर कृतार्थ गराउँदै, भिन्न दर्शन हुने पाखण्डी एवं दुराचारिहरूको खण्डन गरेर, यन्त्र-मन्त्र कलामा सिद्ध विरोधीहरूलाई पनि आफ्ना प्रभावले वशमा गरेर अर्थात् जीतेर शैवागमको स्थापना गरेर शिवदर्शनको इच्छाले आफ्नु निवास कोल्लिपाक्य नामक नगरमा आउनु भयो ।।३७-४१।।

**तत्र सम्भावितः सर्वैर्जनैः शिवपरायणैः।**
**सोमनाथाभिधानस्य शिवस्य प्राप मन्दिरम्।।४२।।**

**भावार्थ** : त्यहाँ शिव परायण समस्त भक्तहरुद्वारा सम्मानित भएर रेणुकाचार्य सोमनाथनामक शिवमन्दिरमा जानु भयो ।।४२।।

**पश्यतां तत्र सर्वेषां भक्तानां शिवयोगिनाम्।**
**तन्वानो विस्मयं भावैस्तुष्टाव परमेश्वरम्।।४३।।**

**भावार्थ** : त्यस ठाउँमा द्रष्टा बनेर रहेका समस्त शिवयोगी भक्तहरूको आश्चर्यवृद्धिगर्दै श्रीरेणुकाचार्यले भावपूर्ण भएर भगवान् शिवको स्तुति गरे ।।४३।।

**देव देव जगन्नाथ जगत्कारणकारण।।४४।।**
**ब्रह्मविष्णुसुराधीशवन्द्यमानपदाम्बुज ।।४४।।**

**भावार्थ** : **रेणुकाचार्यद्वारा की गयी स्तुति**— रेणकाचार्यद्वारा गरिएको स्तुति - हे देवदेवव! जगन्नाथ, संसारका कारणभूत माया अथवा प्रकृति आदिका कारण ब्रह्मा विष्णु इन्द्र आदिद्वारा हजूरका चरणकमलको सधैं वन्दना गरिन्छ ।।४४।।

CC-0. Jangamwadi Math Digital Collection.

**संसारनाटकभ्रान्तिकलानिर्वहणप्रद ।**
**समस्तवेदवेदान्तपरिबोधितवैभव ।।४५।।**

**भावार्थ** : हजूर संसार नाटकरूपी भ्रमलाई निवारण गर्ने तथा समस्तवेदवेदान्तद्वारा पूर्णरूपेण बोधितवैभव (अर्थात् स्तुतिगरिएका) हुनुहुन्छ ।।४५।।

**संसारवैद्य सर्वज्ञ सर्वशक्तिनिरङ्कुश।**
**सच्चिदानन्द सर्वस्व परमाकाशविग्रह।।४६।।**

**भावार्थ** : हजूर संसाररूपी रोगका वैद्य, सर्वज्ञ, सर्वशक्ति, निरंकुश, सत् चित्, आनन्दस्वरूप, सर्वस्व तथा पराकाशरूपी शरीरले युक्त हुनुहुन्छ ।।४६।।

**समस्तजगदाधारज्योतिर्लिङ्गविजृम्भण ।**
**सदाशिवमुखानेकदिव्यमूर्तिकलाधर ।।४७।।**

**भावार्थ** : सम्पूर्ण संसारका आधार तथा ज्योतिर्लिङ्गका प्रकाशक अर्थात् समस्त जगत्का आधारभूत ज्योतिर्लिङ्गका प्रकाशक तथा सदाशिव प्रमुख अनेक मूर्तिहरूका कलाकार हुनुहुन्छ ।।४७।।

**गुणत्रयपदातीत मलत्रयविनाशन।**
**जगत्त्रयविलासात्मन् श्रुतित्रयविलोचन।।४८।।**

**भावार्थ** : साथै हजूर सत्त्व अदि तीन गुणका स्तरबाट माथि रहने, आणवादि तीनमलका विनाशक, त्रैलोक्यको रूपमा चलने सृष्टि आदि पञ्चकृत्यरूपी क्रीडाको आनन्द लिने ऋग्यजुसाम नाम तीन वेद रूपी त्रिनेत्रधारी हुनुहुन्छ ।।४८।।

**पाहि मां परमेशान पाहि मां पार्वतीपते।**
**त्वदाज्ञया मयैतावत्कालमात्रं महीतले।।**
**अचारि भवदुक्तानामागमानां प्रसिद्धये।।४९।।**

**भावार्थ** : हे परमेश्वर मेरो रक्षा गर्नुहोस् । हे पार्वतीपते! म माथि कृपा गर्नु होस् । हजूरका आज्ञाले मैले यति समय सम्म पृथ्वीमा हजूरद्वारा बताइएका आगमशास्त्रको प्रचार-प्रसारको लागि विचरण गरें ।।४९।।



**अतः परं स्वरूपं ते प्राप्तुकामोऽस्मि शङ्कर।।५०।।**
**अन्तरं देहि मे किञ्चिदनुकम्पाविशेषतः।।५०।।**

**भावार्थ** : हे शङ्कर! यस पछाडी म हजूरको स्वरूप प्राप्त गर्न चाहन्छु। विशेष कृपागरेर मलाई अलिकति अवकाश (अवसर) प्रदान गरि बक्सियोस् ।।५०।।

**इत्युक्ते गणनायकेन सहसा लिङ्गात् ततः शाङ्करात्**
**वत्सागच्छ महानुभाव भवतो भक्त्या प्रसन्नोऽस्म्यहम्।**
**इत्युच्चैरगदाद् वचस्तनुभृतामाश्चर्यमासीत्तदा**
**दिव्यो दुन्दुभिराननाद गगने पुष्पं ववर्षुर्गणाः।।५१।।**

**भावार्थ** : गणेश्वरद्वारा यति प्रार्थना गरिये पछि शिवलिङ्गबाट अकस्मात् उच्च स्वरमा वाणी प्रकट भयो — हे वत्स (बाबू) आऊ! हे महानुभाव! तिम्रा नवधा भक्तिबाट प्रसन्न छु । त्यस समयमा सबै मनुष्यहरू छक्क परे। आकाशमा देवताहरूले दुन्दुभि बजाये तथा पुष्पवृष्टि पनि गरे ।।५१।।

**श्रुत्वा लिङ्गाद् वचनमुदितं शाङ्करं सानुकम्पं**
**संहृष्टात्मा गणपतिरथो ज्योतिषा दीप्यमानः।**
**जातोत्कण्ठैः परमनुचरैर्योगिभिः स्तूयमानो**
**ज्योतिर्लिङ्गं परमनुविशत् स्वप्रकाशं तदानीम्।।५२।।**

**भावार्थ** : लिङ्गबाट निस्किएको अनुकम्पा युक्त शाङ्करवचनलाई सुनेर गणेश्वरको मन अत्यन्त प्रसन्न भयो । उनको शरीर पनि देदीप्यमान हुन थाल्यो । शङ्करका अनुचरभूत ती रेणुकाचार्य परमोत्कण्ठायुक्त भएर योगिहरूद्वारा स्तूयमान हुँदै परमस्वप्रकाश ज्योतिर्लिङ्गमा समाविष्ट भये ।।५२।।

**लीने तस्मिन् शाङ्करे स्वप्रकाशे**
**दिव्याकारे रेणुके सिद्धनाथे।**
**सर्वो लोको विस्मिताभूत्तदानीं**
**शैवी भक्तिः सप्रमाणा बभूव।।५३।।**

CC-0. Jangamwadi Math Digital Collection.

**भावार्थ** : दिव्याकारयुक्त सिद्धनाथ रेणुकाचार्य यसरी स्वप्रकाश शाङ्करलिङ्गमा विलीनभये पछि, त्यसकालमा त्यसस्थानमा उपस्थित सबै जनहरू परम चकित भये, सबैका सामु शैवीशक्ति प्रमाणित भयो ।।५३।।

**श्रीवेदागमवीरशैवसरणिं श्रीषट्स्थलोद्यन्मणिं**
**श्रीजीवेश्वरयोगपद्मतरणिं श्रीगोप्यचिन्तामणिम्।**
**श्रीसिद्धान्तशिखामणिं लिखयिता यस्तं लिखित्वा परान्**
**श्रुत्वा श्रावयिता स याति विमलां भुक्तिं च मुक्तिं पराम्।।५४।।**

**भावार्थ** : **फलश्रुति वर्णन**— श्री वेदागम वीरशैव सिद्धान्तको अनुसरण गर्ने मङ्गलकारी, छस्थानका देदीप्यमान मणिसमान जीव र ईश्वरको योग रूपी कमल फुलाउनमा सूर्य समान, गोप्य चिन्तामणि समान श्रीसिद्धान्तशिखामणि ग्रन्थलाई लेखनेवाला, लेखाउनेवाला अथवा लेखेर अर्कालाई सुनाउने वाला र स्वयं जसले सुन्ने गर्छ, त्यो अवश्यनै निर्मलभोग र मोक्षमा प्राप्त हुन्छ ।।५४।।

***ॐ तत्सत् इति श्रीशिवगीतेषु सिद्धान्तागमेषु शिवाद्वैतविद्यायां शिवयोगशास्त्रे श्रीरेणुकागस्त्य संवादे वीरशैवधर्मनिर्णये श्रीशिवयोगिशिवाचार्यविरचिते श्रीसिद्धान्तशिखामणौ विभीषणाभीष्टवरप्रदानप्रसङ्गो नाम एकविंशतितमः परिच्छेदः।***

**यस प्रकार श्रीसिद्धान्तशिखामणिको रेणुकाविभीषणसंवाद तथा रेणुकशिवलिङ्गैकयप्रसङ्ग नामक एक्काइसौंपरिच्छेदको आचार्य हरिप्रसादअधिकारी कृत 'सुबोधिनी' नेपाली व्याख्या पूर्ण भयो ।।**

## ।। श्रीसिद्धान्तशिखामणी ग्रंथ समाप्त ।।



CC-0. Jangamwadi Math Digital Collection.